कुल्को माफिक काम काज गरि सब् * रावण् पर्‍यो शोकमा ।
लागे मन्त्रिहरू बुझाउन भनी * देखिन्छ जो लोकमा ॥
पत्नी धन् सुत घर् जमिन् सब कुरा * थीर् छैन केही पनि ।
छोड्नू होस् अब शोक यो हजुरले * हुन् ई वियोगी भनी ॥७०
यस्तो जानि विचार् गरेर मनले * जे काम गर्दामहाँ ।
शत्रूलाइ जितिन्छ तेहि अहिले * गर्नूहवस् काम् यहाँ ॥
यो बात्ले मन क्यै बुझ्यो तर सबै * हिम्मत् हराईकन ।
मेरो जीत् अब हुन्न निश्चय भनी * ठानेर हार्‍यो मन ॥७१॥

## * इति सुलोचनाको कथा *

ले०—पं० छविकान्त उपाध्याय आचार्य ।

## * अहिरावणको कथा *

जाऊँ परूँ कि रघुनाथजिका शरण्मा ।
मारूँ कि झट्ट तिनलाइ गएर रण्मा ॥
गर्थ्यो विचार बसि रावण येहि घर्मा ।
संझेछ फेरि अहिरावणलाइ मन्मा ॥१॥
झट्पट् उठेर शिव-मन्दिर तर्फ लाग्यो ।
दर्शन् गरेर खुशि भै सब पीर भाग्यो ॥
जोडेर हात बसि फेरि जपेर मन्त्र ।
ध्यान् खुप् गर्‍यो अब हुनेछ भनी स्वतन्त्र ॥२॥
यो बात् जती छ सब रावणतर्फको भो ।
पातालवासि अहिरावण भन्छ मेरो ॥

चञ्चल् भयो किन हँ मन् म पिताजि काहाँ ।
जान्छू बुझेर झट आउँछु फेरि याहाँ ॥३॥
यस्तो विचार गरि ढोगिदि देविलाई ।
लङ्कापुरीतिर हिंड्यो अति हत्पताई ॥
बस्थ्यो जहाँ दशवदन् उहिं त्यो पुगेर ।
ढोगीदियो खुशि भई बहुतै नुहेर ॥४॥
देखेर पुत्रकन रावण हर्ष मानी ।
राख्यो जहाँ उ बसथ्यो उहिं हात तानी ॥
सोध्यो पिताजि सब छन् कि कुशल् कसो छ ।
यो बात सुनी दशवदन् अनि झट्ट भन्छ ॥५॥
काटेर नाक दुइ कान समेत वन्मा ।
आइन् फुपू रुँदइ तिम्रि यहाँ र मन्मा ॥
गर्दै थिएँ म खर दूषणलाई फेरि ।
मारे अनाहकमहाँ हुकुमै नटेरी ॥६॥
मारीच् सुबाहुहरुको पनि हाल् बतायौ ।
सीताजिको हरणलाइ पनी सुनायौ ॥
लङ्का जलाइकन त्यो हनुमान भाग्यो ।
सुन्दा सबै खबर राघव विघ्न जाग्यो ॥७॥
बाँधेर सागरमहाँ पुल राम आयौ ।
जो जो थिए बिर ठुला सबलाइ मार्‍यौ ॥
फेर् कुम्भकर्ण पहिले पछि मेघनाद ।
सारा मरे अब फगत् म छु एक जान ॥८॥

यस्तै छ हाल अब जो गरि हुन्छ छोरा।
कल्याण तेहि गर भट्ट भएँ म तोरा॥
यो बात् सुनेर अहिरावण भन्छ ऐले।
लैजान्छु लक्ष्मण र रामजिलाइ मैले॥९॥
लैजाउँला जब म रात हुनेछ दिन् भैँ।
दिन्छू लगेर बलिदान दुवै पशू भैँ॥
चल्नेछ कीर्ति कुलमा अनिखेरि मेरो।
येती भनी शिर नुहाइ तुरन्त गैगो॥१०॥
पौँच्यो जहाँ रघुपती दुइ भाइ सुत्थे।
वानरहरू वरिपरी सब घेरिरन्थे॥
उस्माथि फेरि हनुमान पुछर् घुमाई।
सुत्थे अगाडि दरवान भई रमाई॥११॥
लागेन केहि जब त्यो छल गर्न लाग्यो।
आफ्नू शरीरकन विभीषण भैँ बनायो॥
पौँच्यो सरासरि जसै रघुनाथ काहाँ।
हेरे टुलुक्क हनुमान उठेर ताहाँ॥१२॥
देखे जसै विर विभीषणलाइ सोधी।
फेरी सुते अघि भई गरि राम सेवी॥
आनन्द भो अनि मनैमनले रमाई।
गर्दो भयो नमसकार् पनि रामलाई॥१३॥
मोहित् भए सबइ मोहिनि मन्त्र छोड्यो।
श्रीराम लक्ष्मणजिलाइ लिएर दौड्यो॥

अकाश-मार्ग गरि त्यो जब जान लाग्यो।
सब् अन्धकारहरु भागि भयो उज्यालो ॥१४॥
देखेर रावण भयो खुशि विघ्न मन्मा।
पौंच्यो तुरुन्त अहिरावणचाहिं घर्मा॥
निद्रा खुल्यो र हनुमानजि रामलाई।
हेर्छन् त नाहिं रघुनायक दोइ भाइ ॥१५॥
हल्ला चल्यो सब उठे विरहेरु ताहाँ।
सारा भए मलिन जाउन फेरि काहाँ॥
भन्छन् कहाँ प्रभु सवारि भयो सुटुक्क।
हेर्नूहवोस रघुनाथ यहाँ टुलुक्क ॥१६॥
राक्षस् मरे सब अगाडि हजूर् बसेर।
पाये परम्पद सधैं हतियार् कसेर॥
सेवा गरेर जब आज नपाइ राम।
निस्कन्छ प्राण अब निश्चय भो विकाम ॥१७॥
पागल् समान भइ फौज विलाप गर्न।
लागे कुनै विरह भैकन ताहिं मर्न॥
यो देखि पीर् अति पर्‍यो हनुमानलाई।
संझे निरन्तर गरीकन रामलाई ॥१८॥
राती विभीषण सिवाय पसेन कोही।
थाहा भयेन छलि राक्षस हो कि तेही॥
यो बात् सुने जब विभीषणजी गुनेर।
भन्छन् अवश्य अहिरावण गो लिएर ॥१९॥

पातलमा घर छ त्यो बलियो छ साहौं ।
जो जान सक्छ झट जाउ जितेर चाँडै ॥
ल्याऊ तुरन्त रघुनाथजिलाइ ऐले ।
साहौ भये खुशि इ बात सुनी सबैले ॥२०॥
भन्छन् तहाँपछि बुढा विर जाम्बवन्त ।
हे वीर ! जाउ हनुमान तिमी तुरन्त ॥
सुग्रीवले अनि भने हनुमान जाऊ ।
श्रीराम लक्ष्मणजिलाइ तुरन्त ल्याऊ ॥२१॥
पैले पनी तिमि गएर सिताजि भेट्यौ ।
लक्ष्मणजिको पिर दबाइ आइ मेट्यौ ॥
तेस्तो कुरो अब पऱ्यो तिमि नै गएर ।
रामलाइ ल्याउ बहुतै चतुरो भएर ॥२२॥
यो बात् सुनेर हनुमानजि भन्न लागे ।
मैले लि आउँछु यहाँ कुनजी नभागे ॥
जो लड्न आउँछ उ सङ्ग लडाजि गर्नू ।
मार्नू कि शत्रुहरुलाइ कि आफु मर्नू ॥२३॥
गर्जेर मेघ झजि भै ति गये हिँडेर ।
यो बात् सुनेर कुनजी रुख्मनिमा पुगेर ॥
रामचन्द्रलाइ अहिरावणले लगेर ।
दुर्गाजिलाइ बलि दिन्छ खुशी भयेर ॥२४॥
त्यै ल्याइदिन्छु तिमिलाइ म भोलि मासु ।
धन्दा नमान तिमिले नगिराउ आँसु ॥

यो गिद्धको वचन गर्भिणि गिद्धिनीले ।
सुन्दा बिछट्ट खुशि भै बसि धैर्य मन्ले ॥२५॥
रामचन्द्रको चरण संझि पुगे ति वाहाँ ।
पाताल-भित्र अहिरावण बस्छ जाहाँ ॥
लागे ति पस्न जब बानर एक आयो ।
हप्काइ रोकि इ कुरा अनि भन्न लाग्यो ॥२६॥
उल्लू मलाइ नसुध्याइ गएर भित्र ।
के गर्दछस् तँ म त हूँ हनुमान-पुत्र ॥
मर्छन् किराहरू परीकन बत्तिमाहाँ ।
त्यस्तै तँ मर्न किन आइज उल्लु याहाँ ॥२७॥
मेरो पिताजि हुनुभो रघुनाथ-भक्त ।
मेरो छ नाउँ मकरध्वज स्वामि-भक्त ॥
आडर् नपाइकन काल समेत याहाँ ।
सक्तैन पस्न किन आइस जान काहाँ ॥२८॥
यो बात् सुनेर हनुमानजि भन्न थाले ।
छोरो भये तँ अहिरावणको त पाले ॥
लौ लौ बता भनि कसोगरि भन्दथें म ।
छोरो म हूँ भनि कसोगरि भन्दछस् तँ ॥२९॥
लाग्दैन लाज कि तँलाइ बता तँ मेरो ।
छोरो कसोगरि भइस् सब सुन्छु तेरो ॥
उत्पत्ति यो जब भने अनिखेर त्यस्ले ।
लाग्यो बताउन सबै समझेर मन्ले ॥३०॥

लंका जलाइकन सिन्धु समीप जाँदा । वसन्ततिलका
केही खसेछ पसिना झटपट्ट खाँदा ॥
माछी भईछ अनि गर्भिणि तेसबाट ।
पैदा भएँ म अनि सत्य भने इ बात ॥३१॥
भन्छन् सुनेर इ कुरा हनुमान ताहाँ ।
भाई समेत रघुनाथजिलाइ याहाँ ॥
चोरेर ल्याइ अहिरावणले निशामा ।
के गर्छ आज भन पुत्र मलाइ याहाँ ॥३२॥
अर्थोक केहि पनि छैन मलाइ थाहा ।
पूजा छ भित्र अहिरावण होममाहाँ ॥
बस्छन् उहीं भगवती पनि छन् उनैमा ।
दिन्छन् बली इ रघुनाथ्हरुलाइ ताहाँ ॥३३॥
थाहा भयेजति कुरा सब ई बताएँ ।
ढोरै रहेछु म सरासर जान पाएँ ॥
भनठान्नु हुन्छ कि पिताजि म भित्र जान ।
ईश्वर् खडा हुन गये पनि दिन्नँ जान ॥३४॥
यो बात् सुनेर पनि क्यै नसुने झनी भै ।
आँटे ति पस्न अनिखेर उ चाहिं झट् गै ॥
पक्र्यो जसै रिस उठ्यो हनुमानलाई ।
लागे ति गर्न अनिखेर तहाँ लडाईं ॥३५॥
त्यस्को थियो पुछर लाम्रु समाति चाँडो ।
बाँधीदिए शरिरलाइ गराइ ठाडो ॥

ढोकामहाँ अनि गये हनुमान भित्र ।
सानू शरीर धरि मानि अती विचित्र ॥३६॥
देवी थिइन् हवन मण्डप-भित्र ताहाँ ।
जानै कठिन् अति थियो जुन ठाउँमाहाँ ॥
संयोग मालिनि गई फुल लेर ताहाँ ।
फुल्को किरो भइ पसे हनुमान ताहाँ ॥३७॥
गर्दा भये जब प्रणाम ति देवि ताहाँ ।
गड्दी भइन् पृथिविमा उहि ठउँमाहाँ ॥
मुख् बाइ लामु हनुमान बसे गएर ।
हेर्थे सबै नगिच गै अति खुश् भयेर ॥३८॥
गर्थें कुरा भगवती खुशि मानि आज ।
साक्षात् प्रकट् हुनुभयो सब कामकाज ॥
हुन्छन् असल् भनि पुजा भन गर्न लागे ।
नवेद्यहेरु हनुमानजि खान थाले ॥३९॥
काम् भै सक्यो हवनको जब रामलाई ।
लक्ष्मण्जिलाइ पनि मण्डपभित्र ल्याई ॥
बेला भयो बलि दिने जब रामलाई ।
भन्छन् निशाचरहरू सब सामु जाई ॥४०॥
हे राम, छैन अब बाँच्नु त धेर बेर ।
जस्लाइ संझि जय हुन्छ उ संझिहेर ॥
यो बात् सुनेर रघुनाथजि भाइलाई ।
हेर्थे ति लक्ष्मण पनी रघुनाथलाई ॥४१॥

स्वप्ना समान भइयो रघुनाथलाई ।
यो भन्नु हुन्छ मनमा नरदेह पाई ॥
जो हुन्छ होस विधिको छ सबै अधीन्मा ।
संझन्छु भक्त हनुमानजिलाइ मन्मा ॥४२॥
राक्षस् खड़ा जब भये तरवार् लियेर ।
गर्जे महाविर पनी अति स्वर् गरेर ॥
त्यो शब्दले सबइ राक्षस खुप् डराए ।
आफुस्महाँ अनि कुरा पनि गर्न लागे ॥४३॥
राम्चन्द्रलाइ अहिरावणले छलेर ।
ल्याये यहाँ असल काम गरौं भनेर ॥
उल्टा भयो अब हुँदैन यहाँ बढीया ।
देखिन्छ मूर्ति पनि शत्रु भन्नी घटीया ॥४४॥
त्यो बात् सुनेर हनुमानजि फेरि गर्जे ।
हाँसे पनी सबइ राक्षसहेरु तर्से ॥
पारे प्रकट् स्वरुप आफ्नु छिटो उठेर ।
खोसे सबै ति तरवार् पनि सब् कुटेर ॥४५॥
नाक् कान हातहरु काटिदिए कसैको ।
काटे पयर् शिर खसालिदिए कसैको ॥
होमीदिए सबइ अग्निमहाँ लगेर ।
त्यो देखि भट्ट अहिरावण गो बढेर ॥४६॥
यो भन्छ हे अबुझ वानर व्यर्थ ऐले ।
निर्दोष राक्षसहरुकन मारि तैंले ॥

गर्छस् घमण्ड अहिरावण हुँ म ऐले ।
मार्छू तँलाइ तरवार घसेर पैले ॥४७॥
दिन्छू बली इ दुइ भाइ लगेर फेरि ।
येती भनेर तरवार लिई नटेरी ॥
हान्यो जसै ति हनुमानजिलाइ लाग्यो ।
पत्थर्‌महाँ फुल खसे झजि भो र जाग्यो ॥४८॥
तर्‌वार फेरि हनुमानजिले चलाए ।
शिर् काटि झट्ट अहिरावणको गिराए ॥
पूर्णाहुती सरि गरी शिरलाइ होमे ।
राम्‌चन्द्र लक्ष्मणजिलाइ लियेर दौड़े ॥४९॥
राजा बनाइ मकरध्वजलाइ ताहाँ ।
शिक्षा दिए अनि उडेर गएर वाहाँ ॥
लंकामहाँ जब पुगे रघुनाथलाई ।
देखेर जो खुशि भये उ यहाँ बताई ॥५०॥
शक्तैन कोहि पनि सुग्रिव जाम्बवन्त ।
अङ्गद् इ आदि विरहेरु गए तुरन्त ॥
सब्‌लाइ प्रेम गरि श्रीरघुनाथबाट ।
स्वागत् भयो अति मिठोसित बोलि बात ॥५१॥
भन्नू भयो अनि महाविरलाइ ताहाँ ।
तिम्रो छ कीर्ति जुन यो तिनलोकमाहाँ ॥
चल्नेछ हामि हनुमान् नभए अवश्य ।
मर्थ्यौं बचाइ दुइ भाइ गर्‍यौ तपस्य ॥५२॥

यो बात भो रघुपती तिर झट्ट फेरि ।
वानर् गएर अहिरावणलाइ मारी ॥
रामचन्द्र लक्ष्मणजिलाइ लिएर फर्क्यो ।
यो बात् सुनेर अनि रावण विघ्न तर्स्यो ॥५३॥
मूर्छा पर्‍यो जब खुल्यो अनि बाबु भन्दै ।
रोयो बिछट्ट मनमा बहुला झरी भै ॥
मन्दोदरी पनि बुझाउनलाइ गैथिन् ।
मानेन एक् छिन बसेर फरक्क फर्किन् ॥५४॥

* इति अहिरावण कथा *

लेo—पंo श्रीनारायण प्रसाद शास्त्री ।

## * अथ नरान्तक कथा *

ज्ञानी न्यायि सिपालु विघ्न चतुरो * मन्त्री थियो एउटा ।
बस्थ्यो हर्दम त्यो विभीषण सितै * पुज्थ्यो सबै देवता ॥
जस्ले रावणका सभाबिचमहाँ * * टेकेन कैल्यै पनि ।
तेही रावणका सभाबिच गयो * संझाउँ क्यै बात् भनी॥१॥
संझायो पनि खुब् परन्तु उसले * राखेन वास्ता जसै ।
मन्मा सिन्दुरनादले गम गरी * यो भन्न लाग्यो तसै ॥
वीर् वीर् पुत्र मरे भनी हजुरले * पर्दैन सुर्ता लिनु ।
सब् भन्दा विर पुत्र बाँकि छ छिटो * उस्लाइ थाहा दिनु॥२॥
रावणले अब बाँकि छैन कुनजी * यै बात उत्तर् दियो ।
मन्त्री भन्दछ पुत्र जुन् हजुरको * मूलमा परेको थियो ॥

जस्लाई लगि यै समुद्रबिचमा ❀ फ्याँकी दियेको थियो ।
ईश्वर्को करुणा भयेर नमरी ❀ बालक् जलैमा जियो ॥३॥
तेही बाँकि छ त्यो नरान्तक भनी ❀ प्रख्यात् छ वीर् भै अति ।
त्यस्माथी शिवको दया छ बहुतै ❀ त्यस्को छ तीखो मति ॥
सेना छन् अनगिन्ति राज्य विहवाल्❀ पुर्मा छ राम्रो अति ।
डाक्नु होस् त्यसलाई आइ उसले ❀ जित्नेछ शत्रू जति ॥४॥
यस्तो बात सुनेर रावण अती ❀ खुश् भो र तेही घरि ।
डाक्यो राक्षस धूम्रकेतुकन त्यो ❀ यो भन्छ राम्रो गरी ॥
मेरो चिट्ठि लियेर जा र विहवाल् ❀ पुर्मा नरान्तक्कन ।
चिट्ठी दी मुखले पनी सब कुरा ❀ भन्नू नरम् भैकन ॥५॥
यस्तो पाइ हुकूम् हिंड्यो चिठि लिई ❀ त्यो धूम्रकेतू जसै ।
आठ् कोस् बाँकि रह्यो जसै उ विहवाल्❀ पुर् पुग्नलाई तसै ॥
एक् छिन् उभि यता उतै नजरले ❀ हेर्दामहाँ एउटा ।
देख्यो पात टिपेर जंगलमहाँ ❀ पार्ने बलीया मुठा ॥६॥
सोध्यो त्योसङ राजकुमारहरुले ❀ पात् टिप्तछन् क्वै यहाँ ।
उस्ले भन्दछ मूर्ख यो शहर हो ❀ बस्छस् तँ कुन् गाउँमा ॥
राजा छन् बलिया नरान्तक यहाँ ❀ नोकर् उनैको म हूँ ।
यस्तो बात सुनी हिंड्यो उ पनि फेर्❀ भन् ठानि फेर् के भनूँ॥७॥
फेरी क्यै पर त्यो पुग्यो जब अनी ❀ सुन्का घडा लीकन ॥
आइन् सुन्दरि एउटी मुसुमुसु ❀ हाँसेर पानी लिन ॥
सोध्यो ती सङ रानि भैकन पनी ❀ भर्छ्यौ तिमी नै जल ।
छैनन् केटिहरू र के घरमहाँ ❀ साँचो कुरा लौ भन॥८॥

दासीकी पनि दासि हूँ म तिमिले * रानी भन्यो अन्त गै ।
यस्तो बात नगर्नु यो जब भनिन् * चल्दो भयो फेर् तसै ॥
पौंचेथ्यो जब त्यो सहर् बिचमहाँ * घोडा र हात्ती रथ ।
घर् किल्लाहरु देखि छक्क परि त्यो * पर्दो भयो अक्मक ॥९॥
जाऊँ भित्र कसो गरी भनि तहाँ * चिन्ता गरेको थियो ।
संयोग् एक बथान ताहिं नटुवा * आये ति जस्तै भयो ॥
राजाका घरमा गये ति सबई * राजा प्रजाका तहाँ ।
देख्यो एकइनासका सब कुरा * आश्चर्य भो मन्महाँ ॥१०॥
दिन्को बाह बजे मिलेर मउका * चिट्ठी दियो हातमा ।
सोध्यो रावणको कुशल् सब कुरा * बत्लाउँदो भो तहाँ ॥
बाँच्यो चिट्ठि पनी मिल्यो सब कुरा * जाग्यो नरान्तक् अनि ।
रानी विन्दुमतीकहाँ गइ सबै * त्यो हाल् बतायो पनि ११
भन्छिन् विन्दुमती लडाइँ तिमिले * गर्दै नगर्नू गई ।
पर्नू श्रीरघुनाथका चरणमा * पर्नेर नम्रित् भई ॥
माग्नू वर् रघुनाथका सँग अनी * फेर् फर्कि आऊ यहाँ ।
रामको भक्त भएर राज्य गर यो * बत्लाउँ धेरै कहाँ ॥१२
यस्को उत्तर क्यै पनी नदिइ त्यो * ओर्लेर चाँडो गरी ।
किल्लामा गइ भन्छ फौज सबई * आउन् यहाँ यो घरि ॥
जान्छू जन्म-जमीनमा म अहिल्यै * दूत्लाइ ली साथमा ।
भन्नासाथ भये तयार सबई * शस्त्रास्त्र ली हातमा॥१३॥
लागे बज्न अनेक् किसिम् किसिम्का * बाजा जसै त्यो घरि ।
रानी विन्दुमतीमहाँ पिर पर्‍यो * ऐले लडाञी गरी ॥

रामजीका सँगमा लडाजि यिनले * जित्ने भएदेखि ता ।
हुन्थ्यो जाउ भनी बिदा दिन पनी * जान्छन् इ सब् सेखि ता १४
संझाऊँ इ नसंझने म विधवा * हुन्छू अवश्यै भनी ।
भन्नू ठानीकन साथ जान सब थोक् * पारिन् तयारी पनि ॥
आयो फेरि तहाँ नरान्तक जसै * भन्छिन् हजूरका सँग ।
जान्छू भेट्तछु मेरि सासु म पनी * ठण्डा गराई मन ॥१५॥
यस्तो बात सुनेर भन्छ उ पनी * लौ हुन्छ जाऊँ हिंड ।
रानी विन्दुमती अती खुशि भइन् * यो बात् सुनीथिन् जब ॥
सारा फौज लिई नरान्तक हिंड्यो * देख्यो कुलच्चण् अति ।
परवाहा रतिभर् गरेन रिसले * गर्थ्यो कहाँ दुर्मति ॥१६॥
लङ्कामा जब त्यो पुग्यो अति खुशी * रावण् दुरात्मा भयो ।
एक् छिन् ता अघिका सबै पिरहरू * त्यस्को हराई गयो ॥
फेरी भन्दछ पुत्र सब कुशल छौ * चौपट्ट प्यारो गरी ।
आफ्नू हाल पनी रुँदै रुँदइ सब् * भन्दो भयो त्यो घरि॥१७॥
यस्तो बात सुनी नरान्तक तहाँ * साह्रै अहङ्कार् गरी ।
लाग्यो भन्न पिताजि शोक सबई * छोडीदिनोस् यो घरि ॥
वानर् शून्य गराइ पृथ्विभरिमा * राम्चन्द्र लच्मण्कन ।
पक्री ल्याउँछु भोलि निश्चय पनी * योगीहरूका धन ॥१८॥
रानी विन्दुमती गइन् महलमा * मन्दोदरीले पनि ।
प्यारो बिघ्न गरेर बात सब थोक् * सोधेर घर्को अनि ॥
राम्को वर्णन सब् गरिन् मनमहाँ * राम्लाइ जप्तै सुते ।
फेरी रामजिको चरण् कमल-जप् * गर्दै बिहानै उठे ॥१९॥

या भो रानिहरू तरफ् अब उता * रावण् नरान्तक् पनि ।
आफ्नू गन्थन सब् सके अनि सुते * राम्‌लाइ मार्नें बनी ॥
भोलीपल्ट बिहान भो जब सहर् * घेरेर वानर् बसे ।
कोही वानर क्रोध रोक्न नसकी * उफ्रेर घर्मैं पसे ॥ २० ॥
व्यूँभयो फौज सबै नरान्तक पनी * व्यूँभ्की कुरा सब् सुन्यो ।
राक्षस्‌को विरको भयेर प्रकृती * रिस्ले फनक्कै घुम्यो ॥
आफ्नू फौज सजाइ शस्त्र भिरि सब् * निस्क्यो र हानेर बाण् ।
सारा बानरलाइ भाग्नु त पऱ्यो * निस्क्यो कुनैको त प्राण २१
भाग्ने बानरलाइ छेकन भनी * पर्खाल जस्तो गरी ।
फैलाये हनुमानले पुच्छर खुप् * पारी ठुलो त्यो घरि ॥
राक्षस्‌लाइ समाति फेरि रिसले * पट्केर मारे अति ।
त्यस्तै चाल गरेर अङ्गद पनी * मार्थे ति राक्षस् कति २२
त्यो देखीकन हाँस्नुभो रघुपती * पीर् छाडि एकातिर ।
जाग्यो फेरि तहाँ नरान्तक अती * त्यो देखि अर्कातिर ॥
आयो लडन भनेर त्यो प्रलयको * अग्नी समानै बनी ।
कोलाहल् बहुतै गरे रिस गरी * राक्षसहरूले पनि ॥२३॥
हाने बाण अनेक बानरहरू * व्याकुल् भये सब् तहाँ ।
लागे नाउँ लिई कराउन कुनै * सुग्रीवजी छन् कहाँ ॥
भन्थे लक्ष्मण रामचन्द्रजि कुनै * घर् संभ्कि रुन्थे कुनै ।
जान्थे लुक्न भनेर जङ्गलमहाँ * साह्रै डराई कुनै ॥२४॥
राक्षस्‌हेरु मिलेर अङ्गदजिको * हातमा समाते जसै ।
राक्षस्‌हेरु सहित् उडे गगनमा * अङ्गद् तुरन्तै तसै ॥

पौंचेथे जब सूर्यका नगिचमा * राक्षस् जती सब् तहाँ ।
राक्षस्हेरु जलाइ अंगदजि फेर् * आये लडाजीमहाँ ॥ २५॥
यो देखेर त्रिशूल् लियेर रिसले * आयेर सेनापति ।
घोप्यो अंगदलाइ छाति बिचमा * बाधा हुनाले अति ॥
मूर्छा अंगदजी परे जब तहाँ * रिस्ले हनूमान् गए ।
खोसे तेहि त्रिशूल् र छाति बिचमा * त्यस्लाइ घोपीदिये ॥ २६॥
पल्ट्यो तेहि बखत मर्‍यो पनि तहाँ * अंगद् गिरेको कुरा ।
सुन्नूभो रघुनाथले र बहुतै * प्यारो बलीयो पुरा ॥
भाईलाइ हुकूम् भयो अब तिमी * जाऊ लडाजीमहाँ ।
मिल्नासाथ हुकूम् लियेर धनु बाण् * लक्ष्मण् गये झट् तहाँ २७
छातीमा रघुनाथ संझिकन हात् * लक्ष्मण्जिले राखदा ।
बाधा अंगदको गयो सबइ त्यो * ब्यूँते तुरन्तै तहाँ ॥
देखे बानरले जसै सब कुरा * लक्ष्मण्जिलाइ पनि ।
भागेका सबई ति वानरहरू * आये तुरुन्तै अनि ॥ २८॥
टङ्कार् लक्ष्मणको सुनेर धनुको * राक्षस् बहीरा भए ।
वर्षाए शर फेरि लक्ष्मणजिले * शिर् धेर काटीदिये ॥
राक्षस्का शिर हात पाउ जसरी * उड्छन् रुवा फट्कँदा ।
त्यस्तै रीतसित उड्दथे गगनमा * बाण्ले तहाँ काटिंदा॥ २९
जित्नैपर्छ भनेर वानरहरू * लड्थे अती बल् गरी ।
त्यस्तै राक्षस-गण् पनी रिस गरी * लड्थे तिनैको सरि ॥
अङ्गद् श्री हनुमानजी जब तहाँ * गर्थे ठुलो सिंहनाद् ।
भाग्ने बानरका पनी मनमहाँ * हुन्थ्यो अनी केही ख्याल् ३०

यस्तै रीत् सित लड्दथे विरहरू * दोई तरफ्का सुरा ।
भाग्थे काँतर दोइ तर्फ तिनको * लेख्नू यहाँ के कुरा ॥
श्रौताहेरु खुशी भयेर कहिले * वर्षाउँथे फूल् पनि ।
कैले दिक्क भएर आँसु पनि ता * वर्षाउँथे फेर् अनि॥३१॥
भाँची हात पयर् धुलो मुखमहाँ * हालेर मारे कति ।
पक्री थप्पड मारि घाँटि निमठी * मारीदिए फेर् कति ॥
यस्तै रीतसित आधि फौजहरुको * आधा दिनैमा तहाँ ।
पारे नाश ति भालु बानरहरू * जागेर संग्राममा ॥३२॥
यो देखेर गयो नरान्तक अती * जागेर आकाशमा ।
वर्षायो अनि शस्त्र अस्त्र सबई * मूर्छा गराई तहाँ ॥
आयो रामजिको अगाडि र तहाँ * यो भन्छ भाई सहित् ।
मार्छू राम तँलाइ पृथ्वितल यो * पार्छू म बानर् रहित्॥३३॥
जागे त्यो सुनि जाम्बवन्त रिसले * जाग्यो नरान्तक् पनि ।
छोड्यो एक त्रिशूल् जसै अति छिटो* पक्रेर तिन्ले अनि ॥
श्रीराम्लक्ष्मणकी जये भनि तहाँ * हाने उसैलाइ त्यो ।
लाग्यो छाति महाँ लड्यो जमिनमा * तत्काल मूर्छा भयो॥३४॥
त्याहाँ गैकन फेरि पक्रि दुइ हात् * धेरै घुमाईकन ।
पड्के पृथ्विमहाँ लगेर रिसले * गाडे खुशी भो मन ॥
सम्झे फेरि जती गरौं म अहिले * मर्दैन यो बात् जसै ।
फ्याँके रावणका अगिल्तिर गई * बज्र्यो नरान्तक् तसै॥३५
देख्यो रावणले नरान्तक तसै * रोयो ठुलो स्वर् गरी ।
संग्राम्मा पनि त्यो नरान्तक नभै * भाग्यो फउज् त्यै घरि ॥

सन्ध्याकाल पनी भयो उहि बखत् * रामचन्द्रजी छन् जहाँ ।
आये वानरहेरु खुश् अति भई * जङ् छाडि त्यै ठाउँमा ३६
बस्नूभो रघुनाथ आसनमहाँ * लक्ष्मणजि त्यस्का मनि ।
आसन् आसनमा बसे विर सबै * भालू र वानर् पनि ॥
अंगद् श्रीहनुमान् गएर प्रभुको * लागे चरण् दाबन ।
यो भो रामजितर्फ राक्षस तरफ् * पीर्मा पऱ्यो रावण ॥३७॥
रानी विन्दुमती गयेर बहुतै * रोइन् विलाप् खुप् गरी ।
ब्यूँतो फेरि तहाँ नरान्तक पनी * भीँसार भो त्यो घरि ॥
शेखी रावणसाथ जो अघि गऱ्यो * संम्फेर त्यो त्यो घरि ।
लाज् मानेर गऱ्यो उँधो मुख पनी * लज्जावतीका सरि ॥३८॥
दौड्यो फेरि लडाञि गर्न भनि त्यो * रथमा चढी त्या घरि ।
लाग्यो गर्न तहाँ अनेक् किसिमका * मायाहरू छल् गरी ॥
केही गर्न सकेन छल् कपटले * मायाहरूले जसै ।
आयो लक्ष्मणका अघिल्तिर अनी * वाण् हान्न लाग्यो तसै ॥ ३९
मूर्छा लक्ष्मणजी परे जब तहाँ * भालू र वानर् अनि ।
लाग्यो खान खुरूखुरू अधमले * कालै समान्को बनी ॥
भागेका जति फौज राक्षस पनी * आये सबै त्यो घरि ।
लागे बानरलाइ खान ति पनी * पक्रेर एक्एक् गरी ॥४०॥
बाधा वानरमा पऱ्यो र बहुतै * भागे डरायी अति ।
वानर् भालु भञ्जी गराइकन रूप् * पाऱ्यो तहाँ भन् खती ॥
फेरी अंगदजी विभीषणजिका * रूप् धर्न आँट्यो जसै ।
त्यै बेला अनिखेर लक्ष्मणजिको * मूर्छा खुल्यो भट् तसै ४१

आकाशमा गइ विघ्न गर्जन तहाँ * लागे हनूमान् पनि ।
लक्ष्मणले पनि मोह नाश गरने * छोड्दा भये बाण् अनि ॥
सारा राक्षसि बल् हट्यो जब तहाँ * फर्क्यो नरान्तक् पनि ।
लाग्यो गर्न भनेर होम अनि त्यो * रामलाइ मारूँ भनी ॥४२॥
फेरी साँझ पर्‍यो जसै सब गये * रामचन्द्रका पासमा ।
रामले हेर्दैमा गयो सबैको * बाधा गए वासमा ॥
लक्ष्मण सुग्रिव जाम्वन्त हनुमान् * इत्यादि सब् खुश् थिए ।
मार्ने हो कसरी नरान्तक भनी * सल्लाह गर्दा भये॥४३॥
साह्रै नै बलियो नरान्तक भयो * शङ्कर् सहायै भई ।
के गर्नू भनि यो कुरा जब गरे * रामचन्द्रले त्यो सुनी ॥
भन्नूभो जुन शम्भु हुन् उहि म हूँ * जो हूँ म शंभू उ हुन् ।
यस्मा भेद नगर्नु गर्दछ जउन् * अज्ञानि हो तेहि जन्॥४४॥
शङ्करले धन धर्म मोक्ष मनमा * इच्छा छ जे त्यो सबै ।
दिन्छन् कारण एउटा छ यसमा * पाइन्न भक्ती नभै ॥
धेरैपल्ट मलाइ मद्दत गरे * ऐले पनी मद्दत ।
गर्छन् शङ्करले मलाइ खुशि भै * के काम् गरी हत्पत॥४५॥
यस्तो यो बलियो नरान्तक भयो * भन्ने कुरामा यहाँ ।
केही विस्मय गर्नु हुन्न अहिले * शङ्करजिका पाउमा ॥
राख्नूपर्दछ माथ छुट्तछ अनी * आपत्ति हाम्रो पनि ।
जित्लौं हामि अवश्य येति भनि फेर् * चूप्चाप् हुनूभो अनि ॥४६
रामको त्यो उपदेश् सुने पनि तहाँ * आधा बित्यो रात् पनि ।
आए नारदजी पनी उहि बखत् * रामजी कहाँ छन् भनी ॥

देख्नासाथ खडा भएर रघुनाथ् * आसन् दिनूभो जसै ।
नारद् आसनमा बसेपछि प्रणाम् * गर्नूभयो झट् तसै॥४७॥
भन्छन् नारदजी मलाइ अहिले * ब्रह्माजिले जा भनी ।
भन्नू भो र यहाँ तुरन्त अहिले * आजै म रात्मा पनि ॥
यस्को कारण के त सुग्रिवजिको * छोरा दधीबल्कन ।
आजै रातभरीमहाँ इ हनुमान् * दौडेर गै ल्याउन ॥४८॥
तिन्कै हातमहाँ छ मृत्यु यसको * भोली बिहानै यहाँ ।
मार्नूहोस् यसलाइ नाथ ! सहजै * खुश् भै अती मन्महाँ ॥
येती बात भनेर नारद गए * रामले हनूमान्कन ।
भन्नूभो अहिल्यै गएर तिमिले * ल्याऊ दधीबल्कन ॥४९
पाऊमा परि राम लक्ष्मणजिका * दौडे हनूमान् तहाँ ।
साढे तीन् घडि भित्रमा उहिं पुगे * बस्थे दधीबल् जहाँ ॥
हेर्छन् ता उनि ध्यानमा मगन छन् * ब्रह्माण्डमा प्राण छ ।
प्रातस्कालमहाँ नमारि नहुने * ब्रह्माजिको वाक्य छ॥५०॥
के गर्नू भनि छटपटाइ हनुमान् * यो भन्दछन् मन्महाँ ।
पर्वतलाइ समेत बोकि दधिबल् * पौंचाउँ की झट् उहाँ ॥
कैले खुल्दछ यो समाधि यिनको * धेरै गरी तर्कना ।
संझे श्री रघुनाथलाइ म छिटो * पाऊँ भनी फर्कन॥५१॥
त्यस्तैमा दधिबल् उठे किनभने * लाग्यो पिसाब् बेसरी ।
हेर्छन् ता हनुमानले अनि तहाँ * देखे जसै त्यो घरि ॥
बोले झट् हनुमानले अनि तहाँ * श्रीरामजीकी जये ।
पैचाने हनुमानलाइ उनले * साह्रै गरी खुश् भये॥५२॥

सोधे प्रश्न कुशल् सुनी खुशि भए * फेरी हनूमानजी ।
भन्छन् भाइ गएर दर्शन गरी * बस्छन् जहाँ रामजी ॥
जस्का निम्ति अनेक वर्ष वनमा * भोकै पनी बस्तछन् ।
सारा इन्द्रिय रोकि आसन कसी * सेवा गरी बस्तछन्॥५३॥
जस्लाई अरु खोज्दछन् उ अहिले * खोज्छन् तपैंलाइ पो ।
मौका मिल्दछ यो कहाँ अघि पछी * सब् कर्मको खेल हो ॥
जाऊँ भाइ तुरन्त यै बखतमा * आदर छ यै रामको ।
आफैं मर्जि हुनेछ बात जुन हो * गर्नें कुरा कामको ॥५४॥
यस्तो बात जसै सुने ति दधिबल् * साहै गरी खुश् भए ।
त्यै बेला हनुमानका सङ्महाँ * लङ्कापुरीमा गए ॥
देखेथे जब भाइका सङ्महाँ * राम्चन्द्रलाई जसै ।
पाऊमा परि दण्डवत् गरिलिए * साहै खुशी भै तसै ॥५५॥
राख्नुभो रघुनाथले नगिचमा * सुग्रीवजीले पनि ।
देखेथे जब पुत्रलाइ मनमा * माने अती खुश् अनि ॥
जस्तै प्राण गई सकेर बचनू * पैले हराई मणि ।
फेरी पाइनु त्यस्तई झजि भये * आनन्द सुग्रीवजी ॥५६॥
अंगद् साथ गरेर भेट दधिबल् * साहै गरी खुश् भए ।
प्रातस्काल भयो नुहाइ सबले * राम्का चरणमा परे ॥
आफ्नू आफ्नु बटालियन् सब मिली * पौंचे सममा जसै ।
आयो काल सरी नरान्तक पनी * रथमा चढी झट् तसै ॥५७॥
कालो बादल झैं भयेर सब ती * राक्षस्हरू छापिए ।
त्यै बेला दधिबल् पनी रणमहाँ * टुप्लुक्क गै देखिये ॥

देख्ना-साथ गये नरान्तक जहाँ * बस्थ्या दधीबल् उहीं ।
चेला यौटइका हुँदा इ दुइले * भेट् घाट् गरे खुश् भई ५८
सोधे क्षेम कुशल् भने ति दुइले * जो जो थियो आफ्नू ।
भन्छन् मन्मन फेरि भाइ भइगो * यस्लाइ संझाउनु ॥
मेरो धर्म भनी दया गरि अती * भन्छन् दधीबल् तहाँ ।
भेट्घाट् भो तिमि हामिको समर भै * लंकापुरीमा यहाँ ॥५९॥
हे भाई रघुनाथलाइ तिमिले * जानेर ईश्वर् भनी ।
बाबूको कुमती लियेर अहिले * प्रत्यक्ष शत्रू बनी ॥
लड्नू योग्य कदापि छैन मनमा * एक छिन् विचार् लौ गर ।
जो भो गल्ति उ माफ मागि अहिले * राम्का शरण्मा पर ॥६०
आफ्नू वंश बचाउ रावण पनी * मर्दैन यै काम् गरे ।
काका भाइ सबै ठुला विर थिए * तिम्रा यिहीं सब् मरे ॥
देखी देखि अघी सऱ्यौ किन तिमी * लौ लौ लडाञी गर ।
जस्ले भन्दछ शत्रु हो उ तिमि गै * राम्का चरण्मा पर ॥६१
अमृत् पुष्प समानका इ उपदेश् * सुन्दा नरान्तक् तहाँ ।
लाग्यो भन्न म शत्रुका चरणमा * पर्नन्नँ कैल्यै यहाँ ॥
जल्ले मार्दछ बाबुलाइ उसको * सेवा जउन् गर्दछ ।
यो बात् अंगदलाइ भाइ भन गै * उन्लाइ मन् पर्दछ ॥६२॥
यस्तो बात गरी हिंड्या समरमा * जागे दधीबल् अनि ।
छेके लामु पुछर् गराइ रिसले * यो बात भयो फेर् पनि ॥
काँतर् वानर छेक्तछस् किन यहाँ * के सक्तछस् गर्न तँ ।
छोडें भाइ भनेर उल्तु अहिले * मार्नें थिएँ नत्र म ॥६३

यस्तो बात सुनेर जागि दधिबल् * दौडेर पक्रे गई ।
लागे लड्न अनी दुवै विरहरू * जित्ने इरादा लिई ॥
आए वानर भालुहेरु पनि सब् * मारे फउज् तेसको ।
यौटा बाँकि रह्यो नरान्तक फगत् * पालो पऱ्यो येसको ॥ ६४ ॥
यस्तै रीत् सित दश् घडी ति दुइवीर् * लड्दा भएथे जसै ।
राक्षसका छलले अलप् हुन गयो * क्रोधी नरान्तक् तसै ॥
फेरी सुग्रिव जाम्बवान्‌सित अनी * गर्थे तहाँ यो कुरा ।
कैले मर्दछ यो र हाम्रिहरुको * होला मनोरथ् पुरा ॥ ६५ ॥
मार्छन् वाण इ छैन बेर अब क्यै * सुग्रीवलाई भने ।
द्यौताहेरु पनी थिए नगिचमा * यो बात् सबैले सुने ॥
वर्षाए दधिबल् उपर् फुल अती * मानेर खुश् त्यो घरि ।
जाग्यो दुष्ट अनी नरान्तक तहाँ * उफ्रेर साह्रै गरी ॥ ६६ ॥
आयो झट् दधिबल् सहित् अलप भो * त्यो दुष्ट फेरी जसै ।
पौंच्या साठि हजार योजन-उपर् * जागे दधीबल् तसै ॥
संझे रामचरण् कमल् हृदयमा * पक्रे नरान्तक्कन ।
फ्याँके जोड गरेर पृथ्वि-तलमा * ओर्ले पनी सङ्सङ ॥ ६७ ॥
बज्रे थ्यो जब पृथ्विमा हृदयले * राम्‌राम जप्तै मऱ्यो ।
द्यौतालाइ पनी कठिन् अति हुने * संसार-सागर् तऱ्यो ॥
शिर् काटे धड़लाइ जोड गरि खुप् * लंकामहाँ फाल्दिए ।
झुन्ड्याई शिर हातमा ति दधिबल् * राम्‌चन्द्रका पास् गए ६८
द्यौताले जय रामको भनि तहाँ * साह्रै ठुलो स्वर् गरी ।
वर्षाए फुल वृष्टि रामजिमहाँ * खुश् भै अती त्यो घरि ॥

सन्ध्या काल पनी भयो समरमा * बेताल भूत् प्रेत् गए ।
ज्ञानी ज्ञानि मिठो थियो जुन उही * खाई शिकार् खुश् भए६९
उठनूभो रघुनाथ लक्ष्मण सहित् * आए दधीबल् जसै ।
श्रीराम्का नगिचै गएर ति बसे * राम्कै हुकूम्ले तसै ॥
सुग्रीव् अङ्गद जाम्बवान हनुमान् * वीर् सब् बसे खुश् भई ।
सुग्रीव्लाइ हुकूम् भयो अघचमा * राख्नोस यो शिर् लगी७०
एक् ता वीर् उसमाथि भक्त उसमा * छोरो भई त्यो घरि ।
श्रीराम् लक्ष्मण विघ्न खुश् हुनुभयो* धेरै प्रशंसा गरी ॥
भन्नूभो मित-पुत्र आज तिमिले * साह्रै ठुलो काम् गऱ्यौ ।
हाम्रो मन् खुशि पारि शत्रुहरुको * सेखी सबै थोक् हऱ्यौ ७१
यस्तो बात जसै सुने ति दधिबल् * साह्रै खुशी भैकन ।
हात् जोडी निहुरी खड़ा भइ रुँदै * सोझो गराई मन ॥
गर्छन् बिन्ति दयानिधे ! वनमहाँ * बस्ने जनावर् पनि ।
बस्छौं आज कृपा हुँदा हजुरको * वीर् भैं सभासद् बनी ॥७२
जस्को कीर्तन वेदशास्त्रहरुले * सक्तैन वर्णन् गरी ।
उस्ताको कसरी गरौं म गुणगान् * वन्को जनावर् हरि ॥
येती बिन्ति गरी चरण् कमलमा * राख्ता भए शिर् जसै ।
तिन्माथी रघुनाथले अति दया * गर्नू भयो फेर् तसै ॥७३॥
भन्नूभो रघुनाथले अनि तहाँ * वर् माग छोरा भनी ।
भन्छन् ती दधिबल् चरण् कमलको* हे राम् भ्रमर् रूप् बनी ॥
पाऊँ बस्न भने जसै हुकुम भो * छोरा ! तथास्तू तर ।
दिन्छू फेर् विहवालपुर् पनि वहाँ * राज्काज तिम्ले गर ॥७४॥

रामजीका तिर यो भयो अब उता * खस्तो भयो धड् जसै ।
पैचाने सबले नरान्तक भनी * हल्ला चल्यो खुप् तसै ॥
रोई विन्दुमती गएर बहुतै * गर्दै विलाप् बेसरी ।
सोधिन् सासु कहाँ गएर अब के * मैले गरूँ यो घरि ॥७५॥
भन्छिन् धेर विलाप् गरेर रुँदई * मन्दोदरीले पनि ।
जाऊ झट्ट सुलोचना झनि जहाँ * बस्छन् जगत्का धनी ॥
शिर् ल्याऊ सति जाउ येहि छ ठुलो * क्यै छैन अर्को कुरा ।
रामका पाउमहाँ पुग्यौ तिमि भने * होला मनोरथ् पुरा॥७६॥
सासूका इ वचन् सुनेर ति गइन् * रामचन्द्रका पासमा ।
दर्शन् मिल्न सकेन तैपनि तिनी * बस्ती भइन् आशमा ॥
भन्छन् फेर् नल आइ दर्शन यहाँ * मिल्दैन रामचन्द्रको ।
लङ्कामा तिमि जाउ छन् सब उहीं * तिम्रा यहाँ छन् र को ॥७७
दर्शन् गर्न भनेर आइ अहिले * दर्शन् नपाईकन ।
फर्कन्नौं भनि वासमा सब पसे * विह्वल् गराई मन ॥
भन्छिन् रामजिलाइ ती जगतका * मालिक् हजूरको यहाँ ।
हामीमाथि कृपा रहोस अरको * को छन् र जाऊँ कहाँ॥७८॥
यस्तै रीतसित खुप् विलाप गरदै * रोए गएका सबै ।
बुझ्नूभो जब हालचाल तिनको * मन्को सती ती नगै ॥
छाड्दैनन् भनि रामले जब तहाँ * वर माग भन्नूभयो ।
मागे यो वरदान पाउँ पतिलोक् * लौ हुन्छ भन्नूभयो ॥७९॥
सुग्रीव्लाइ हुकुम् भयो शिर दिनू * शिर् झट्ट ल्याईदिए ।
शिर् पाएपछि फेरि विघ्न खुश भै * यो विन्ति गर्दा भए ॥

शिर् ता नाथ मिल्यो कहाँ गइ जलौं * केले जलौं यो पनि ।
केही छैन ठिकान यो जब भने * रामको हुकूम् भो अनि ८०
भन्छिन् विन्दुमती जहाँ उहिं चिता * चाँडै बनाईदिनू ।
कर्पूर् चन्दनहेरु चीज् सब कुरा * चाँडै पुऱ्याईदिनू ॥
यस्तो आडर भो जसै विरहरू * लङ्कापुरीमा गए ।
चन्दन् कर्पुरहेरु ल्याइ सबई * थुप्रो लगाईदिए ॥८१॥
सोद्धा खेरि सुलोचना सति हुँदा * जुन् ठाउँ दाहा भयो ।
तेही ठाउँ भनिन् र विन्दुमतिले, * ताहीं चिता ठीक् भयो ॥
ज्यू शिर् जोडि नुहाइ चन्दन घसी * राखे चितामा पति ।
सोहोटी सति भै जले पनि भनी * पाए पतीको गति ॥८२॥

❀ ले० पं० श्रीनारायण प्रसाद शास्त्री ❀

* इति प्रक्षेप कथा *

मूर्छादेखि उठी विलाप् अति गरी * फौज् लड्न पेल्यो पनि ।
हातमा एक् तरवार् लिएर रिसले * सीता म काट्छू भनी ॥
दौड्यो त्यो र सुपार्श्व मन्त्रि नजिकै * थीयो अगाडी सऱ्यो ।
स्त्री घात् गर्नु अवश्य छैन महाराज्! * यो जल्दि बिन्ती गऱ्यो ॥

सुपार्श्वको बिन्ति सुन्यो र ताहाँ ।
फर्क्यो फरक्कै दरबारमाहाँ ॥
शोकले बहुत् मूर्ख समान भैगो ।
फेरी सभा गर्छु भनेर गैगो ॥२१६॥
सब् मन्त्रिले सँग बसेर विचार गर्दा ।
हीतै हुन्या ठहरियो र अगाडि सर्दा ॥

जो बाँकि राक्षस थिया सब साथ लीयो।
खुप् लड्नलाइ रघुनाथ् तिर चित्त दीयो ॥२१७॥
त्यो अग्निमा सलह झैं जब पर्न आयो।
सक्थ्यो कहाँ अधिक ठक्कर फेरि पायो ॥
घेर् वीर मन्या हृदयमा पनि बाण लाग्यो।
टिक्नै तहाँ नसकि जल्दि फिरेर भाग्यो ॥२१८॥
सम्भयो गुरुकन विपत्ति पन्यो र ताहाँ।
चाँडै गुरुसित गई शिर पाउमाहाँ ॥
राखी गन्यो विनति दुःख बहुत पायाँ।
यै दुःखको विनति गर्न त आज आयाँ ॥२१९॥
हे नाथ! हजूर् गुरु भई पनि दुःख पर्न्याँ।
क्या भो मलाइ कसरी अब चित्त धर्न्याँ ॥
यस् रामले सकल बन्धु र पुत्र मान्यो।
शूरा अनेक् विरहरू पनि छुट्टि पान्यो ॥२२०॥

रावण्को विनती सुन्या र गुरुले * पाएछ आपत् भनी।
गर्नूसम्म गरोस् भनेर उपदेश् * दीया गुरूले पनि ॥
हे रावण्! सुन मंत्र दिन्छु अब गै * होम् गर्नु खुप् ध्यान् धरी।
होम् सम्पूर्ण गन्यौ भन्या त हतियार् * मिल्नन् तिनैले गरी ॥२१
जितन्याछौ सब वीरलाइ भनि यो * आज्ञा गुरूको जसै।
पाएथ्यो खुशि भै उठी घर गई * होम् गर्न आँट्यो तसै ॥
पाताल् तुल्य गुफा खनी तहिं बस्यो * होम् गर्नलाई पनि।
ढोका बन्द गन्यो सबै शहरको * कोही नआउन् भनी २२२

लूक्यो रावण येहि रीतसित र खुप् * होम् गर्न लाग्यो तहाँ ।
लूक्यो रावण तापनी तर धुवाँ * लूकी रहन्थ्यो कहाँ ॥
देख्या तेहि धुवाँ विभीषणजिले * होम् गर्न लाग्यो भनी ।
पायाँ भेद् भनि रामका हजुरमा * गै बिन्ति पार्‍या पनि ।२२३
लाग्यो रावण होम गर्न महाराज् ! * होम् सिद्ध पार्‍यो भन्या ।
साँचो बिन्ति म गर्दछू हजुरमा * ई सब् अजेयै बन्या ॥
हुकूम् वानरलाइ बक्सनुहवस् * वीर् वीर् अगाडी सरी ।
जल्दी गैकन यज्ञ नाश् गरिदिउन् * हुकूम् शिरोपर् धरी २२४
बिन्ती येति गर्‍या विभीषणजिले * हुकुम् प्रभूको भयो ।
अङ्गद् वीर् हनुमान् दुवै इ खटिया * दश् कोटिको फौज गयो ॥
पर्खाल् नाघि गया र तेस् शहरमा * दर्बार पुग्याथ्या जसै ।
चौकी रावणका थिया जति तहाँ * तिन्लाइ मार्‍या तसै २२५
रानी हुन् सरमी विभीषणजिकी * लंकै शहर्मा थिइन् ।
रावण् लूकिरहेछ ताहिं छ भनी * तिन्ले इशारा दिइन् ॥
गूफाका मुखमा त पत्थर ठुलो * लाएर पक्का गरी ।
होम् गर्थ्यो तहिं भित्र रावण उहीं * पौंच्या ठुलो वेग् गरी २२६
त्यो पत्थर्कन लात्ति अङ्गदजिले * दीया धुलै भै खस्यो ।
होम्को विघ्न गराउनाकन तहाँ * क्यै फौज भित्रै पस्यो ॥
रावण् येति हुँदा पनी दृढ भई * ध्यान् गर्न लाग्यो जसै ।
वीर् वीर् वानरले अनेक् तरहले * त्यो यज्ञ नाश्या तसै २२७
रावण्ले तहिं होम गर्न भनि एक् * सूरो लियाको पनि ।
खोस्या श्रीहनुमानले र रिसले * हान्या उठोस् यो भनी ॥

ध्यानैमा दृढ मन् गरी अचल भै * रावण बसेथ्यो जसै ।
ल्याया अङ्गदले त खैंचि नजिकै * मन्दोदरी पो तसै ॥२२८॥
ती मन्दोदरिलाइ रावण नजीक् * पौंचाइ हुमंत् लिया ।
चोलो खोलि अफालि फेरि कटिको * सारी खसाली दिया ॥
लायाका गहना समेत् शरिरका * वस्त्रै अफाल्या जसै ।
रूँदै रावणका नजीक रहँदी * बिन्ती गरिन् यो तसै २२९
हे नाथ् ! आज कता गयो हजुरको * लज्जा अनाथ् क्या गरूँ ।
पत्नीका इ विलाप् सुनी जिउनु धिक् * मर्नू निको हो बरु ॥
येती बिन्ति गरिन् र पुत्रकन खुप् * संझेर लागिन् रुनै ।
अर्को कोहि थिएन ताहिं तिनको * साहाय हून्या कुनै ॥२३०
भर्ताले पनि बाँचुला भनि यहाँ * लज्जै समेत् त्याग् गऱ्या ।
तेरो ज्यान् अघि गै गयो गरुँ कसो * ऐल्हे विपत्ती पऱ्या ॥
ती मन्दोदरि रानिको अति विलाप् * साम्ने सुनेथ्यो जसै ।
उठ्यो खड्ग लिएर अंगदजिका * हान्यो कटीमा तसै॥२३१
होमको नाश गराइ अंगदहरू * दौडेर रामथ्यैं गया ।
ती मन्दोदरि रानि रावण यिनै- * का बात् तहाँ खुप् भया ।
लाग्यो रावण भन्न रानि ! अहिले * बाँच्न् असल् हो भनी ॥
बाँच्नै खातिर ता म चूप् भइरह्याँ * येती हुँदामा पनि ॥२३२॥
बाँ चेदेखि त देखिइन्छ सब थोक् * यस्तो बुझी ज्ञानले ।
यो शोकदूर् गरिहाल हुन्छ अब क्या * यस्ता असत् ध्यानले ॥
अज्ञानै छ भुलाउन्या शरिरमा * यो देह मै हूँ भनी ।
त्यै अज्ञान बलवान् भयो पनि भन्या * फैलिन्छ संसार पनि ३३

आत्मज्ञान स्वरूप् बुझेर मनले * अज्ञानको नाश् गरी ।
स्वस्थै भै रहु शोक् नमानि तिमिले * क्या हुन्छ यो शोक् गरी ॥
हे मन्दोदरि ! मार्छु रामकन सहज् * संग्राम ठूलो गरी ।
रामैले यदि मार्दछन् त पनि बेस् * जान्याछु संसार् तरी २३४
संग्राम्मा मरिगै गयाँ पनि भन्या * मार्नू र सीता यहाँ ।
अग्नीमा तिमिले प्रवेश् तब गरी * आया म जान्छू जहाँ ॥
रावणका इ वचन् सुनेर अति ताप् * मान्दी ति मन्दोदरी ।
साँचो बिन्ति म गर्छु आज महाराज्! * भन्दै अगाडी सरी॥ २३५॥
बिन्ती रावणथ्यैं गरिन् पनि तहाँ * राम् हुन् जगन्नाथ् हरि ।
जीती सक्नु कदापि छैन अरुले * कस्तै लडाइँ गरी ॥
वैवस्वत मनुलाइ मत्स्यरुपले * जस्ले र रक्षा गर्‍या ।
फेरी कूर्म भएर मन्दर पनी * जस्ले पिठैमा धर्‍या २३६
प्राण खैंचेर लिया वराह रुपले * जस्ले हिरण्याक्षको ।
बाँची कोहि फिरेन लड्दछु भनी * साम्ने गयाको छ जो ॥
ठूलो दैत्य थियो हिरण्यकशिपू * मार्‍या नृसिंहै भई ।
राज्यै खैंचिलिया छलेर बलिको * वामन् स्वरूपले गई २३७
थीया क्षत्रिय पृथ्विमा परशुराम् * भै नाश् सबैको गर्‍या ।
तिम्रो प्राण लिनलाइ आज पनि नाथ् * राम् भै अगाडी सर्‍या ॥
सीता हर्नु थिएन हेलन गरी * सीताजि हर्नूभयो ।
यै काम्ले इ विपत् पर्‍या हजुरमा * ज्यान् इन्द्रजित्को गयो ३८
सीता सुम्पनुपर्छ आज अधिराज् * राम्चन्द्रजीथ्यैं गई ।
लङ्कामा पनि राज् विभीषण गरुन् * रामका पियारा भई ॥

सीता सुम्पनुपर्छ आज अधिराज्, रामचन्द्रजीथ्यैं गई ।
लङ्कामा पनि राज् विभीषण गरून्, रामका पियारा भई ॥

सब् छोडीकन आज जाउ वनमा * येती भनीथिन् जसै ।
रावण्ले पनि ई वचन् सुनि जवाफ् * खुप् दीन लाग्यो तसै २३९
हे मन्दोदरि ! इन्द्रजित् पनि मऱ्यो * ठूला ठुला वीर् मऱ्या ।
कुम्भकर्ण मऱ्यो अनेक् अरु पनी * संग्राममा वीर् पऱ्या ॥
येतीसम्म भएपछी कसरि फेर् * लत्रेर पाऊ परूँ ।
शत्रुथ्यैँ गइ लत्रि बाँच्नु ननिको * प्राण् आज जावस् बरु ४०
विष्णू हुन् रघुनाथ् सिता पनि यिनै * लक्ष्मी भनी जान्दछु ।
जानी जानि सिता हऱ्याँ त म उसै * क्या आज डर् मान्दछू ॥
राम्का हात परी मरूँ भनि त हेर् * सीताजिलाई हऱ्याँ ।
राम्का हात परी मऱ्याँ पनि भन्या * संसार् सहज्मा तऱ्याँ ४१

फेरी तुरन्त रघुनाथ् सित लड्न जान्छु ।
मार्नन् मलाइ रघुनाथ् तब खुशि मान्छु ॥
संसारका सकल ताप्हरुलाइ तोडी ।
जान्याछु पारि तिमिलाइ त वारि छोडी ॥२४२॥

राग् द्वेष्का भेल चल्छन् भँवरि सरि यि युग् घुम्दछन् बीचमाहाँ ।
पुत्रादी मत्स्य झैँ छन् रिस पनि वडवानल् सरीको छ ताहाँ ॥
कामैको जाल् छ ठूलो तर पनि बलियो ताहि जाल्लाइ फारी ।
संसार्-सागर् सहज्मा तरिकन हरिथ्यैं बस्न जान्याछु पारि २४३

मन्दोदरी सित यती भनि लड्नलाई ।
कम्मर् कसेर बलियो रथ एक् मगाई ॥
रथ्मा चढेर रघुनाथ् सित जान आयो ।
राम्चन्द्रको सकल वानर फौज् डरायो ॥२४४॥

त्यो रावण् रणभूमिमा जब पुग्यो * साम्ने हनूमान् गया ।
मूर्छा पारि गिराउँ यस्कन भनी * एक् मुड्कि हान्दा भया ॥
छातीमा जब मुड्कि बज्रन गयो * खुप् वज्र तुल्यै गरी ।
घूँडा टेकि गिऱ्यो पनी दुइ घडी * मूर्छा तुरुन्तै परी॥ २४५॥
मूर्छादेखि उठ्यो र रावण तहाँ *स्याबास् तँ होस् वीर् भनी ।
ठूलो वीर् हनुमानलाइ बुझि खुप् * साहै सहायो पनि ॥
रावण्ले हनुमानको सहनि खुप् * ताहाँ गरेथ्यो जसै ।
रावण्का सब सेखि तोड्न हनुमान् * वीर् बोल्न लाग्या तसै ४६
हे रावण्! किन गर्दछस् सहनि यो * धिक्कार् म मान्छू बरु ।
मेरो मुड्कि पऱ्यापछी पनि बचिस् * बोल्छस यहाँ क्या गरूँ ॥
एक् चोट् हान् तँ पनी तँलाई म पनी* फेर् हान्छु छातीमहाँ ।
एक् मुड्की अब हानुँला त नमरी * उम्केर जालास् कहाँ२४७
ई बात् श्री हनुमानले जब गऱ्या * बेसै भन्यो यो भनी ।
एक् चोट् श्री हनुमानका हृदयमा * ताकेर हान्यो पनि ॥
फेरी श्रीहनुमान् सऱ्या अघि तहाँ * मुड्की उठाई जसै ।
रावण् टिक्न सकेन एक् क्षण पनी * अन्यत्र भाग्यो तसै॥ २४८
रावण्का सँग चार् जना विर थिया * मन्त्री लडाका पनि ।
ई चार् वीर्कन चार् जना अघि सऱ्या* ऐले निभाऊँ भनी ॥
अङ्गद् श्रीहनुमान नील नल यी * चार् वीर कूदी गया ।
रावण्का सँगका ति चार् विर सहज् * मारेर फिर्दा भया॥ २४९॥
ती चार् जना जब मऱ्या तब मन् रिसायो ।
रामका उपर् अघि सरीकन वाण् खसायो ॥

बाक्ला बुँदै सरि ति शर् जब खस्न आया।
खुप् वानरादि विरले पनि दुःख पाया ॥२५०॥

यो चाल् वानरको बुझी रघुपती * साम्नै अगाडी सरी।
लाग्या लड्न तहाँ अनेक् तरहले * त्रैलोक्यका नाथ् हरि ॥
त्यो रावण् रथमा थियो रघुपति * खाली जमीन्मा थिया।
राम्का खातिर इन्द्रले अति असल् * एक् रथ् पठाई दिया २५१
जल्दी मातलि सारथी रथ लिई * राम्का हजूरमा गया।
हात् जोरीकन रामका हजुरमा * यो बिन्ति गर्दा भया ॥
हे नाथ ! रथ् लिइ इन्द्रका हुकुमले * आयाँ खडा छू पनि।
यै रथ्मा चढिबक्सियोस् हजुरले * बेस् बिन्ति पाऱ्यो भनी५२
यो बिन्ती गरि मातली अघि सऱ्या * स्वामित् सितानाथ् पनि।
तेस् रथ्लाइ परिक्रमा गरि चढ्या * चढ्नै उचित् हो भनी ॥
ताहाँ देखि त मच्चियो अधिक झन् * संग्राम् निरंतर् गरी।
जुन् बाण् रावणले त छोड्छउहिबाण्* काट्छन् रमानाथ् हरि५३
यस्ता रीतसित शस्त्र अस्त्र सब थोक् * काट्या प्रभूले जसै।
रावण्ले पनि राक्षसास्त्र लिइ खुप् * फेर् हान्न लाग्यो तसै ॥
रावण् हान्दछ बाण् जती जति तहाँ * सब् सर्प रूप् भै खस्या।
हान्या बाण् रघुनाथले पनि र ती * बाण् ता गरुड्भैखस्या ५४
काट्या सर्प पनी सबै गरुडले * पक्रेर टुक् टुक् गरी।
तेस् बीच्मा शरवृष्टि खुप् सित गऱ्यो * राम्का अगाडी सरी ॥
धक्का केहि दियो प्रभूकन तहाँ * फेरी गिराऊँ भनी।
हान्यो मातलिलाइ बाण् र पछि फेर् * केतू खसाल्यो पनि॥२५५

घोडैलाइ पनी अनेक शरले * खुप् हान्न लाग्यो जसै ।
आश्चर्यैं भइ देव पितृ ऋषिगण * खेद् मान्न लाग्या तसै ॥
लीलाले रघुनाथ् पनी जब तहाँ * दुःखी सरीका भया ।
वानर्को सब फौज् विभीषण समेत् * साह्रै डराई गया॥ २५६॥
बीस् बाहु दश शिर् भयङ्कर स्वरूप् * मैनाक् सरीको भई ।
लड्थ्यो रावण रामका हजुरमा * साम्ने नजीकै गई ॥
उठ्थ्यो रिस् प्रभुको र तेहि बिचमा * कालाग्नि जस्ता बनी ।
रावण्का दश शिर् गिराउन लिया * जल्दी धनुर्बाण् पनि ५७
कालाग्नी सरिको भयङ्कर स्वरूप् * राम्को बनेथ्यो जसै ।
कामिन् पृथ्वि पनी भयङ्कर स्वरूप * देखिन् र राम्को तसै ॥
रावण्को पनि चित्तमा भय पऱ्यो * उल्का बहुतै भया ।
क्या गर्छन् प्रभुले यहाँ भनि तहाँ * सब् लोक् डराई गया ५८
आकाश्मा बसि हेर्दथ्या जति थिया * सब् देवतागण् पनि ।
कस्ता रीतसित मर्छ रावण तहाँ * हेरौं तमाशा भनी ॥
राम्को रावणको परस्पर तहाँ * खुप् युद्ध ठूलो भयो ।
रात्रीको दिनको प्रकाश् नभइ काल् * धेर् युद्ध हूँदा गयो॥ २५९
रावण्को शिर काट्नलाइ जब बाण् * फँक्या प्रभूले तहाँ ।
तालैका फल झैं गिऱ्या तपनि शिर् * गीरैन पृथ्वीमहाँ ॥
एकोत्तर् शय शिर् गिऱ्या जति गिरुन्* सब् बन्न लाग्या जसै ।
क्या भो आज भनी प्रभूकन पनी * आश्चर्य लाग्यो तसै २६०
ठूला दैत्य बडा बडा विर पनी * जुन् बाणले मारिया ।
सोही बाण् पनि आज रावण्-उपर् * ताकेर खुप् हानिया ॥

काट्छन् शिर् पनि वाणले र दशशिर् * भैंमा खसाल्छन् पनि ।
फेर् ज्यूँकातिउँ शिर् हुन्या गरुँ कसो * क्या भो यहाँको जनी६१
यो चिन्ता रघुनाथमा जब पर्‍यो * साम्ने विभीषण् गया ।
यो हेतू छ भनेर हेतु जति हो * सब् बिन्ति गर्दा भया ॥
ब्रह्माको वरदान् छ शिर् खसिगया * फेर् उम्रनन् शिर् भनी ।
फेर् अमृत् पनि नाभिमा छ तब यो * मर्दैन काट्या पनि ॥ २६२ ॥
त्यो अमृत् सब शोषि बक्सनुहवस् * सब् सुक्छ अमृत् जसै ।
चाँडै त्यो मरिजान्छ तेस् बखतमा * उठ्तैन फेरी कसै ॥
हात् जोरेर जसै विभीषणजिले * यो गुह्य खोलीदिया ।
ठाकुर्ले पनि अग्निवाण झटपट् * हानेर शोषीलिया ॥ २६३ ॥
त्यो अमृतकन शोषिबक्सनु भयो * यो दिन्छ अर्ती भनी ।
रिस्ले शक्ति लिई विभीषण उपर् * ताकेर हान्यो पनि ॥
राम्ले शक्ति र शिर् दशै छिनिदिया * फेर् एक शिर्को भई ।
नाना शस्त्र लिएर खुप् सित लड्यो * रामका अगाडी गई ॥ २६४ ॥
तेस् बीचमा पनि मातली अघि सरी * हात् जोरि बिन्ती गर्‍या ।
हे नाथ्! रावण लड्छ यो अभ भन्या * फेर् शस्त्र हान्नै पर्‍या ॥
ब्रह्मास्त्रै अब छोडि बक्सनुहवस् * खुप् मर्म तोडन्या गरी ।
मार्न्या युक्ति त एक् यही छ नहिं ता * मर्दैन काट्या पनि ॥ २६५ ॥
बिन्ती मातलिको सुनी प्रभुजिले * एक् बाण तुरुन्तै लिया ।
जस्मा अग्नि र वायु सूर्य्य इ समेत् * लोक्पाल बस्याका थिया ॥
मन्त्री वेदविधानले र धनुमा * त्यो वाण लगाया जसै ।
प्राणीलाइ पनी बहुत भय भयो * खुप् भूमि कामिन् तसै६६

रावण्को तहिं छाति ताकिकन वाण् * छोड्या मरोस यो भनी ।
तेस वाण्ले त तहाँ सहज् मरि गयो * घूमेर लोट्यो पनि ॥
बाँकी राक्षस जो थिया ति पनि सब् * दौडेर भागी गया ।
जित् भो श्रीरघुनाथको भनि तहाँ * सम्पूर्ण खुशी भया २६७
तेस् बीच्मा नगरा बज्या प्रभु उपर् * खुप् पुष्प वृष्टी भयो ।
नाच्या अप्सरगण् ऋषी खुशि भया * सम्पूर्णको ताप् गयो ॥
रावण को पनि देहदेखि तहिं तेज् * निस्क्यो र सूर्यैं सरी ।
श्रीराम्चन्द्रजिमा मिली पनि गयो * संसार-सागर् तरी॥२६८॥
विष्णुद्वेषि परस्त्रिमा रत हुन्या * यो ब्रह्मघाती पनि ।
श्रीराम्चन्द्रजिमा मिल्यो कसरि यो * आश्चर्य लाग्यो भनी ॥
गर्थ्या बात् सब देवतागणहरू * नारद्जि ताहीं गया ।
जेले रावण राममा मिलिगयो * त्यो ताहिं भन्दा भया२६९
साँचो भन्छु म आज देवगण हो ! * यस्ले बहुत् ध्यान् गर्‍यो ।
सीतानाथ् प्रभुको र यो तब सहज् * संसार-सागर् तर्‍यो ॥
भक्तीले भयले अवर् तरहले * कौनै प्रकार्ले गरी ।
ध्यान् सीतापतिको गर्‍यो पनि भन्या * जाइन्छ संसार् तरी२७०
रावण् मारि धनू उतारि करको * एक् शर् लिलाले गरी ।
चारौंतर्फ घुमाउँदा शरिरमा * धेर् बाणको खत् परी॥
कोटी सूर्य्य सरी त तेज् छ जसका * यस्ता जगन्नाथ हरि ।
हाम्रा दुःख पनी सबै हरिदिउन् * सम्पूर्ण पाप् नाश गरी७१
रावण् मारि उतारि भारि भुमिको * सुग्रीव् विभीषण्हरू ।
लक्ष्मण् अङ्गद जाम्बवान् र हनुमान् * जो जो थिया वीर् अरू ॥

ती सब्लाइ हुकूम् भयो प्रभुजिको * तिम्रै कृपाले गरी ।
मान्याँ रावणलाइ कीर्ति रहला * तिम्रो तिनै लोक् भरी२७२
रावण्का सब रानि आयर विलाप् * खुप् गर्न लाग्या तहाँ ।
पृथ्वीमा लडि खुप् विभीषण पनी * रोया रहन्थ्या कहाँ ॥
बीत्या दाजु भनी विभीषण पनी * खुप् रुन लाग्या जसै ।
लक्ष्मण्लाइ हुकूम् भयो प्रभुजिको * संझाउ भन्न्या तसै २७३
दाज्यूको किरिया गरुन् सब हरुन् * ती रानिका शोक् पनि ।
हुकूम् येति मिल्यो र लक्ष्मण गया * जल्दी बुझाऊँ भनी ॥
लाग्या भन्न अहो विभीषण! तिमी * क्या यो न जान्न्या सरी ।
लाग्यौ गर्न विलाप् अनेक् तरहले * खाली जमीन्मा परी २७४
तिम्रो यो अघि जन्ममा कउन हो * ऐले त दाज्यू भयो ।
फेरी क्या हुनलाइ रावण यहाँ * छोडेर काहाँ गयो ॥
जम्मा भैकन बालुवा जसरि फेर् * फिर्छन् र गङ्गामहाँ ।
यस्तै रीतसित फिर्दछन् इ दुनियाँ * क्वै छैन आफ्नू यहाँ २७५
अज्ञान्को मति यो नलेउ तिमिले * झूठो जगत् हो भनी ।
जानी श्री रघुनाथका चरणमा * खुप् ध्यान् लगाऊ पनि ॥
प्रारब्धै बलवान् बुझेर सब यो * राज्यादि गर्दै रहू ।
जो पर्छन् परिआउन्या सब कुरा * नीका ननीका सहू ॥२७६
दाज्यूको गहिराल आज तिमिले * क्रीया विधान्ले गरी ।
रुन्छन् रानिहरू बुझाउ अहिले * चाँडै अगाडी सरी ॥
यस्तै ठाकुरको हुकूम् छ भनि बेस् * रीतले बुझाया जसै ।
विस्तार् लक्ष्मणको सुन्या र झटपट्* उठ्या विभीषण तसै २७७

बिन्ती गर्न भनी जहाँ प्रभु थिया * ताहाँ तुरुन्तै गया ।
हात् जोरीकन रामका हजुरमा * क्या बिन्ति गर्दा भया ॥
हेनाथ् मर्जि भया कबूल् गरि लियाँ * आज्ञा शिरोपर् धरी ।
बिन्ती गर्छु तथापि सत्य भगवान् ! * एक् भारि शंका परी २७८

यो क्रूर हो प्रभु ! परस्त्रि पनी त हर्न्या ।
यस्को क्रिया कसरि योग्य भनेर गर्न्या ॥
बिन्ती गऱ्या यति विभीषणले र ताहाँ ।
खूशी भई हुकुम भो उहि बीचमाहाँ ॥२७९॥

बाचुन्ज्याल् रिस हुन्छ शत्रुसितको * ऐले मरी यो गयो ।
यस्को रिस् अब गर्नु छैन अब ता * मेरो त रिस् दूर् भयो ॥
रुन्छन् रानिहरू बुझाउ गर लौ * क्रीया विधान्‌ले गरी ।
पैले यै नगरी हुँदैन तिमिले * यै हो क्रियाको घरि २८०
हूकुम् येति सुन्या जसै प्रभुजिका * योग्यै हुकूम् भो भनी ।
रानीलाइ बुझाउनाकन गया * चाँडै विभीषण् पनि ॥
रानीलाइ बुझाइ सब् गरिसक्या * क्रीया विधान्‌ले गरी ।
रानी सब् घरमा पठायर गया * जाहाँ थिया राम्‌हरि २८१
खूशी खुप् रघुनाथ् पनी हुनुभयो * सम्पूर्ण खूशी भया ।
बीदा भैकन मातली पनि तहाँ * फेर् इन्द्रथ्यैं गै गया ॥
लक्ष्मणलाइ हुकूम् दिया प्रभुजिले * पैले दियाँ तापनि ।
गादीमा लगि फेर् विभीषण उपर् * ऐले तिमीले पनि॥२८२॥
देऊ लौ अभिषेक् भनी प्रभुजिको * हूकूम् भएथ्यो जसै ।
लक्ष्मणले पनि गादिमाथि लगि फेर् * दीया अभीषेक् तसै ॥

गादीमाथि बसाइ साथ लिइ फेर् * राम्चन्द्रजीथ्यैं गया ।
लक्ष्मणले रघुनाथका हजुरमा * सब् बिन्ति गर्दा भया२८३
तेस् बीचमा रघुनाथ् प्रसन्न हुनुभो * पूग्यो प्रतिज्ञा भनी ।
सुग्रीवलाइ पनी सहाउनु भयो * तिम्रो कृपा हो भनी ॥
ऐले हे हनुमान्! विभीषणजिको * मत्ले सिताथ्यैं गई ।
सब् सम्चार बताउ जाउ अहिले * सूनुन् बहूत खुश् भई ८४
जो भन्छिन् ति कुरा बताउन यहाँ * फेर् जल्दि आऊ भनी ।
हूकुम् हून गयो विभीषणजिका * मतले हनूमान् पनि ॥
सीताथ्यैं हनुमान् पुग्या रुखमनी * सीता बस्याकी थिइन् ।
पाऊमा हनुमान् पऱ्या जननिले * चुप् भै नजर् खुप् दिइन्८५
चीह्नीन् ई हनुमान हुन् भनि र खुप् * खूशी भईथिन् जसै ।
विस्तार् बिन्ति गऱ्या सबै जननिथ्यैं * श्रीरामजीका तसै ॥
भन् खूशी जननी भइन् खुशि हुँदै * क्ये बोल्न लागिन् तहाँ ।
क्या दीन्या तिमिलाइ चीज हनुमान् * खूशी गरायौ यहाँ २८६
तिम्रो यै प्रिय वाक्य तुल्य त अनेक् * रत्नादिको हार् पनि ।
लाग्दैनन् अरु चीजदेखि त ठुलो * यो चीज् दिन्या हो भनी ॥
भट् बिन्ती अरु चीजदेखि त ठुलो * श्रीराम् जगत्का पति ।
खूशी खुप् हुनुहुन्छ ता खुशि म छू * चाहिन्न दौलथ् रती २८७
यो बिन्ती सुनि खूशि भैकन तहाँ * येती अह्राइन् पनि ।
राम्को दर्शन गर्छु बिन्ति गर गै * भेट् गर्न खोज्छिन् भनी ॥
सीताका इ वचन् सुनेर हनुमान् * राम्का हजूरमा गया ।
दर्शन्को तमलब् थियो जननिको * सो बिन्ति गर्दा भया२८८

यो बिन्ती हनुमानले हजुरमा * ताहाँ गऱ्याथ्या जसै।
मर्जी भो प्रभुको विभीषणजिको * साथ् लागि आया तसै ॥
जाऊ ल्याउ सिताजिलाइ तिमिले * सब देह निर्मल् गरी।
आउन् भेट्न सिता अनेक् तरहका * भूषण् शरीर्मा धरी २८६
हूकूम्ले हनुमान्लाइ सँगमा * लीई विभीषण् गया।
जल्दी स्नान गराउनाकन तहाँ * खुप् यत्न गर्दा भया ॥
पैले स्नान गराइ शुद्ध कपड़ा * पैहाइ भूषण् पनि।
दीया सुन्दर जुन् थिया खुशि हुँदै * पैह्रन् सिताजी भनी २९०
डोली माथि सिता चढाइ खुशि भै * हींड्या विभीषण् जसै।
दर्शन् गर्न भनेर बानरहरू * आयेर घेऱ्या तसै ॥
चौकी गर्न भनेर डोलि नजिकै * जो ता रह्याका थिया।
सब् वानर्हरुलाइ तेस् बखतमा * तिन्ले हटाईदिया २९१
कोलाहल् अधिकै भयो प्रभुजिले * सून्या नजर् भो पनि।
हूकूम् भो रघुनाथको किन तहाँ * वानर् हटाया भनी ॥
आमा जानि ति हेर्दछन् सब जना * हेरून् ति वानर्हरू।
डोलीमा किन चढ्दछिन् अब सिता * पैदल् ति आउन् बरु २९२
सूनिन् स्वामितको हुकूम् र जननी * जल्दी जमीन्मा झरिन्।
पाऊ पर्छु भनेर खुप् खुशि हुँदै * साम्ने अगाडी सरिन् ॥
काम्को सिद्ध गराउनाकन सिता * माया लियाकी थिइन्।
काम् हो रावण मार्नको कुल समेत् * सब सिद्ध पारीदिइन् २९३
अग्नीमा अघि राखियाकिकन फेर् * लीन्या तहाँ सूर् गरी।
दोष् दीया रघुनाथले किन यहाँ * आयौ नजीकै भनी ॥

अर्काका घरमा बस्याकि भनि यो * दोषै दिन्भो जसै ।
लक्ष्मणलाइ हुकूम् दिइन् जननिले * विश्वासखातिर तसै ।२८४
हे लक्ष्मण! तिमि अग्नि बाल अहिले * ताहीं प्रवेश् गर्दछु ।
साँचै छू त म बाचुँला त्रुटि भया * ऐल्हे तहीं मर्दछु ॥
हूकूम् लक्ष्मणले तहाँ जननिको * सून्या र रामको पनि ।
मत् पाईकन अग्नि खुप् गरि ठुलो * बालीदिया बेस् भनी २८५
सीताजी पनि खुप् प्रदक्षिण गरिन् * रामको र भक्ती गरी ।
अग्नीको नजिकै खडा पनि भइन् * केही अगाडी सरी ॥
यौता ब्राह्मण संझि रामचरणको * ध्यान् भित्रि मन्मा धरिन् ।
सब्का साक्षि भनेर अग्निसित हात् * जोरी पुकारा गरिन् २८६
जस्ता रीतसित रामका चरणमा * ध्यान्मा रह्याकी म छु ।
तस्तै रीतसित अग्नि शीतल हउन् * तापै नलागोस् कछु ॥
बोलिन् येति र अग्निमा पसिगइन् * ताहाँ सिताजी जसै ।
सब्को ताप् मनमा भयो विरहका * बात् गर्न लाग्या तसै २८७
सीता अग्निविषे जहाँ त पसिथिन् * इन्द्रादि लोक्पाल्हरू ।
ब्रह्मा रुद्र समेत् सबै तहिं गया * जो देवता छन् अरू ॥
जम्मा भै रघुनाथको स्तुति गऱ्या * सब् देवगण्ले पनि ।
ब्रह्माले पनि खुप् गऱ्या स्तुति तहाँ * मालिक् यिनै हुन् भनी २८८
अग्नीले पनि बिन्ति खुप् सित गऱ्या * रामका चरणमा परी ।
भूषण वस्त्र अनेक् धऱ्याकि जननी * सीता अगाडी धरी ॥
सीताजीकन आजसम्म त यहाँ * राखी दियाको थियाँ ।
काम्को सिद्ध भया लिनू अब हवस् * सीताहजूरमा दियाँ २८९

अग्नीले पनि बिन्ति बात् गरि तहाँ * सीता जसै ता दिया ।
खूशी मन् रघुनाथको हुन गयो * सीताजिलाई लिया ॥
सीताजीकन काखमा लिइ तहाँ * ठाकुर् बस्याथ्या जसै ।
भक्तीले स्तुति इन्द्रले पनि गऱ्या * खूशी भया सब् तसै ३००
फेर् बिन्ती शिवले खुशी भइ गऱ्या * रामका हजूर्मा तहाँ ।
सीतानाथ्! म त आउन्याछुपछि फेर् * वाहीं अयोध्यामहाँ ॥
ऐले ई दशरथ पिता हजुरका * मिल्ला कि दर्शन् भनी ।
आया दर्शन आज बक्सनुहवस् * स्वामित् प्रभूले पनि ३०१
यो बिन्ती शिवको सुनेर दशरथ- * जीका हजूर्मा गई ।
पाऊमा शिर राखिबक्सनुभयो * अत्यन्त खूशी भई ॥
आलिङ्गन् दशरथ्जिले पनि गऱ्या * ताऱ्यौ मलाई भनी ।
बीदा भै दशरथ् खुशी भइ गया * फेर् स्वर्ग लोक्मा पनि ३०२
वानर्को जति फौज् मऱ्यो रणहुँदा * ती सब् बचाऊ भनी ।
अमृत् वृष्टि गराउनाकन हुकूम् * भो इन्द्रलाई पनि ॥
हुकूम् पाइ ति इन्द्रले पनि तहाँ * अमृत् गिराया जसै ।
वानर्का सब फौज् खडा पनि भया * रामका कृपाले तसै ॥ ३०३ ॥
बिन्ती ताहिं गऱ्या विभीषणजिले * रामका चरणमा परी ।
मंगल् स्नान् गरिबक्सियोस् हजुरले * यो स्नानको हो घरि ॥
मंगल् स्नान् गरि वस्त्र भूषण धरी * राज् आज याहीं हवस् ।
सेवक् हूँ करुणा निधान्! हजुरको * प्रीती म माथी रहोस् ३०४
बिन्ती सूनि हुकूम् भयो हुन त हो * जान्या त हो स्नान् गरी ।
क्यारूँ आज घरै छ भाइ त भरत * मै भैं जटाजूट धरी ॥

त्यो भाई पर राखि आज म यहाँ * कुन् रीतले स्नान् गरूँ ।
सुग्रीव् वीरहरु छन् इ देउ तिमिले * यिन्लाइ खिल्लत् बरु ३०५
हूकूम् येति हुँदा विभीषणजिले * रत्नादि वृष्टी गऱ्या ।
जस्ले जुन् चिज खोज्छ सो चिज दिई * सब् फौजको ताप् हऱ्या ॥
सब् फौज्लाइ बिदा पनी दिनुभयो * राम्ले कृपा खुप् गरी ।
फौज् वानरहरुको पनी तरिगयो * आनन्दमा खुप् परी ३०६
काम् सब् सिद्ध भयो यहाँ किन बसूँ * जान्छू अयोध्या भनी ।
सीता लक्ष्मण साथमा लिइ चढ्या * श्रीराम् विमान्मा पनि ॥
सुग्रीव् अङ्गदजी विभीषण समेत् * राम्का हजूरमा थिया ।
तिन्लाई पनि जाउ राज्गर भनी * बीदा प्रभूले दिया॥३०७॥
ती सब्ले तहिं विन्ति खुप् सित गऱ्या * जान्छौं अयोध्यै भनी ।
सब्को आग्रह देखि खुशि हुनुभो * ताहाँ रमानाथ् पनि ॥
पुष्पक्मा चढ आज झट्ट अब लौ * भन्न्या हुकूम् भो जसै ।
सुग्रीव् श्रीहनुमान अङ्गद चढ्या * पुष्पक् विमान्मा तसै ३०८
आफ्ना मन्त्रि लिई विभीषण पनी * तेसै विमान्मा बस्या ।
सेना सुग्रिवका पनी हुकुमले * सम्पूर्ण ताहीं बस्या ॥
सीतानाथहरू सबै बसि रही * शोभा अधिक् गर्दथ्या ।
सो शोभाकन वानरादि विरले * देखेर छक् पर्दथ्या ॥३०९॥

सेना समेत् सब विमान उपर् चढाई ।
हूकूम् दिया प्रभुजिले जब जानलाई ॥
आकाश मार्ग गरि जान विमान धायो ।
शोभा अपूर्व रघुनाथ चढ्या र पायो ॥३१०॥

दौड्यो पुष्प विमान् जसै हुकुमले * आकाश बीचमा पसी ।
पृथ्वीको पनि याद् सबै हुन गयो * तेसै विमान्मा बसी ॥
जुन् जुन् काम जहाँ जहाँ अघिभयो * याहाँ गऱ्याँ यो भनी ।
सीतालाइ नजर् गराउनु भयो * खुश् भै प्रभूले पनि ३११
यो लङ्कापुरि हो अगम् छ बलले * को जान सक्छन् अरू ।
त्यो भूमी रणभूमि हो तहिं मऱ्या * ठूला ठुला वीर्हरू ॥
ताहीं रावण कुम्भकर्ण त मऱ्या * भारी लडाइं गरी ।
लक्ष्मण्ले तहिंइन्द्रजित्कन जित्या * साम्ने अगाडी सरी३१२
सागर्मा पनि हेर सेतु बलियो * बाँध्याँ र सागर् तऱ्याँ ।
रामेश्वर् भनी नाम राखि शिवको * स्थापन् किनार्मा गऱ्याँ ॥
चार् मन्त्रीसँग ली विभीषण तहाँ * आई शरण्मा पऱ्या ।
किष्किन्धा यहि हो यसै नगरिमा * सुग्रीव राजा भया॥३१३॥
वार्ता येति गऱ्या सितासित र फेर् * तारा झिकाया पनि ।
सुग्रीव्लाइ हुकूम् भयो प्रभुजिको * तारा झिकाऊ भनी ॥
तारा रानिहरू समेत् चढिसक्या * ताहाँ विमान्मा जसै ।
सीतालाइ नजर् गराउनुभयो * वाली गिऱ्याको तसै३१४
सीता ! हेर अगाडि पञ्चवटि वेस * राक्षस् तहाँ धेर् मऱ्या ।
त्यो आश्रं पनि हो अगस्तिऋषिको * जस्ले कृपा खुप् गऱ्या॥
तेसै पल्तिरको सुतीक्ष्ण ऋषिका * धेरै ऋषी छन् जहाँ ।
त्यो हो पर्वत चित्रकूट भरतले * भेट्नै गयाथ्या जहाँ३१५
जो आश्रम् यमुनाजिको छ तिरमा * ताहाँ भरद्वाज छन् ।
गंगा हुन् इ अगाड़िकी नजरले * देख्तै खुशी हुन्छ मन् ॥

जो देख्छ्यौ अफ भन् परै सरयु हुन् * ती हुन् अयोध्या पुरी ।
हे सीते ! गर लौ प्रणाम तिमिले * भक्ति मनैमा धरी ॥ ३१६ ॥
सीताजीकन येहि रितसित सबै * खोलेरी विस्तार् गरी ।
भारद्वाज्कन गै प्रणाम पनि गऱ्या * जल्दी जमिन्मा भरी ॥
हात् जोरीकन सोध्नुभो अनि यहाँ * सब् जन् कुशल छन् भनी ।
वृद्धै हुन् महतारिको छ गति क्या * ज्यूँदै ति छन् की भनी ३१७
क्याबात् भाइ ठूला भरत् पनि भया * सबका उपर् काम् गरी ।
चौधै वर्ष रह्या व्रती भइ ति भन् * चिन्ता म-माथी गरी ॥
भारद्वाज् ऋषिले पनी सब कुशल् * थीया बताईदिया ।
हे नाथ् ! छन् कुशलै सबै भरतका * मात्रै विपत्ती थिया ॥ ३१८

हजुर पर हुनाले रोज् फलै मात्र खान्छन् ।
हजुर सरि खराऊ गादिमा राखि मान्छन् ॥
शिर भरि छ जटाजुट् वल्कलै छन् धऱ्याका ।
फकत हजुरमा छन् प्राण अर्पण् गऱ्याका ॥ ३१९ ॥
सब् जान्दछू हजुरले पनि काम् गऱ्याको ।
राक्षस् विनाश गरि भार् भुमिको हऱ्याको ॥
हो सब प्रसाद् हजुरको सब तत्त्व जान्याँ ।
जो ब्रह्म हो उ त हजूर्कन आज मान्याँ ॥ ३२० ॥
लीला गरी हजुरले अवतार् धऱ्याको ।
ब्रह्मादि देवगणको पनि ताप् हऱ्याको ॥
जो ई चरित्रकन खुश् भइ गान गर्छन् ।
संसार् समुद्र सहजै सित पार तर्छन् ॥ ३२१ ॥

ब्रह्माजिका वचनले यहि रूप धारी।
भार् हर्नुभो सकल रावणलाइ मारी॥
सब् लोकको हित हुन्या अरु काम् गरीनन्।
चौधै भुवन् हजुरका यसले भरीनन्॥३२२॥

मेरो आज पवित्र घर् पनि हवस् * एक् रात् यहाँ राज् गरी।
भोली जानु असल् हुन्याछ पुरिमा * बिन्ती छ पाऊ परी॥
भारद्वाज् ऋषिले यती हजुरमा * बिन्ती गऱ्या राज् भयो।
सन्मान् सैन्य समेतको गरिलिया * सम्पूर्णको ताप् गयो३२३

हूकूम् भो हनुमानलाइ हनुमान्! * लौ श्रृङ्गवेरमा गई।
मेरा खुप् प्रिय छन् सखा गुह तहाँ * तिन्थ्यैं समाचार् कही॥
नन्दीग्राम् गइ भाइलाइ गरि भेट् * श्रीराम आया भनी।
मेरो लक्ष्मणको सिताजिहरुको * समचार् बताऊ पनि ३२४

मैले काम जती गऱ्याँ भरतथ्यैं * सम्पूर्ण विस्तार् गरी।
वाहाँको समचार् लिईकन फिऱ्या * सन्ताप् सबैको हरी॥
हूकूम् यो हनुमानले जब सुन्या * मानिस् सरीका बनी।
जल्दी गै गुहलाइ सब् कहिदिया * आया सिताराम् भनी ३२५

फेर् जल्दी सरयू तरीकन गया * देख्या अयोध्या पनि।
नन्दीग्राम् जब देखियो तहिं गया * जान्या उहीं हो भनी॥
वैलाई रहँदा जउन् तरहले * फूल् सुक्छ फुस्रो भई।
तेस्तै रैयतिको दशा नजर भो * साहै करूणा भई॥३२६॥

देख्या तहाँ भरतलाइ जटा धऱ्याका।
श्रीरामका चरण-चिन्तन खुप गऱ्याका॥

जान्या श्रीरघुनाथले इ त सिता- * जीका कुमार् हुन् भनी ।
त्यै बीच्मा प्रभुले हुकूम् दिनुभयो * शत्रुघ्नलाई पनि ॥
हे भाई तिमि जल्दि जाइ अहिले * वाल्मीकिजी छन् जहाँ ।
सीताजी र ति वालिमकीकन लिई * दौडेर आऊ यहाँ॥ १८०॥
सीतालाइ नियाँ म दिन्छु अहिले * सीताजि नीयाँ पसून् ।
आफ्नू दोष अफालि निर्मल भई * खुश् भै सिताजी बसून्॥
हूकूम् श्रीरघुनाथको यति हुँदा * शत्रुघ्न जल्दी गया ।
वाल्मीकी ऋषिको परी चरणमा * सब् बिन्ति गर्दा भया १८१
सून्या बिन्ति र जुन् त आशयथियो * राम्को उ जानी लिया ।
पस्लिन् भोलिनियाँ सिताभनि तहाँ * उत्तर् तुरुन्तै दिया ॥
उत्तर् वालिमकिदेखि पाइकन ता * शत्रुघ्न फर्की गया ।
श्रीराम्चन्द्रजिका पुगी हजुरमा * त्यो बिन्ति गर्दा भया १८२
सून्नूभो जब उत्तरा ति ऋषिको * ताहीं प्रभूले पनि ।
पस्छिन्भोलिसितानियाँभनि हुकूम् * भो लोक जानून् भनी ॥
हूकूम् येति सुन्या र लोक पनि सब् * हेरौं तमासा भनी ।
ब्राह्मण् क्षत्रिय वैश्य शूद्र जति छन् * आया महर्षी पनि॥ १८३॥
आया वालिमकिताहिं तेहि बिचमा * सीताजिलाई लिई ।
सीताजी पनि यज्ञमा पुगिगइन् * श्रीराममा मन् दिई ॥
सीताजीकन देखि लोकहरु सब * बेस् भो बहुत् बेस् भनी ।
लाग्या बोल्न तहाँ तसै बखतमा * तीबालिमकीजी पनि १८४
श्रीराम्जीसित बिन्ति गर्दछु भनी * रामका अगाडी सऱ्या ।
सीताजी अति शुद्ध छन् भनि बहुत * बिन्ती हजूरमा गऱ्या ॥

छोरै हुन् कुश लव् पनी हजुरका * बिन्ती कहाँतक् गरूँ ।
क्यै शंका मनमा रह्या हजुरमा * गर्छू शपथ् मै बरु॥ १८५
बोल्याँ केहि झुटो भन्या हजुरमा * बोल्यो झुटो बात् भनी ।
निष्फल् आज गरून् प्रभू जतिथिया * मेरा तपस्या पनि ॥
सून्या वाल्मिकिको शपथ् र रघुनाथ् * ज्यूको हुकूम् यो भयो ।
मेरो संशय छैन कत्ति मनमा * साँचो शपथ् हुन्छ यो ८६
लंकामा पनि एक् नियाँ अघि दिंदा * जीतिन् र सीता लियाँ ।
ऐले पो अपवाद् गऱ्या र जनले * सो मेट्न छाडीदियाँ ॥
अर्काले अपवाद् गऱ्या भनि उसै * साँचै सिता त्याग् गऱ्या ।
तेस्तै भो त पनी रिसानि नहवस् * यसमा क्षमापन् गऱ्या ८७
मेरै पुत्र त हुन् दुवै इ कुश लव् * जम्ल्याह पैदा भया ।
सीताजी पनि शुद्ध छन् सब बुझयाँ * सन्देह मेरा गया ॥
हुकूम् यो रघुनाथको हुन गयो * हुकूम् भयो तापनि ।
सीताजी त तयार् भइन् तस बखत् * पर्छू म नीयाँ भनी १८८
ब्रह्मादीहरु लोकपाल्हरु सबै * आया सिता छन् जहाँ ।
ब्रह्मादीहरुका अगाडि ति सिता * क्यै बोल्न लागिन् तहाँ ॥
जस्तो भक्ति छ रामका चरणमा * मेरो उ जानीलिउन् ।
साँची छू त मलाइ जान अहिले * बाटो भुमीले दिउन् १८९
यस्तो वाणि सिताजिको पृथिविले * सूनी सकीथिन् जसै ।
बेस् सिंहासन एक् तयार गरि सिता * जीलाई राखिन् तसै ॥
त्यै सिंहासनमा बसी जननिले * औदास्य मन्मा लिइन् ।
सीताजीकन जानलाइ बढिया * बाटो भुमीले दिइन् १९०

यस् रीत्ले जननी सीता जब गइन् * खुप् मोहमा लोक् पऱ्या।
इन्द्रादिहरुले त खु खुप्शि हुँदै * बेस् पुष्पवृष्टी गऱ्या ॥
सीताको तहिं शोक् गऱ्याप्रभुजिले * संसारि जस्ता भई।
ब्रह्मादीहरुले बुझाउनुभयो * साम्ने अगाडी गई ९१
बूझीबक्सनु भो र शोक् पर गरी * बाँकी रह्याका थिया।
सब् सम्पूर्ण गरेर दान् दिनुभयो * ब्राह्मण् तहाँ सब् थिया ॥
जो ता यज्ञमहाँ थिया जनहरू * धन्ले ति पूर्णै भया।
बीदा बक्सनुभो र देशि जति हुन् * बीदा हुँदै सब् गया ९२
सीताजी सितको वियोग् जब भयो * श्री राम् विरक्तै भया।
यज्ञस्थान्कन छोडि पुत्र सँग ली * जल्दी अयोध्या गया ॥
कौसल्या जननी पनी खुशि भइन् * श्रीराम आया भनी।
लक्ष्मण् अन्त्य निहारि ज्ञानकि कथा * चर्चा गरिन् बेस् भनी ९३
कौसल्या रामलाई त्रिभुवन पतिका नाथ् रमानाथ जानी
कुन् पाठ्ले बन्ध छुट्ला भनिकन मनमा खुप् ठुलो पीर मानी ॥
आइन् पाऊ परी फेर् विनति पनि गरिन् रामजीका चरण्मा।
कुन्पाठ्लेबधछुट्छन् यतिमकनकहूआजआयाँ शरण्मा ॥९४
यस्तो बिन्ती सुनी खुपखुशि पनि हुनुभो बन्ध छुट्न्या उपाई।
सब्भन्दा येहि ठूलो भनि कहनुभयो भक्तियोग् माइलाई ॥
भक्तीयोग्मा पनी जो त्रिगुण रहितकी भक्ति छन् सोहि गर्नू।
गङ्गाजीका प्रवाहै सरि गरि यस मन्लाइ मैमाथि धर्नू ॥९५॥
मै माथी चित्त धर्न्या जनहरु सहजै भक्तिमान् होइजान्छन्।
चार् छन् मुक्ती ति चारैकन पनि तिनले तृण् सरीका त मान्छन्॥

मै माथी चित्त धर्न्या भनिकन बुझिल्यौ साधना गर्नमाहाँ ।
तेस्को वर्णन् म गर्छू अब सब बुझिल्यौ सब् खुलस्ता छ याहाँ १९६
इच्छा काहिं नराखनू विषयमा * सब् धर्म थाम्नू पनि ।
सत् काम् गर्नु विचार राख्नु मनमा * हिंसा घटीया भनी ॥
मेरो दर्शन गर्नु खुप् स्तुति पुजा * गर्नू स्मरण् खुप् गरी ।
पाऊमा परि दण्डवत् गरिलिनू * जान्छन् यसैले तरी १९७
सब् प्राणीहरुमा म छू यति विचार् * राख्नू असङ्गी भई ।
साँचो बोल्नु, बड़ा मिल्या चरणमा * पर्नू तुरुन्तै गई ॥
गर्नू दुःखि-उपर् दया सम भया * तिन्मा त मैत्री पनि ।
सेवा गर्नु यमादिको पनि असल् * बाटा यिनै हुन् भनी ॥१९८
वेदान्तैकन सुन्नु गर्नु खुशि भै * कीर्तन् पनी नामको ।
सज्जनको सतसङ्ग गर्नु-दिन दिन् * सोझो भई कामको ॥
मेरो देह भन्याउन्या अति ठुलो * छोड्नू अहङ्कार् पनि ।
यो मन् शुद्ध गराइ बुझ्नु जति छन् * सब् धर्म मेरा पनि ॥१९९
जस्तै गन्ध रहन्छ फूलहरुमा * फूल्मा रह्याको पनि ।
वायूका वशमा परीकन उडी * आऊँछ नाक्मा पनि ॥
तेस्तो योग विषे दियो मन भन्या * त्यै योग वायू बनी ।
गन्धै झैं गरि मन् उडायर सहज् * ल्याऊँछ मैमा अनि ॥२००
सर्वात्मा म छु जो त येति नबुझी * पूजा फकत् गर्दछन् ।
तीदेखी खुश हुन्न कत्ति ति गरुन् * व्यर्थै शरीर् हर्दछन् ॥
पूजा गर्नु त तेहि हो उ नगर्न्या * तिन्ले पुजा कुन् गर्न्या ।
मृत्यूको भय हुन्छ तिनकन सदा * संसारमा ती पर्न्या २०१

सर्वात्मा म छु येति जानि सब् जीव्-* लाई नमस्कार् गरून् ।
जीवात्मा परमात्म एक् बुझि सदा * अन्तःकरणमा धरून् ॥
मातर् ! मार्ग त तर्नलाइ सजिलो * यै हो छ यस्तै गरी ।
संसार्का कति पार् गया सहजमा * संसार सागर् तरी ॥२०२॥
याहाँलाइ त भन्न् सहज् छ म त हूँ * पुत्रै र पुत्रै भनी ।
संझी मात्र दिनू हवस् यति गऱ्या * छुट्नन् इ बन्धन् पनि ॥
कौसल्या रघुनाथको यति हुकूम् * सूनिन् र मुक्तै भइन् ।
कैकेयी पनि देह छोडि दशरथ् * जीका हजूर्मा गइन्२०३

तस्तै सुमित्रा दशरथ्कि रानी ।
संसारका सौख् पनि तुच्छ जानी ॥
प्रारब्धका बन्धनलाइ तोडी ।
पौंचिन् पतीथ्यैं यहिं देह छोडी ॥२०४॥

पापात्मा अति दुष्ट शत्रु सबका * तीन् कोटि गन्धर्व छन् ।
ई सब्लाइ मराउनू अब पऱ्यो * बढ्नन् नमाऱ्या त भन् ॥
यस् सुर्ले रघुनाथका हजुरमा * एक् दिन् युधाजित् गया ।
पाऱ्या बिन्ति भरत् गई हुकुमले * गन्धर्व मार्दा भया ॥२०५॥
पूरी एक् तहिं पुष्करावति बनी * पुष्कर् त राजा भया ।
अर्की तक्षशिला पुरी बनि तहाँ * राज् तक्ष गर्दा भया ॥
छोरा पुष्कर तक्षलाइ तिमिले * राज् गर्नु याहीं भनी ।
फर्की श्रीरघुनाथका हजुरमा * पौंच्या भरत्जी पनि २०६
लक्ष्मण्लाइ पनी हुकूम् तहिं भयो* भाई ! तिमीले पनि ।
छोरालाइ लगेर पश्चिम मुलुक्- * मा राज्य देऊ भनी ॥

पश्चिममा अति दुष्ट भिल्लहरु छन् * तिन्लाइ संहार् गरी ।
दुई पूरि बनाउनू पनि तहाँ * रत्नादि दौलत् भरी ॥ २०७
राजा अंगद चित्रकेतु इ दुवै- * लाई बनाया तहाँ ।
छोरालाइ रजाइँ दीकन तिमी * आया तुरुन्तै यहाँ ॥
हूकुम् श्रीरघुनाथको यति हुँदा * लक्ष्मण् तुरुन्तै गया ।
जो जो हुन् अति दुष्ट भिल्लहरु सब् * तिन्लाइ मार्दा भया २०८
पूरी दूइ बनाइ लक्ष्मणजिले * ताहीं रजाइँ दिया ।
छोरालाइ र जल्दि लक्ष्मण गया * जाहाँ रघूनाथ् थिया ॥
एक्दिन् काल् ऋषि भै भएर रघुनाथ् * ज्यूलाइ भेट्छू भनी ।
आया श्रीरघुनाथ्जिका पुरिमहाँ * चिन्दैन कोही पनि ॥ २०९
पौंच्या द्वार तलक् जसै प्रभुजिका * चौकी त लक्ष्मण् थिया ।
द्वार्मा एक् ऋषि छन् खडा भनि गई * हाजिर् पुऱ्याई दिया ॥
हाजिर् सूनि हुकूम् भयो प्रभुजिको * ल्याऊ तुरुन्तै भनी ।
लक्ष्मण्ले पनि जल्दि गै हजुरमा * ल्याया इनै हुन् भनी २१०
पौंच्या श्रीरघुनाथका हजुरमा * काल् विप्ररूप्ले जसै ।
'त्वं वर्धस्व' भनेर आशिष दिया * श्रीरामलाई तसै ॥
सत्कार् श्रीरघुनाथले पनि गऱ्या * पैल्यै कुशल् क्षेम् गरी ।
तिन्को आशय बुझ्नलाइ हरिले * सोध्या अगाडी सरी २११

कुन् काम गर्नू छ र जल्दि आई ।
भेट् गर्नुभो आज यहाँ मलाई ॥
हूकुम् प्रभूको जब येति पाया ।
ती काल् पुरुष्ले पनि बिन्ति लाया ॥ २१२॥

हे नाथ्! चरण्मा अहिले म पर्छु ।
एकान्त बक्स्या हुँदि बिन्ति गर्छु ॥
मेरा कुरा कोहि नसुन्न पाउन् ।
सुन्नन् त मारीदिनु दूर जाउन् ॥२१३॥
ती काल्पुरुष्को यति बिन्ति सूनी ।
बेसै इ भन्छन् भनि भित्र गूनी ॥
हुकूम् भयो लक्ष्मणलाइ ताहाँ ।
कोही नआउन् अब भित्र याहाँ ॥२१४॥
क्वै आउनन् भित्र त मर्न जानन् ।
अत्यन्त गोता बिहकै ति खानन् ॥
एकान्ततक् कोहि यहाँ नआउन् ।
यो उर्दि सब्ले तिमिदेखि पाउन् ॥२१५॥
सून्यो हुकूम् येति र काल बोल्यो ।
आफ्ना सबै आशय ताहिं खोल्यो ॥
हे नाथ्! म हूँ काल् सबलाइ हन्र्या ।
मालुम् छ यो सब् किन बिन्ति गर्न्या ॥२१६॥
ब्रह्माजिको बिन्ति लिएर आयाँ ।
खुप् भाग्यले दर्शन आज पायाँ ॥
ब्रह्माजिको बिन्ति म आज गर्छु ।
होला हुकूम् जो उहि शीर धर्छु ॥२१७॥

सृष्टीदेखि अगाड़ि पूर्ण रुपले * आत्मा स्वरूप् एक् थियो ।
नारायण् जलशायि रूप त पछी * यै सृष्टि खातिर् लियो ॥

स्वामितका तहिं नाभिका कमलमा * एकलै म पैदा भयाँ ।
सृष्टी गर्न हुकुम् हुँदा हुकुमले * लोक् सृष्टि गर्दै गयाँ २१८
जसले दुःख दिया प्रजाकन तिनै- * लाई म मारूँ भनी ।
युग् युग्मा अवतार् समेत् लिनुभयो * यस्तै अगाडी पनि ॥
ऐले यो अवतार् पनी पृथिविकै * भार् हर्न खातिर् धरी ।
भूको भार् पनि टारिबक्सनुभयो * सब् दुष्ट संहार् गरी २१९
एघारै म हजार वर्ष रहुँला * जाँदा हुकुम् जो भयो ।
सोही वर्ष गणीतले गनिलिदा * एघार हज्जार् गयो ॥
बस्नैको अरु मन् छ पो त भगवान्! * इच्छा हजूर्‌को हवस् ।
याहाँ आउन मन् भया बखत भो * लौ जल्दि पाल्नूहवस् २०
ब्रह्माको विनती सुनेर रघुनाथ् * हाँसी तिनै कालका ।
साम्ने बातचित गर्नुभो पनि बहुत् * सब् जानकै चालका ॥
दुर्वासा यहि बीचमा तहिं गया * राम्‌लाइ भेट्छु भनी ।
लक्ष्मण् द्वारमहाँ थिया र ऋषिले * तिन्‌लाइ भेट्या पनि २२१
लक्ष्मण्‌लाइ तहाँ भन्या त ऋषिले * हाजिर् गराऊ भनी ।
लक्ष्मण्‌लाइ कठिन् भयो कठिनले * बिन्ती लगाया पनि ॥
भित्रै जान हुँदैन जाउँ कसरी * विस्तार् कहाँतक् गरूँ ।
जुन् काम् खातिर आज आउनु भयो * सो पूर्ण गर्छू बरु ॥२२२॥
लक्ष्मण्‌ले यति ती मुनीकन तहाँ * बिन्ती गऱ्याथ्या जसै ।
दुर्वासा ऋषि हुन् बडा त पनि खुप् * रीसाइ बोल्या तसै ॥
लैजाऊ अभ्र रामका चरणमा * वाहीं शरण् पर्दछु ।
लैजान्नौ त मलाइ भित्र त कुलै- * को भस्म भन्न् गर्दछु २२३

सून्या येति वचन् र लक्ष्मणजिले * मन्‌मा विचार् यो गऱ्या ।
कुल्‌कोनाश्‌नहवस् कुशल् सब रहून् * क्या हुन्छ मै एक् मऱ्या ॥
ऐले भित्र त जान निश्चय पऱ्यो * यस्तो विचार् खुप् गरी ।
लक्ष्मण् भित्र गया जहाँ प्रभुथिया * त्रैलोक्यका नाथ्‌हरि २२४
द्वार्‌मा हाजिर छन् ऋषी भनि तहाँ * बिन्ती गऱ्याथ्या जसै ।
ती काल्‌लाइ बिदा गरेर रघुनाथ् * बाहीर आया तसै ॥
दुर्वासासित भेट् भयो जब तहाँ * राम्‌ले नमस्कार् गरी ।
सोध्नू भो ऋषिलाइ आउनु भयो * कस्तो इरादा धरी २२५
इच्छा भोजनमा थियो ति ऋषिको * सो बिन्ति गर्दा भया ।
भोजन् बक्सनुभो र भोजन गरी * ऋषी खुशी भै गया ॥
यै बीच्‌मा तहिं संझि बक्सनुभयो * राम्‌ले प्रतिज्ञा पनि ।
लक्ष्मण्‌लाइ कसोरि मारुँ अहिले * यै हो विपत्ती भनी २२६
सन्ताप् श्रीरघुनाथमा जब पऱ्यो * लक्ष्मण् चरण्‌मा पऱ्या ।
मारीबक्सनुहोस् मलाइ भगवान्! * यो ताहिं बिन्ती गऱ्या ॥
ठूलो भन्नु छ धर्म हो उहि रहोस् * बिन्ती गऱ्या यो जसै ।
यस्को निश्चय गर्नलाइ हुनगो * ठूलो सभा एक् तसै २२७
सब्‌ले बिन्ति गऱ्या बुझी हजुरमा * त्याग् मात्र गर्नू हवस् ।
मारीहाल्नु त योग्यछैन अधिराज् * ज्यान् आज इन्को रहोस् ॥
ज्यान् हर्नू र वियोग गर्नु इ बरा- * बर् हुन् भन्याथ्या जसै ।
लक्ष्मण्‌लाइ पनी बिदा दिनुभयो * श्रीरामजीले तसै ॥२२८॥
लक्ष्मण्‌जी सरयू गया तस बखत् * राम्‌का चरण्‌मा परी ।
प्राणायाम् तिरमा गरीकन गया * जाहाँ रहन्थ्या हरि ॥

यस् रीतले नरलोक छोडिकन ती* लक्ष्मण् जसै ता गया ।
भेट्ना-खातिर शेषका हजुरमा * ब्रह्मादि जम्मा भया २२९
लक्ष्मण्जी सितको वियोग् जब भयो* दुःखी सरीका बनी ।
साहै दिक्क भएर मन्त्रिहरुथ्यैं * यस्तो हुकूम् भो पनि ॥
जान्छू लक्ष्मण छन् जता म त उता* यो राज् भरतले गरून् ।
राजा भैकन जो प्रजाहरु इ छन् * यिन्को सबै ताप् हरून् २३०
जस्सै येति हुकूम् सुन्या भरतले * मूर्छित् सरीका भई ।
यस्ता बिन्ति गऱ्या तहाँ भरतले * राम्का हजूर्मा गई ॥
बस्थ्याँ स्वामितलाइ छोडि म कहाँ * तीन् लोक बक्स्या पनि ।
छोरै छन् अधिराज् प्रभू ! हजुरका * राज्का इनै हुन् धनी २३१
जेठा पुत्र हजूरका इ कुश वीर् * राज् कोसलैमा गरुन् ।
उत्तर्मा बसि राज् गरी इ लवले * सम्पूर्णको ताप् हरुन् ॥
दूई भाइ चलाउँछन् इ जति छन् * सब् राज्यको काम् यहाँ ।
दूत् जाउन् मथुरा विषे किन उसै * शत्रुघ्न बस्छन् तहाँ २३२
सूनून् लक्ष्मणको पनी ति समचार् * पौंच्या परम् धाम् भनी ।
साथै जान हजूरका चरणमा * दौडेर आऊन् पनि ॥
यस्तो बिन्ति हजूरमा भरतले * गर्दा प्रजाले पनि ।
पाया थाह र ताप् भयो मनमहाँ * जानन् कि छोडी भनी २३३
बिन्ती एक वशिष्ठले तहिं गऱ्या * लान्छन् कि छोड्छन् भनी
रुन्छन् सब् दुनियाँ यहाँ हजुरको * पाउन् प्रसाद् ई पनि ॥
सुन्नूभो तहिं यो वशिष्ठ ऋषिले * बिन्ती गऱ्याको जसै ।
ठाकुर्को पनि खुप् दया हुन गयो * ती सब् प्रजामा तसै २३४

इच्छा क्या छ बताउ पूर्ण गरुँला * भन्न्या हुकूम् भो पनि ।
सब्ले बिन्ति गऱ्या प्रभू सित तहाँ * सब् साथ जान्छौं भनी ॥
इच्छा पूर्ण हवस् भनी हुकुम भो * सब् ती प्रजा खुश् भया ।
उत्तर् कोसलमा दुवै ति कुश लव् * राज् गर्न खातिर् गया २३५
केही दूत् मथुरा तरफ् प्रभुजिले * जल्दी पठाईदिया ।
दूत् पौंच्या रघुनाथका हुकुमले * शत्रुघ्न जाहाँ थिया ॥
दूत् देखी समचार् सुन्या प्रभुजिको * शत्रुघ्न जीले जसै ।
छोरालाइ रजाइँ दी प्रभुजिथ्यैं * ती जान आँथ्याँ तसै ॥२३६
जेठा पुत्र सुबाहुलाइ मथुरा * नै राजधानी दिया ।
युपलाई विदिशा दिया र ति गया * जाहाँ रघूनाथ् थिया ॥
जल्दी गैकन पाउमा परि तहाँ * यो बिन्ति लाया पनि ।
साथै जान भनेर आज रघुनाथ् * आयाँ हजूर्मा भनी २३७
लौ मध्याह्न हुँदा तयार् भइ रह्या * यस्तो हुकूम् भो तहाँ ।
आया राक्षस ऋक्ष वानरहरू * सब् एति सुन्दा महाँ ॥
जान्छौं आज सँगै प्रभो ! हजुरका * यै बिन्ति सब्ले गऱ्या ।
सुग्रीवजी पनि बिन्ति गर्न रघुनाथ-* जीका अगाडी सऱ्या ३८
अङ्गद्लाइ रजाइँ दीकन यहाँ * जाँलाँ म साथै भनी ।
आयाको छु दयानिधान् ! हजुरमा * यो बिन्ति लाया पनि ॥
सुग्रीवको अरुको ति ऋक्षहरुको * बिन्ती सुन्याथ्या जसै ।
प्यारा भक्त जहाँ विभीषण थिया * ताहाँ गया राम् तसै ३३९
ताहाँ गैकन यो हुकूम् पनि भयो * बस्नू तिमीले यहीं ।
प्रारब्धै बलवान् छ जान सबको * छुट्तैन सो ता कहीं ॥

जाहाँसम्म रहन्छभूमि तहिं तक् * राज् गर्नु याहीं बसी ।
शिक्षा गर्नु सबै प्रजाकन बहुत् * अन्यायिलाई कसी ॥२४०।
यस्को उत्तर छैन चुप् रहु भनी * हूकूम् भएथ्यो जसै ।
तेसै ठाउँमहाँ तुरुन्त हनुमान् * जीलाइ देख्या तसै ॥
हूकूम् भो हनुमानलाइ हनुमान् !* चीरञ्जिवी भै रह्या ।
मेरो जुन् छ हुकूम् उ गर्न सब दिन् * अत्यन्ततत्पर् भया ॥ २४१॥
बुद्धीमान् तहिं जाम्बवान् पनिथिया* जालाँ म साथै भनी ।
तिन्लाई पनि यो हुकूम् हुन गयो * बस्नू तिमीले पनि ॥
द्वापर्मा कछु युद्ध गर्नु तिमिथ्यैं * पर्न्याछ सोही गरी ।
स्वर्गैंमा तिमि जाउला पछि भन्या * ऐले त यस्तै परी ॥२४२॥
यस्ता रीत् सित जो अहाउनु थियो* सो सब् अहाई वरी ।
सब् प्राणीहरु साथमा हिंड भनी * हूकूम् भयो तेस् घरी ॥
हूकूम् श्रीरघुनाथको जब सुन्या * आनन्द मानी तब ।
आफाफ्ना परिवार् लिएर सँगमा * जम्मा भए ती सब ॥२४३

आफ्ना पुरोहित् ति वशिष्ठलाई ।
हूकूम् भयो मङ्गल गर्नलाई ॥
मङ्गल् अनेकन् ऋषिले गराया ।
राम् स्वर्ग जानाकन निस्कि आया ॥२४४॥
सीताजिले रूप् अघिको छिपाइन् ।
लक्ष्मी भई वाम्तिर बस्न आइन् ॥
दक्षिण् तरफ् भूमि बसिन् हरीका ।
सब् ताहिं आया भुवनै भरीका ॥२४५॥

शस्त्रास्त्र सब् ती पनि रूप धर्दै ।
हिंड्दा तहाँ मंगल शब्द गर्दै ॥
गायत्रि चार् वेद् पनि ताहिं आया ।
रूप् धारि मंगल् यश शब्द गया ॥२४६॥
जो ता अयोध्या पुरवासि थीया ।
तिन्ले सँगै सब् परिवार लीया ॥
बालो बुढो कोहि रहेन ताहाँ ।
सब्को गयो मन् उहिं राममाहाँ ॥२४७॥
सुग्रीव्हरू वानर मुख्य आया ।
सब् पाप छूट्यो भनि हर्ष पाया ॥
जो लोक् थियो राम्सित जान गैगो ।
गुल्जार् अयोध्या पनि शून्य भैगो ॥२४८॥
छोडी शहर् क्यै गइ भूमिमाहाँ ।
देख्या प्रभूले सरयू र ताहाँ ॥
आफ्नो विराट् रूपकन संफिलीया ।
आफै त सब्का पनि नाथ थीया ॥२४९॥
ब्राह्मा ऋषी देव र सिद्ध आया ।
आकाश् विमान्ले भरि छुट्टि छाया ॥
श्रीराम् उपर् खुप्सित पुष्पवृष्टि ।
सब् गर्न लाग्या उहिं लाइ दृष्टि ॥२५०॥
गाऊँ छन् कहिं नाच्तछन् प्रभुजिकै * यश् मात्र कीर्तन् गरी ।
यै बीच्मा रघुनाथ् पस्या सरयुमा * सब्का अगाडी सरी ॥

ब्रह्माको पनि ताहिं औसर पर्‍यो * हात् जोरि बिन्ती गर्‍या।
सब्को ताप् अब गैगयो सकल लोक् * आनन्द सागर् पर्‍या॥ २५१
स्वामित्ले अब विष्णुको रुप लिने * बेला भएथ्यो भनी।
पार्‍या बिन्ति र होइ बक्सनु भयो * श्रीराम् चतुर्भुज् पनि॥
जो शत्रुघ्न भरत् थिया दुइ जना * ती शंख चक्रै बनी।
स्वामित्का तहिं बाहुमा बसिगया * बस्न्या यहीं हो भनी॥ २५२
ब्रह्माएडै सब देवगण् खुशि भया * यो रूप देख्या जसै।
ब्रह्मालाइ हुकूम् गर्‍या प्रभुजिले * सब् प्राणि खातिर् तसै॥
हे ब्रह्मन् जति जन् थिया शहरमा * सब् साथ छान्छौं भनी।
आया सब् परिवार् लिएर सँगमा * लाग्या पछाडी पनि॥ २५३॥
यिन्लाई शुभ लोक देउ तिमिले * सत् लोकमा बास् गरून्।
आफ्ना सब् परिवारले सँग रही * आनन्दमा ई परून्॥
ब्रह्माले प्रभुको हुकूम् यति सुनी * हूकुम् शिरोपर् लिया।
सब्लाई सुखभोग गर्नकन एक् * लोकै खटाई दिया॥ २५४॥
ती लोक्ले पनि खुश् भएर सरयू- * मा स्नान सब्ले गर्‍या।
जुन् सान्तानिक लोक हो उहिं पुगी * आनन्दमा ती पर्‍या॥
सुग्रीव् सूर्य्यविषे गई मिलिगया * अंशै हुनाले गरी।
भूभार् यै रितले हरेर रघुनाथ् * वैकुण्ठ पौंच्या हरि॥ २५५
येती मात्र कह्या सदाशिवजिले * ती पार्वतीथ्यै पनि।
जस्ले यस्कन पाठ गर्छ मनले * अत्यन्त खूशी बनी॥
तिन्का जन्म सहस्रका जति त छन् * पाप् भस्म हुन्छन् भनी।
सब् षट्शास्त्र बताउँछन् पढिलिया * तर्छन् दुनीयाँ पनि॥ २५६

शम्भूले पार्वतीथ्यैं खुशि भइ बहुतै प्रेम पूर्वक् कह्याको ।
संसार् पार् तर्नलाई सबकन सजिलो साँघु भैं भै रह्याको ॥
जानी यस्लाइ जो ता जनहरु बहुतै प्रेमले पाठ गर्छन् ।
संसार्का सौख्य सब् भोग् गरिकन दुनियाँ सब् सहज् पार तर्छन्

## ❀ इतिश्री उत्तर काण्ड समाप्त ❀

चार् कोस्का हनुमान देखि सुरमा ❀ बिस् कोसको मुख् गरिन्। श्लोक ८

जस्को हुन्छ हरेक कार्यहरुमा * पूजा प्रथम् मुख्य भै ।
भक्तैको सब विघ्न टारनु परे * जो तुल्य देखिन्न कै ॥
अंकुश् पाश र लड्डु फेरि बिमिरो * लीई मुसामा चढी ।
फिर्ने श्रीगणनाथका चरणमा * पर्छू शरण् यो घरि ॥१॥
एक् दिन् शेषजिका पुगेर नजिकै * वात्स्यायनैले पनि ।
बिन्ती गर्नु भयो बडो विनयले * प्रश्नै म गर्छू भनी ॥
श्रीराम्चन्द्रजिको कथानक अघी * राखी म माथी दया ।
आज्ञा गर्नु भयो प्रभो ! हजुरले * पूर्वार्धमा जो थिया ॥२॥
श्रीसीतापतिको सुकोमल कथा * रूपी अमृत् पान् गरी ।
चित्तैलाइ म तृप्ति गर्दछु भनी * मन्मा इरादा धरी ॥
आयाको छु प्रभो ! कृपा हुन गए * सूनी सबै ती कथा ।
मेरो यो हट्ने थियो अति जबर * जन्मादिको दुर्व्यथा ॥३॥

यस्ता ती मुनिका सुनेर बिनती * संझेर रामायण ।
रोमाञ्चै भइ शेषको जिउमहाँ * थालिन् जमीन् काँपन ॥
हर्षाश्रू जब डल्फलाउन गयो * नेत्रैमहाँ वेगले ।
गद्गद् भैकन सुन्नु बोलनु समेत् * छोड्नू भयो शेषले ॥४॥
क्षण भर् चुप् भइक्यै हटेर जब गो * हर्षाश्रुभाव्को क्रम ।
शेष्ले भन्नुभयो अती खुशि भई * आफ्नो हटाई श्रम ॥
ब्रह्मर्षे ! अहिले सवाल् जब सुनें * रामायणै तर्फको ।
भक्ती साथ तपाईंका र मनमा * साह्रै ठुलो हर्ष भो ॥५॥
संझन्छू म त पूर्व संचित क्वही * मेरै हुँदा पुण्यले ।
पाल्नूभो अहिले तपाईं यसरी * गद्गद् भई भक्तिले ॥
खूशी छू म गुणानुवाद गरने * पाएँ सितानाथको ।
गङ्गाजल् यदि पान गर्न मिलदा * मूर्खैं विना छोड्छ को ॥६॥
गर्नू होस सवाल कुन् विषयका * सुन्ने भयो मन्सुब ।
भन्छू त्यो अति हर्ष साथ म यहाँ * जाने जतीको सब ॥
यस्तो शेषजिको वचन् सुनि तहाँ * वात्स्यायनैले पनि ।
प्रश्नै गर्नु भयो बहुत् खुशि भई * चित्तैमहाँ क्यै गुनी ॥७॥
आज्ञा भो पहिले कृपा गरि ममा * सीतापतीको सब ।
जन्मैदेखि लिएर रावणकनै * मारी लिई गौरव ॥
खुश् भै राजमहाँ फिरी जनकजा * साथैमहाँ राज्यको ।
भोग् गर्दा अपवाद् भयो र सहसा * सीता पनी त्यागनुभो ॥८॥
तेस्का बाद पनी ठुलो खरचले * झट् अश्वमेधै गरी ।
आफ्ना धाममहाँ पुगे रघुपती * भार् भूमिको सब हरी ॥

इत्यादि प्रभुबाट सब् सुनिसकेँ * त्यो अश्वमेध्को अब ।
विस्तार्पूर्वक सुन्न मन् हुन गयो * आज्ञा हवस् सो सब ॥९॥
वात्स्यायन् मुनिको सुनी सब सवाल् * श्रीशेषजीले पनि ।
भन्नूभो सुन हे मुने ! सब कथा * एकाग्र चित्तै बनी ॥
सीता त्याग गरी उदासि भइ क्यै * राज्काजको काममा ।
श्रीराम्चन्द्रजिको थिएन अभिलाष् * एक् दिन् यही बीचमा ॥१०
दर्शन् मिल्छ भनी मुनीश्वरहरू * आएर बस्थे तहाँ ।
राम्ले यो त अगस्तिका सँगमहाँ * सोध्नूभयो हर्षमा ॥
रावण् हो कुन यो मुने ! कसरि यो * पैदा भयो कुन् कुल ।
त्यस्को हो म उपर् कृपा गरि अती * वर्णन् हवस् बिल्कुल ॥११
यस्तो श्रीरघुनाथको सुनि तहाँ * प्रश्नै अगस्ती मुनी ।
भन्नू हुन्छ खुशी भएर बहुतै * मन्मा क्यही बेर् गुनी ॥
हे राम्चन्द्र ! बताउँछू म खुशिले * मर्जी हुनाले अब ।
रावण्को कुल जन्म जो छ मइले * जाने जतीको सब ॥१२॥
ब्रह्माका सुत जो पुलस्त्य ऋषि हुन् * उन्का सुतै विश्रवा ।
उन्की स्त्री दुइटी हुँदा हरबखत् * लड्थे लिई खुब् दगा ॥
पत्नी जेठि जऊन हुन् उनमहाँ * पैदा कुबेर्को भयो ।
शंकर्लाइ खुशी गरेर उनको * दिक्पालमा नां पुग्यो ॥१३
कान्छी कैकसिनामकी जउन थिन् * राक्षस्कि छोरी कडा ।
तिन्मा रावण् कुम्भकर्ण विभिषण् * जन्मे लडाका बडा ॥
पैदा राक्षस वंशमा हुन गयो * रावण् हरूको अति ।
ब्राह्मण्को रति भर थिएन गुण क्यै * सब राक्षसी थ्यो मति १४

एक् दिन् पुष्पकमा चढेर खुशि भै * आए कुबेर्जी तहाँ ।
पस्रे पाउमहाँ पिता र जननी- * का झट् पुगी हर्षमा ॥
दर्शन् आज मिल्यो हजूरहरुको * क्या धन्य लौ यो दिन ।
इत्यादी वचनै कहेर ति पनी * फर्के खुशी भैकन ॥ १५ ॥
देखी रावणले भलादमि बडा * खान्दानका ती पुरा ।
आमाका सँगमा गएर दङ भै * सोद्धो भयो ई कुरा ॥
मूमा ! आज बुवाजिको नगिचमा * बात्चित् क्यही बेर् गरी ।
को हो हप्हपि लागदो पुरुष त्यो * फर्क्योविमान्माचढी ॥ १६
यस्तो बात सुनेर कैकसि पनी * भन्दी भइन् क्रोधले ।
मेरो सौतिनिको उही सुत बुझिस् * सुन् के गर्‍यो तेसले ॥
खूशी शङ्करलाइ पारि सहजै * दिक्पालकोस्थान्लियो ।
आमाको कुललाइ हेर्-न उसले * उज्ज्वल् बनाई दियो ॥ १७
केवल् देख्छु म ता तँलाइ हरदिन् * सुत्नू र खानू तिर ।
आसक्तै अरु कार्य छोडि भनुँ के * लिन्छू म दिल्मा पिर ॥
छोरा जन्मनु ता सुपुत्र जनमून् * जस्बाट कीर्ती चलोस् ।
वन्ध्या की रहनू बरू अति असल् * प्रख्यात् नहोस् केहि दोष्
लायक् पुत्र गरुड् भएर विनता * निःशंक भै बस्तछिन् ।
हज्जार् पुत्र भएकि कद्रु बिचरी * हर्दम् रुँदै बस्तछिन् ॥
जन्माईकन धेर पुत्र घरघर् * कूकुर्नि खान्छे कुलो ।
एकै पुत्र भएर हेर् न बघिनी * छोड्दीन कैले थुलो ॥ १८ ॥
आमाका इ वचन् सुनेर झटपट् * रावण् ठुलो स्वर् गरी ।
भन्दो भो बसनोस् मुमा घरमहाँ * ऐले ठुलो मन् गरी ॥

कत्रो काम कुबेरले गरिलियो * लंका छ तेस्को पुरी ।
देख्नोस् आज तपै गरी त्रिभुवनै * पार्दिन्छु लौ थर्थरी ॥२०॥
आमासीत भनेर एति सँगमा * भाईहरू लीकन ।
वन्मा गैकन दश् हजार् वरषतक् * हावा गरी भोजन ॥
सूर्यैतर्फ दिएर दृष्टि हरदं * ऊभी जसै तप् गऱ्यो ।
तेस्को त्यो तपले प्रचण्ड हुन गै * सारा त्रिलोकै पिऱ्यो २१
यै रीतले तब कुम्भकर्ण र बिभी-* षण्ले पनी तप् गरे ।
यिन्लाई वरदान् दिनै भनि तहाँ * ब्रह्माजि साम्ने भरे ॥
तीन् लोक्मा जति छन् सुरासुर सबै * दुर्जेय तिन्मा म हुँ ।
दुर्बल् मानिसको डरै छइन क्यै * तिन्मा म फेर् के कहूँ ॥२२
ब्रह्माले पनि सो मुताबिक दिई * वर्दान पाल्नूभयो ।
रावण् सो वरदानले त बहुतै * दुर्योध्य बन्दो भयो ॥
लंकादेखि कुबेरलाइ सहसा * रिस्ले निकाली दियो ।
उन्को पुष्पक जो विमान् जफतले * आफ्नो बनाई लियो ॥२३
यै रीतले हरजोज् गएर बलले * इन्द्रादि लोक्मा पनि ।
दख्खल् गर्न शुरू गऱ्यो मकन लौ * संग्राम देऊ भनी ॥
इन्द्रादी सब देवता रणविषे * टिक्नै नशक्ता तब ।
क्यारून् रावणलाइ दुःखित भई * सौंपे सबै गौरव ॥२४॥
तीन् लोक् रावणले जसै वश गऱ्यो * इन्द्रादि दिक्पाल्हरू ।
ब्रह्माका सँगमा कराउन भनी * जाँदा भए खुरखुरू ॥
ब्रह्माले पनि त्यो बयान् सुनिशकी * क्यै बेर मन्मा गुनी ।
मन्नूभो अब सब मिलेर झटपट् * कैलास जाऔं भनी ॥२५

कैलासमा गइ शंभुका शरणमा * पौंचेर ब्रह्मादि देव् ।
आफ्नो हालत वर्णनै गरि तहाँ * गर्दा भया फेरि स्तव् ॥
शम्भूले पनि चीरसागर महाँ * श्रीविष्णुको वन्दना ।
गर्नै जाउँ उहाँ पुगी सब भनौं * आफ्नो छ जो वेदना॥२६
यस्तो संमति बाँधि पाल्नु भयो * ब्रह्मादिको साथमा ।
शंकर्जी पनि चीरसागरमहाँ * श्री विष्णुको धाममा ॥
विष्णूको सबले गरे स्तुति तहाँ * दुःखित् बहूतै बनी ।
आकाश्वाणि भयो तहाँ तिमिहरू * शोक्छोडिदेऊ भनी॥ २७॥
ब्रह्माका वरले प्रमत्त भइ जो * दुःख् रावणैले दियो ।
त्यस्को ख्याल थियो भएर गरुँ के* मैले अवध्यै छ यो ॥
मानिस्को जनमै लिई यसकनै * मार्ने इरादा लिएँ ।
ऐले श्रीदशरथ्जिका घरमहाँ * औतार लीने भएँ ॥ २८॥
बानर् भालु भएर सब् तिमिहरू * पृथ्वीमहाँ जन्मनू ।
मेरो नै तिमिहेरुले बखतमा * मद्दत् खुशी भै दिनू ॥
सोहीमाफिक जन्मिएर प्रभुले * लोक्को हितै होस् भनी ।
रावण्का कुलको विनाश् गरिदिंदा* खूशी भयो लोक् पनि२९
येती बात अगस्तिबाट सुनदा * राम्चन्द्रजी ता तहाँ ।
मूर्छा भैकन लोट्नुभो ऋषिजिका * साम्ने अगाडीमहाँ ॥
त्यो देखी अति हड्बडाइ ऋषिले * हातले उठाईकन ।
पंखा हाँकनुभो र ब्यूँभि प्रभुले * गर्नू भयो गन्थन ॥ ३०॥
पापी राम रहेंछु के भनुँ मुने ! * मैले बिगारें कुलै ।
स्त्रीको निम्तिमहाँ हरे ! द्विजकुलै * ध्वस्तै गरें बिल्कुलै ॥

को होला म समान पाजि अधमै * यो सूर्यको वंशमा ।
जो ऐले कुलको कलङ्क हुनगो * लम्पट् भई स्वार्थमा ॥ ३१
मेरा बाबु बराजुले हरबखत् * ब्राह्मण्हरू पुज्दथे ॥
ब्राह्मण्को पदको धुलो तिलक झैं * शिर्मा सधैं घर्दथे ।
तेस्ता गर्नु त भस्यैला परिरहोस् * ती ब्राह्मणैको कुल ।
बाण् ताकी खुपछाति फोरि शिव हा * पार्दो भएँ निर्मुल ॥ ३२॥
यस्तो श्रीरघुनाथको सुनि वचन् * बोल्नूभयो फेर् मुनि ।
सामान्यै जन झैं भएर पछुतो * गर्नू हजूर्ले पनि ॥
ठोके हो प्रभुको परेर ऋषिश्राप् * रावण् भएको थियो ।
उद्धारर्खातिर मार्दिदा हजुरले * यस्मा नकाम् के भयो ॥ ३३
सुन्दा यो मुनिको वचन् तइपनी * चिन्ता ठुलो नै परी ।
भन्नभो रघुनाथले ऋषिजिका * साम्ने अगाडी सरी ॥
आज्ञा होस्-न सुने कुनै यदि भए * लौ ब्रह्महत्याकन ।
गर्छू दुष्कर धर्महेरु म त लौ * यस्लाइ झट् टारन ॥ ३४॥
यो अर्जी सुनि भन्नुहुन्छ मुनिजी * गर्नैं भए मन्सुबा ।
यज्ञै एक छ अश्वमेध कहिन्या * यो पापको बस् दबा ॥
जस्तै पाप भए पनी गरिदिए * यो यज्ञ तत्कालमा ।
पाप् नाश् सब भइजान्छ बाँ कि नरही * नूनै सरी पानिमा ॥ ३५॥
मद्दत् धन् जनको जरूर छ बहुत् * यस्मा जगन्नायक ।
भाई छन् प्रभुका प्रतापि अधिकै * संग्राममा लायक ॥
सो यज्ञै गरिबक्सियोस् हजुरले * होला ठुलो कीर्ति नै ।
पैले दीलिप सागरै मनु मरुत् * सब्ले गरे येहि नै ॥ ३६॥

यस्तो बात सुनीसकेर प्रभुले * सोध्नू भयो फेर् पनि ।
आज्ञा होस विधान यो यसरि हो * घोडा असल् यो भनी ॥
मर्जी यो रघुनाथको सुनिसकी * बोल्नूभयो फेर् मुनि ।
थोरै काल् हयमेधको विधि पनी * आफ्ना मनैमा गुनी ॥३७

गंगाजल् सरि स्वच्छ होस बहुतै * घोडा पहेंलो पुच्छर् ।
कान् काला मुख लाल होस बलवान् * देख्तामहाँ खुब् जबर् ॥
बेग्मा वायु समान होस यसकै * श्याम् कर्ण नाम् भन्दछन् ।
यस्ता लक्षणपूर्ण अश्व नृपते ! * खोज्दा कतै मिल्दछन् ॥३८

यज्ञको शुरु गर्दछन् जब मिलून् * वैशाखकी पूर्णिमा ।
घोड़ा छोडनुपर्छ पल्टन सँगै * रक्षक् रही साथमा ॥
सुन्का पत्रमहाँ दिएर कुलनाम् * आफ्ना भएको जति ।
लेख्नू यो हय लौ समाउ छ भने * संग्राम गर्ने मति ॥३९॥

हाम्रा की शरणै परेर धन जन् * सौंपेर साथै चल ।
लेखी यो हयका निधार-बिचमा * कस्नू नहोस् हल्चल ॥
छोडेको हय त्यो जहाँ चलिगयो * तेस्का पछाडी सब ।
जानूपर्दछ आफनू जसरि होस् * राखौं भनी गौरव ॥४०॥

घोडा जौन समाति लान्छ घरमा * संग्राम् गरी तेस्कन ।
जीती त्यो हय छोड्नुपर्छ * नजिती हूँदैन उभ्याउन ॥
पृथ्वीभर् जति भूप छन् सबकनै * पारेर आफ्ना बस ।
एक् वर्षै जब बित्न जान्छ अनि ता * घोडा हवस् वापस ॥४१॥

घोड़ा जुन् दिन छोडिइन्छ उदिनै * देखी हरेकन् दिन ।
कर्ता सुत्तु पवित्र भै मखमहाँ * कुशको धरी आसन ॥

वर्षैं दिन्तक नित्य मागन जति * आए गरीबी भई ।
तिन्लाई खुशि पार्नु पर्छ बहुतै * द्रव्यान्नहेरू दिई ॥४२॥
यो सब् बात सुनी मुनीकन तहाँ * श्रीरामले भोन्नुभ ।
त्यो घोडा छ कि छैन अश्व घरमा * हेरौं भनी पाल्नुभो ॥
सब् जात् छन् कहिंलाल अब्लख भए * मुस्की कहिन्छन् सुरङ् ।
सब् जात् छन् कुमहित् कहीं त अबलख् * तामेतिलौरादिरङ् ४३
छन् लाखौं यसतर्फ एक रङ्का * दोस्रो तरफ् फर्कि रङ् ।
देख्ता चित्र विचित्र अश्व मुनि ता * पर्नू भयो खूब दङ् ॥
देख्नूभो अनगिन्ति अश्वघरमा * श्यामूकर्ण घोडाहरू ।
तिन्का लक्षण माथिनै भइसक्यो * वर्णन् म फेर् के गरूँ ॥४४॥
भन्नू हुन्छ मुनी अहो नरपते ! * श्यामूकर्ण घोड़ा यहाँ ।
धेरै देख्छु हजूरका म अहिले * सारा तबेलामहाँ ॥
यस्तो बात सुनी अगस्ति मुनिको * रामूचन्द्रजीले पनि ।
भन्नूभो अब यज्ञभूमि पनि लौ * हेरे र आऔं भनी ॥४५॥
देखाईं सरयू नदी - तटमहाँ * सुन्का हलाले गरी ।
जग्गा जोत्न लगाइबक्सनु भयो * ठीक् सोह कोशको भरी ॥
तेस्मा मण्डप कुण्डहेरु सब ठीक् * फेरी वशिष्ठैजिले ।
गर्नैं लाउनुभो पुरोहित हुँदा * शास्त्रोक्त अन्सारले ॥४६॥
तत्तत् आश्रममा निमन्त्रण लिई * नामी ऋषीश्वर् कहाँ ।
आफ्नै शिष्यहरू वशिष्ठ मुनिले * भोजन्भयो झट् तहाँ ॥
रामूको यज्ञ हुने सुनेर खुशि भै * जो जो मुनीश्वर् तहाँ ।
आए ती मुनिको क्रमैसित गरी * नां लेख्छु मैले यहाँ ॥४७॥

पैले नारद पर्वतासुरि भए * हारीत संवर्त फेर् ।
जातूकर्ण्य अरिष्टषेण हुनुभो * अत्री र व्यासै जवर् ॥
अङ्गीरा शुक याज्ञवल्क्य र कपिल् * इत्यादि आए अरू ।
धेरै थे यसको कसोरि म यहाँ * नाम् एकिनै सो गरूँ ४८
पाद्यार्घ्यैं सबको प्रसन्न मनले * श्रीरामले गर्नुभो ।
सुन् गौदान दिएर फेरि सबका * सङ्मा त यो भन्नुभो ॥
सुन्नूहोस् मुनिवर्य ! आज सबले * नीगाह राखी ममा ।
पाल्नूभो अहिले मिल्यो र दरशन् * डुब्दो भएँ हर्षमा ॥४९॥
यस्तो नम्र भई भनेर रघुनाथ * जीले पनी तेस् बखत् ।
सोध्नूभो ऋषिहेरुका सँग कुरा * धर्मैं तरफ्को फगत् ॥
उत्तर् ती मुनिहेरुबाट जुन भो * वर्णाश्रमैको नियम् ।
लेख्छू त्यो मजिले यहाँ सब कुरा* केही नपारेर कम् ॥५०॥
यज्ञै गर्नु गराउनू खुशी भई * पढ्नू पढाई दिनू ।
दान् लीनू र दिनू छ काम द्विजको* हुन् मुख्य जानीलिनू ॥
ब्राह्मण् भैकन नीच जातिहरुको * सेवा कहीले पनि ।
गर्नू हुन्न विपत् परे पनि कसै * जात्ले ठुलो हूँ भनी॥५१॥
वंशोच्छेद नहोस् भनेर बढिया * कूलीन खानूदानकी ।
लक्षण् पूर्ण भएकि गर्न गृहिणी * रूप् मात्र हेर्नू न कि ॥
तिन्मा संगम गर्नुपर्छ ऋतुकाल्- * मा मात्र तेस्मा पनि ।
श्राद्धै का तिथि पर्वका तिथि सबै * छोड्नू इ निन्द्यै भनी ॥५२
दिऊँसो र निषिद्ध ई दिनमहाँ * स्त्री-भोग जो गर्दछन् ।
अल्पायू अभ्र रोगि भै पछि पनी * घोर् नर्कमा पर्दछन् ॥

जो ता छन् ऋतु काल गामि भइ फेर् * एक् नारिव्रत्मा रत ।
ती हुन् धन्य गृहस्थि नाम भयका * हुन् ब्रह्मचारी मत ॥५३॥
जस्को ता परनारिमा रत भई * जीवन् व्यतीतै भयो ।
तिन्को ता बुझनू असंख्य दिनतक् * नर्कैमहाँ वास् भयो ॥
ब्राह्मणको जनमैं लिएर जुन जन् * भुल्छन् परस्त्रीमहाँ ।
हात्को अमृत छोडि विष्तिर मती * लीए तिनीले यहाँ ॥५४॥
देखी रूपवती परस्त्रि मनमा * संकोच केही नली ।
ठान्नूपर्दछ मातृतुल्य जनले * जो धैर्य छोडि दिई ॥
पाप्को केहि विचार् नराखि मुखको * भाग् मात्र जो हेर्दछन् ।
माछो बल्छिमहाँ फसे झाझ ति ता * यम् पाशमापर्दछन् ॥५५॥
हुन्छन् नारि रजस्वला जुन दिनै * त्यै वारदेखिन् गनी ।
त्यो जान्नू ऋतुकाल सोह दिनतक् * गर्भ प्रदाता भनी ॥
पैल्हेको तिन रात्रि त्यागि सुतको * इच्छा भए जोर दिन् ।
पारी संगम गर्नुपर्छ नहिं ता * कन्न्या अवश्यै हुनिन् ५६
कन्याको त विवाहमा जउनले * यो छोरिका नाउँमा ।
फल्नो चीज प्यवा मिले त दिउँला * दिन्थैं म तेसै कहाँ ॥
यस्तो केहि कबोल् गरेर जसले * दिन्छन् खुशी भै सुता ।
कन्या विक्रयिता ति हुन् यसरि ता * मिल्दैन है धर्म ता ॥५७॥
माईतीकन धन् दिएर द्विजले * कन्न्या विवाहै गरे ।
दासी तुल्य भइन् ति फेरि उनका * सन्तान शूद्रै भए ॥
छोरी बिक्रि गरेर जौन जनले * लिन्छन् रुपीआहरू ।
कुम्भीपाकमहाँ ति बस्छन भनी * विस्तार् कहाँतक् गरूँ ५८

ब्राह्मण् भैकन वेद् नपढ्नु अथवा * व्यापारको काम् लिनु ।
सन्ध्या लोप कुजात ल्याउनु भयो * फेर् नीच सेवा हुनु ॥
यस्तो काम गरेर ब्राह्मणहरू * कुल् भ्रष्ट नै गर्दछन् ।
तस्मात् ई सब छोड्नुपर्दछ भनी * विद्वान्हरू भन्दछन् ५९
पाहूनाकन जो गृहस्थि खुशिले * घर्मा भएका जति ।
श्रद्धाले जल अन्न-वस्त्रहरुले * सत्कार गर्छन् अति ॥
विद्वान् ब्राह्मणलाइ पर्वदिनमा * गोदान् दिनाले गरी ।
जो लोकै मिलला उहीं इनि पनी * जान्छन् खुशीले गरी ६०
घर्देखिन् जसको निराश अतिथी * फर्कन्छ दिक्दार् भई ।
फर्क्यो पुण्य लिई गृहस्थिहरुको * त्यो जान्छ पापै दिई ॥
द्यौता पितृ र ब्राह्मणैकन दिई * जो खान्छ सो अमृत ।
बुझ्नू नाहिं भने त पाप बढ्ल्यो * स्वोदर्पुरणमा रत ॥६१॥
आमिष् वस्तु नखानु पर्वदिनमा * स्त्रीका सँगै भैकन ।
भोजन् गर्नु हुँदैन खालि द्विजले * एक् वस्त्र लाईकन ॥
मुख्ले फुक्नु हुँदैन अग्निकन ता * देखाउनू पाउ होस् ।
फ्याक्नू कै अपवित्र चीज् बुझनु है * इन्मा ठुलो हुन्छ दोष् ६२
प्राणीको वध गर्नु छैन कहिल्यै * सन्ध्यामहाँ भोजन ।
जूठो बासि र दग्ध चीजहरुको * ठीक् छैन है सेवन ॥
नाङ्गी स्त्री दुध खवाउने गउकनै * इन्द्राणिलाई पनि ।
हेर्नू छैन विचार-युक्त जनले * दोष् लाग्छ हेर्दा भनी ६३
भोजन् गर्नु हुँदैन शुद्ध नभई * फेर् भग्नपात्रैमहाँ ।
पाऊ धूनु हुँदैन फेरि कहिल्यै * काँस्को त भाँडामहाँ ॥

अर्काका कपडा जुताहरु पनी * हूँदैन है लाउन ।
नाच्नू ठीक हुँदैन फेरि द्विजले * निर्लज्ज गीद् गाउन ॥६४
चीसो वस्त्र लगाइ चट्ट सुतनू * जूठै कहीं चल्दिनु ।
शय्यामा बसि भोजनादि गरनू * जूठो भई शिर् छुनु ॥
आफ्नो ताडिफ गर्नु फेरि अरुकै * निन्दा गरी हाँसनु ।
ई सब् गर्नु हुँदैन श्रेष्ठ जनले * धेरै कहाँ तक् भनुँ ॥६५॥
इत्यादि सबको विवेक गरदै * आफ्ना रही धर्ममा ।
जुन् चाहीं त गृहस्थ बस्तछ सधैं * त्यो पुग्छ है स्वर्गमा ॥
गर्दैं थे मुनिहेरु येहि रितले * सब् धर्मको निर्णय ।
आई भन्नुभयो वशिष्ठ ऋषिले * हे राम सब् भो तय ॥६६॥
जो जाहाँ हुनुपर्दथ्यो सब भयो * सामग्रि सो सब् ठिक ।
ऐले स्नान् गरिबक्सियोन् हजुरले * वेद्का वचन् माफिक ॥
सीताको प्रतिमा बनाइ सुनको * छाला मृगैको धरी ।
हातमा दण्ड कमण्डलूहरु लिई * दीक्षित हुन्होस् हरि ६७
यस्तो वाक्य सुनेर मण्डपमहाँ * पौंचेर श्रीरामले ।
आज्ञा गर्नुभयो नि लक्ष्मणकनै * सोही बखत् हर्षले ॥
घोडा ल्याउन लाउ भाइ तिमिले * शृंगारहेरू गरी ।
तेस्का रक्षकहेरु ठीक् गर सबै * सेनापती साथ् धरी ॥६८॥
हुकूम् यो रघुनाथको सुनिसकी * लक्ष्मणजिले फेर् पनि ।
आज्ञा गर्नु भयो खुशी भइ तहाँ * हे काल जित् ! वीर् भनी ॥
सेना सज्जित पारि ल्याउ अब ता * छानी लडाका सुरा ।
भर्खर्का सब शस्त्र हान्न चतुरा * संग्राम लायक् पुरा ॥६९

यस्ता लक्ष्मणका सुनीसकि वचन् * सेनापती कालजित् ।
पल्टन्हेरु चुनेर यज्ञ-भुमिमा * पारीदिये सब् खजित् ॥
हात्तीको छ बगाल एकतिर ठुलो * पर्वत् समान् भान् दिने ।
घोडा रथ्हरु ता असंख्य हुन गै * सागर् समान् देखिने ७०
घोडा रथ्हरु दौडँदा जमिनमा * दख्खल् परि खुप् ठुलो ।
यो हो दिक् भनि क्यै विचार नहुने * उड्दो भयो झट् धुलो ॥
हात्तीको मदजल् चुहेर कहिं ता * हीलो बढी चार्तिर ।
जोतेको जिमिमा सडक् नमिलादा * हिंड्नै भयो खुप् पिर ७१
रत्नैका गहना लगाइ बहुतै * शिर्मा दुई चामर ।
लट्काईकन चित्रदार पिठमा * ओढाइ लाल् चादर ॥
वेग्मा वायु समान खूब त्वरिता * उच्चैःश्रवाकै सरी ।
घोडा यज्ञिय कर्म लायक तहाँ * ल्याए धरी बेसरी ॥७२
बाजा पल्टनका बजे थरि थरी * घोडा कराए अति ।
धर्ती कम्प गराउँदै चलिगयो * पल्टन् ठुलो ली मति ॥
ढाल् तर्वार धनू र बाण करमा * ठोक्को पछाडी धरी ।
हिंड्थ्यो पलटन सिंहनाद गरदै * संग्रामभूमी सरी ॥ ७३॥
रामले भन्नु भयो बशिष्ठ मुनिथ्यैं * खूशी बहुतै भई ।
घोडा आइपुग्यो ऋषे अब यहाँ * घेरा सबैले दिई ॥
आज्ञा होस् अब यज्ञ कामतिर पो * गर्नूपर्‍यो कुन् कुरा ।
लक्ष्मण्ले सब ठीक् गरे मखमहाँ * सर्जामहेरू पुरा ॥७४॥
यस्तो बात सुनी वशिष्ठ गुरुले * मण्डप्महाँ झट् पुगी ।
सुन्को पत्नि समेत रामकन ता * ताहीं खुशीले लगी ॥

हात्मा कुश् तिल पाति जल्हरु दिई * धैर्यैं लिई स्वर् उँचो ।
ब्राह्मण्को वधजन्य पाप हरने * संकल्प झट् पढ्नु भो ७५
श्रीराम्चन्द्रजिले पनी कटिमहाँ * छाला मृगैको कसी ।
शुद्धै भैकन दत्तचित्त भई खुब् * कूशासनैमा बसी ॥
यज्ञैमा मुनिहेरुको पनि वरण् * गर्नूभयो फूल् छरी ।
तीन् लोक्का अधिनाथले खुद अहो ! * सामान्यजन्ले सरी ॥ ७६ ॥
आचार्यैं हुनुभो वशिष्ठ ऋषिजी * वाल्मीकि ऋत्विग् भए ।
वेद् पाठ्को अधिकार् सबै तरहको * खुश् भै अगस्तीजिले ॥
ढोका आठ हुँदा त मण्डपविषे * प्रत्येकमा ब्राह्मण ।
द्वार्पाल्मा दुइ दूइको वरणमा * ठीक् पारि सब् साधन ७७
सोही टायममा लगेर हय त्यो * जाहाँ थियो मण्डप ।
चन्दन् अक्षत फूल कुंकुम छिटी * पूजा गरे टप्टप ॥
कन्याहेरु गएर खुब् खुशि हुँदै * धूप् दीपहेरू गरी ।
मंगल् गान पनी गरे उस बखत् * आफैं उनी सर्सरी॥७८॥
पूजा जब् हयको भयो अनि पछी * आफैं गुरूजी गई ।
पातो एक् सुनको लिएर उसमा * लेख्नू भयो दिल् दिई ॥
भारत् वर्ष विषे अवध्पुर महाँ * श्री सूर्य वंशाग्रणी ।
राजा थ्ये दशरथ् भनेर कहिने * भूपाल चूडामणि ॥ ७९ ॥
रानी तीन् निजका थिए उनमहाँ * स्वामिव्रतामा पुरा ।
कौसल्या हुन रानि जेठि कहिने * गुण्को गरौं के कुरा ॥
उन्का कोखमहाँ जनम् लिनुभयो * साक्षात् हरीले तहाँ ।
प्रख्याते छ नि राम-नाम जसको * सारा तिनै लोकमहाँ॥ ८०

भूको भार हटोस् भनेर प्रभुले * मार्दामहाँ रावण ।
तेस्को ब्राह्मण कुल् सुनेर अहिले * त्यै पाप झट् टारन ॥
यज्ञै हो जुन 'अश्वमेध' भनिन्या * त्यै गर्न मन् खुब् भई ।
पैले दिग्विजये गरौं भनि छुट्यो * घोडा तयार् यो छ ई ॥८१
छेत्रीका कुलको म हूँ लडदछू * भन्न्या इरादा भए ।
देश्देश्का नृपहेरुले बलजफत् * पक्रेर घोडा लिए ॥
भाई श्रीरघुनाथका हय पछी * शूरा लडाकी जबर् ।
श्रीशत्रुघ्नजि आउँछन् इनि लिनन् * रण्मा रिपूको खबर् ॥८२॥
काले सर्प समान बाण यिनका * मोक्ले मलिन् छन् अति ।
छातीका यदि रक्तदान गरने * आए कसैको मति ॥
घोडा पक्रनु नाहिं ता चरणमा * शत्रुघ्नजीका परी ।
धन् जन् अर्पण झट् गरेर चलनू * साथ्मै सिपाही सरी ॥८३॥
यस्तो पद्य बनाइ लेखि हयका * नीधारमा सिक्रिले ।
सुन्कै बाँधनुभो कसेर बलले * आफैं पुरोहित्जिले ॥
घोडा त्यो सुनकै बजाइ घुङरा * नाच्ने बिजूली सरी ।
खुश् भै छोडिदिए तहाँ गुरुजिले * मंगल् बहूतै गरी ॥८४॥
त्यो बीच्मा रघुनाथले खुशि भई * शत्रुघ्नलाई तहाँ ।
अर्ती नीति बमोजिमै दिनुभयो * सब्का अगाडीमहाँ ॥
घोडाका पछि जाउ भाइ खुशि भै * रक्षा यसैको गरी ।
लड्दा धर्म विचार् गरेर लडनू * वीर्हेरु भर्सक् गरी ॥८५॥
लड्दा पर्छु शरण् म लौ ति भननन् * फेरी विरथ् जो बने ।
बौलाहा डरछेरुवा म तिमरै * हूँ भन्न फेर् आउने ॥

सूतेको मदमत्त फेरि मुखमा * तृण राखने तीकन ।
हात् जोर्ने हतियारहीन इकनै * हूँदैन है मारन ॥८६॥
यस्तामा हतियार् प्रहार गरदा * बद्नामि आफ्नू हुने ।
नर्कैवास परत्रमा त मिलदा * त्यस्को निषेधै भने ॥
अर्काका धनमा र नारिहरुमा * हे भाइ ! कैल्यै पनि ।
मन् आसक्त नपारनू हरबखत् * साहै घटीया भनी ॥८७
सेवा नीच्हरुको कदापि नगरे * आदर् गरे वृद्धको ।
पूज्यैको सनमान् अपूज्य अपमान् * उल्टा नहोस् येसको ॥
गाई ब्राह्मण वैष्णवैहरु मिले * यिन्मा नमस्कार् गरी ।
जान्नू काम असल् भयो भनि बुझे * विश्वास मनूले गरी ॥८८
घट्घट्मा सब प्राणिका त रहने * व्यापक् उनै विष्णुको ।
गो-ब्राह्मणहरु जान रूप उनको * प्रत्यक्त भेद् मात्रको ॥
दुश्मन् मित्रमहाँ अभेद गरने * प्रेम् भागवत्मा दिने ।
यस्ता वैष्णव जान भाइ ! तिमिले * तीन् लोकमा पूजिने॥८९॥
मुखले श्रीहरिनाम गाइ मनमा * ध्यानै हरीको लिने ।
पेट्मा श्रीहरिको प्रसाद धरने * इन्लाइ वैष्णव् भने ॥
जस्को भक्ति छ वेदमा अधिक नै * संसार सुख् त्याग् गरी ।
आफ्नो धर्ममहाँ डटेर रहने * ती मान्य हुन् लोकभरि९०
विष्णूमा शिवमा अभेद गरने * ब्रह्मा शिवैमा पनि ।
हे भाई ! इनिलाइ मान्नु तिमिले * खाश् वैष्णवै हुन् भनी ॥
गंगा पार्वति लक्ष्मिमा मनविषे * गर्दैन जो भेद् रती ।
जान्नू तिन्कन भाइ ! यो भुवनमा * सन्मान योग्यै यति॥९१

गर्नू पालन आफुका शरणमा * पर्नेहरूको अति ।
सेवा साधु महन्तको गरनमा * हर्दम् दिएकै मति ॥
पढ्नू गान बजान क्वै तरहले * चिन्ता हरी-नाम की ।
गर्नेछन् जुन भाइ ! जान तिमिले * वैष्णव् महाँ मुख्यती ॥६२
जस्ता नाम असह्य पाप वनमा * दावाग्नि ठीक् बन्दछ ।
तेस्को श्रीहरिको चरण् कमलको * जो नित्य ध्यान् गर्दछ ॥
आफ्ना इन्द्रिय वश् गरेर जसले * हर्दम् हरी भज्दछ ।
हे भाई ! उनलाइ ढोग गरने * मानिस् समेत् तर्दछ ॥६३
हे शत्रुघ्न ! दिएँ जती अरति लौ * संक्षेप रीतले गरी ।
टायं घेर् नहुँदा सबै मन दिई * राखे विचार् बेसरी ॥
जाऊ यो हयका पछाड़ि रिपु सब् * तिम्रा परून् वश् महाँ ।
होस् तिम्रो हरदेश मार्गहरुमा * मङ्गल् जहाँ गो तहाँ ॥६४
भाईलाइ अह्राइ येति रघुनाथ् * ज्यूले सबै सैन्यमा ।
दृष्टी दीकन यो सुध्याउनु भयो * सब्को त सामुन्यमा ॥
आएको रिपुलाइ रोकि रणमा * शत्रुघ्नको पालन ।
गर्ने कुद्रथवान जो छ अहिले * थापोस हात् पान् लिन ६५
आज्ञा यो रघुनाथको सुनिसकी * पुष्कल् भरत् पुत्रले ।
हातदेखी रघुनाथको टिपिसकी * पान्को बिडा हर्षले ॥
भन्छन् हे रघुराज ! आज म गई * शत्रुघ्नजीको उहाँ ।
गर्नेछू म त पृष्ठरक्षक भई * रक्षा जहाँको तहाँ ॥६६॥
हे नाथ् ! यो पृथिवी-तलै सहजमै * वश् गर्न सामर्थवान् ।
ठान्छू यो प्रभुको प्रताप मइले * राखेर आफ्नू कमान् ॥

तस्मा खालि निमित्त कारण सरी * हामी अहीले बन्यौं ।
संग्रांमा जितदा जिते अमुकले * ऐले भनीने भयौं ॥९७॥
हूँदा यो अतुल प्रताप प्रभुको * रण-भूमिमा सामने ।
आयाको उसलाइ रोकि सहजै * घोडाहरू पालने ॥
सामर्थ्यै छ पुरा प्रभो ! कति गरूँ * आफ्नो बयान् आफुले ।
देख्न्यै छन् सबले रणस्थलमहाँ * ई वीर्हरू हर्षले ॥९८॥
यस्तो हिक्मति बात पुष्कलजिको * सुन्दा बहुत् खुश् भई ।
स्याबास् बाबु भनेर हर्षित भई * धेर् धन्यवादै दिई ॥
फर्की फेर् हनुमान्जिका मुखतरफ् * हेरेर रामचन्द्रले ।
भन्नूभो उपयुक्त जो वचन थ्यो * झट्पट् तहाँ हर्षले ॥९९॥
पैले हे हनुमान् ! कुदेर सहजै * सागर् बलैले तरी ।
लङ्कामा पुगि जानकीकन पनी * भेट्यौ सहज्ले गरी ॥
सीता ल्याइदिने र फेरि मकनै * राज्याभिषेकै दिने ।
संझन्छू म त मुख्य कारण तिमी * नै हौ यथार्थै भनें।१००॥
तस्मात् जाउ तिमी पनी खुशि भई * शत्रुघ्नका साथमा ।
पृष्ठै रक्षक भै विचार गरनू * घोडा हरेक् बातमा ॥
बुद्धिःयग्र हुनेछ जो मुलुकमा * शत्रुघ्नजीको जहाँ ।
न्यायै पूर्ण दिएर संमति असल् * तिम्ले बुझाए तहाँ॥१०१।
हूकूम् यो रघुनाथको सुनिसकी * खुश् भै हनूमान्जिले ।
आज्ञा शिर् उपरै धरेर रघुनाथ्- * जीको प्रणामै गरे ॥
वानर् जो अरु थे सबैकन तहाँ * दीई नजर् आफ्नू ।
भन्नूभो हयको गरेर जतनै * नां अफ्नो थामनू॥१०२॥

डाकी फेरि सुमन्त्रलाइ रघुनाथ् * ज्यूको हुकुम् यो भयो ।
घोड़ा रक्षण गर्न योग्य तिमिले * देखाउ वीर् पोढ को ॥
पाई यो रघुनाथको हुकुम झट् * भन्छन् सुमन्त्रै प नि ।
तेस् काम्‌लाइ चुनेर आज नृपते * नौंची खटाएँ भनी॥ १०३॥
प्रज्ञास्वामि र नीलरत्न अनि फेर् * लक्ष्मीनिधी वीर् तये ।
इत्यादी अरु वीर सामु रघुनाथ्- * जीको गराईदिए ॥
दश् अक्षौहिणि वीर एक्‌सित थिए * शस्त्रास्त्र जान्ने पुरा ।
देखी हर्षित बन्नुभो रघुपती * ठानी लड़ाकी शुरा॥१०४
तेही औसरमा पुरोहितजिको * आज्ञा हुनाले गरी ।
यज्ञैको दक्षिना दिऊँ भनि तहाँ * पाल्नूभयो श्रीहरि ॥
आचार्यादिहरूकनै दिनुभयो * रत्नादिहेरू तहाँ ।
घोड़ा हात्तिहरू तमाम अरु चीज् * वर्णन् गरूँ के यहाँ॥१०५
जो जो द्रव्य र अन्नहेरु मखमा * मागौं भनी आउँथे ।
इच्छामाफिक भारि बोकि उनि ता * खूशी भई फिर्दथे ॥
चारैतर्फ थियो अवाज सबको * मुखमा त देऊ यहाँ ।
यस्लाई त नदेउ यै कहि पनी * भन्दैनथ्यो है उहाँ ॥१०६
भान्सामा घिउका तलाउहरु थे * दूध्‌का कुला बग्दथे ।
कण्डाल्‌मा त शिखर्‌निहेरूमसला * हालेर बेश् बन्दथे ॥
पर्वत् भातहरुका थिए अति असल् * दाल्‌का इनारै थिए ।
तर्कारीहरुका पहाड़हरु थे * थुप्रो चिनीका थिए १०७
गिन्ती फेरी अचारको पनि तहाँ * थीएन केही पनि ।
खान्थे ब्राह्मणले त पायस कमै * धेरै मुनक्का भनी ॥

पेडा बर्फि गुलाबजामुन भयो * चंचं जिलेबी अनि ।
बंबैसन् निमकिन्हरू पनि थिए * खाऊन् सबैले भनी॥१०८॥

शत्रुघ्नजी पनि बिदा हुन नै भनेर ।
जानूभयो जननिका नगिचै पुगेर ॥
भन्नूभयो म अब जान्छु मुमा ! हयैको ।
रक्षा हवस् भनि हुकूम हुँदा नृपैको ॥१०९॥

तस्मात् बिदा अधिक हर्ष भएर मातर् !
बक्स्योस् म कत्तल गरूँ रिपुसैन्य सागर् ॥
घोडा घुमाइ भुवनैतलमा तमाम ।
फर्कूं म फेरि खुब सार्थक पारि नाम ॥११०॥

शत्रुघ्नको विनति यो सुनि फेरि माता ।
भन्छीन मंगल गरून् तिमरै विधाता ॥
बस्मा गराइ सब दुश्मनलाइ हेर ।
बाबू ! फिरे मखमहाँ विजयी बनेर ॥१११॥

पुष्कल् पनी छ सँगमा तिमिले सदैव ।
राखे विचार उसको बन खूद दैव ॥
बालक् अनारि छ कतै नबुझेर काहीं ।
भिड्ला प्रतापि सँग ख्याल् दिनु खूब ताहीं॥११२॥

येती सुनी जननिका परि पाउमाहाँ ।
शत्रुघ्न पौंचनुभयो मखबीचमाहाँ ॥
श्रीरामका पुगि नगीचमहाँ खुशीले ।
भन्नूभयो हिडदछू म त दाजु ! ऐले ॥११३॥

शत्रुघ्नको सुनिसकी अरजी प्रभूले ।
भन्नूभयो यति तिमी कहिल्यै नभूले ॥
हे वीर ! नारिहरु बालक फेर् बिहोश ।
यिन्मा नछोड्नु हतियार बुझेर दोष ॥११४॥
यै बीचमा नृपतिको सब बात काटी ।
सुन्ने गरेर सबले खुप बोलि छाँटी ॥
लक्ष्मीनिधी जनकपुत्र नयन् घुमाई ।
छेड्छाडका वचन भन्छन नाथलाई ॥११५॥
शत्रुघ्नलाइ रघुनायक ! छोडि लाज ।
दीबक्सियो नि मरजी नययुक्त आज ॥
यिन्ले पनी गरिलिनन् कुल सम्प्रदाय ।
सिद्धै छ त्यो किन बताउनु आफ्नु राय ॥११६॥
आज्ञा भयो जउन ब्राह्मणलाइ मान्नु ।
स्त्रीहेरुलाइ हतियार कबै नहान्नु ॥
शत्रुघ्न मूर्ख हइनन् कुलका स्वधर्म ।
छोडी चटक्क उ लिनन् नि विरुद्ध कर्म ॥११७॥
यिन्का पिता त दशरथ् छलले शिकार्को ।
प्राणै लिए खुशि भई द्विजका कुमार्को ॥
संझेर त्यो कुलधरम् रणभूमिमा झन् ।
शत्रुघ्नले द्विजहरूकन तीर हान्नन् ॥११८॥
स्त्री जाति हुन् यदि अवध्य भने ति आफैं ।
त्यो ताडकाकन त मार्न नराखि भाखै ॥

अर्ती दिनू यस किसिसँग भाइलाई ।
लाज् लागदैन कि भिनाजु ! हजूरलाई ॥११९॥
शत्रुघ्नका जुन सहोदर भाइ लक्ष्मण ।
उन्ले गरे कुन नयोक्त पराक्रमै भन् ॥
भज्छू पती म भनि शूर्पनखा गएकी ।
त्यस्का त नाक अफ कान समेत् लिएकी ॥१२०॥
यै नीति रीती कुलको सब ख्याल गर्दै ।
विप्रेन्द्र-नारिहरुमाथि प्रहार गर्दै ॥
शत्रुघ्नले स्वकुल धर्म थमाउन्यै छन् ।
अर्ती सुनाइ किन नाथ ! बिगारनू भन् ॥१२१॥
सुन्दा सबै क्यहि मुसुक्क परेर फेरि ।
रामूले जवाफ् दिनुभयो नगरेर देरी ॥
लक्ष्मीनिधे ! तिमि अतीव अनारि नै छौ ।
तत्त्वै नसंभि नयको बकवाद गर्छौ ॥१२२॥
संसार सागर सुखैसँग तर्नलाई ।
मर्मै बुझे मुनिहेरू सँग मिल्छ जाई ॥
तस्तै बुझे समरको त रहस्य बात ।
बच्चू ! कसोरि ! तिमिहेरु पुऱ्याउला त ॥१२३॥
अर्काकनै दुख दिने कुपथप्रवृत्त ।
हर्दम् परस्त्रि परधन्तिर दत्तचित्त ॥
तिन्कै गरूँ भनि विनाश विचारशाली ।
त्यो राजसिंह अरु जानन भारि खालि ॥१२४॥

श्रीरामको त प्रतिउत्तर त्यो सुनेर।
बोलेन क्वै पनि सभासद दिल् बुझेर॥
घोडा नगीच पुगि मन्त्र पढी महान।
गर्नुभयो तब वशिष्ठजिले विधान ॥१२५॥
त्यो मन्त्रको यहि थियो परमार्थ तत्त्व।
घोड़ा! तँ घुम् भुवनमा त बढाइ सत्य॥
दौड़ेर यो जमिन भारतवर्ष सारा।
फर्केर आ फिजि रघूद्वहकीर्ति-धारा ॥१२६॥
येती भनेर जल मार्जन खुप् गरेर।
घोडा फुकाइदिनुभो गुरुले भनेर॥
हावा समान भइ पूर्व दिशा चलीगो।
घोडै पछाडि सब पल्टन कूच भैगो ॥१२७॥
त्यो सैन्यको प्रबल दंक परेर धेर।
धूलो उड्यो चहुँ दिशा खचितै भएर॥
धर्तीमहाँ पुरवतर्फ भएर भार।
श्रीशेषको हुन गयो फणको प्रचार ॥१२८॥
शत्रुघ्नको दछिन बाहु उसै बखत्मा।
फुऱ्यो ठुलो विजय सूचक भर् जगत्मा॥
पुष्जल्जि त्यै बखतमा अति खुश् भएर।
आफ्नी प्रियासँग बिदा अब ल्युँ भनेर ॥१२९॥
कोठामहाँ पुगनुभो सब रत्न जाती।
जस्मा थिए झुल पलङ्हरु भाँति-भाँति॥

कान्ती अती सरस-कोइलिको समान ।
मीठो वचन् कहँदि केहि बढाइ मान ॥१३०॥
पान् धेर खाइ अति लाल छ ओष्ठबिम्ब ।
चल्नै पनी सकस पारि ठुलो नितम्ब ॥
कस्तूरिको तिलक लाइदिंदा सहर्ष ।
गर्दो छ धेर मुखचन्द्र पियूष वर्ष ॥१३१॥
देखिन्छ मानु मुखचन्द्र त्यही उदाई ।
हूँदा प्रकाश अति दिन् भनि हर्ष पाई ॥
पोथी समेत रहने ठिक चक्रवाक ।
वक्षस्थलै बिच स्तनद्वय गर्छ धाक ॥१३२॥
कोमल् अती सरस बाहु-लता भएर ।
चोरीलियो कमलको सब कान्ति हेर ॥
हाल्छू म नेल भनि लक्ष्मिजि खूद आफैं ।
हाजीर् भए झइँ त कंकण पंक्ति भावैं ॥१३३॥
त्यो मन्द चाल गतिले सब राजहंस ।
जीतीदियो र किन जाउँ ! भनी विदेश ॥
आए कि पाउ परनै रिपुका सँगैमा ।
भान् पर्छ नूपुर अती बजदा पयर्मा ॥१३४॥
यस्ती अवर्ण्य मृगनैनि खुशी भएर ।
प्राणेशका नगिचमा उभिइन् गएर ॥
काखमा बसाइ उनका त कपोलनेर ।
पुष्कल्जिले झट पुर्‍याउनुभो मुहार ॥१३५॥

भन्नूभयो प्रियतमे ! तिमिले सदैव ।
मेरा मुमाहरुकनै बुझि खूद दैव ॥
पाऊ दबाउनु र फेरि जुठो समेत ।
खानू टहल् गरनु पाउ धुनू मिले त ॥१३६॥
ऐले म जान्छु हय रक्षण गर्नलाई ।
मिल्दा हुकूम रघुनाथजिको मलाई ॥
फिर्नेछु भट्ट मनमा क्यहि पीर् नलेऊ ।
प्राणप्रिये ! खुशि भएर बिदा त देऊ ॥१३७॥
यस्तो कडा वचन चट्ट सुनेर वाहाँ ।
कान्तीमती पनि अगाडि सरेर ताहाँ ॥
आफ्ना स्वधर्म कुलको समझेर नाम ।
चित्तै समालिकन भन्छिन दिव्य काम ॥१३८॥
गैबक्सियोस अहिले सब सैन्यसाथ ।
शत्रुघ्नका सँगमहाँ भइ प्राणनाथ ॥
जितबाजि होस् हजुरको खुप नाम् चलोस ।
कीर्ती बढोस् भुवनमा नभएर दोष ॥१३९॥
दर्बारमाथि बिचरा छ चरणकि दासी ।
द्यौरानिहेरु उसलाइ सदैव हासी ॥
नामर्दपत्नि ! भनि भन्न कवै नपाऊन् ।
यस्ता विचार प्रभुबाट कवै नभागून् ॥१४०॥
कवै छैन रक्षक छ यो अदना जनाना ।
पार् गर्नु पर्दछ मबाट इ दुष्ट नाना ॥

खान्दानकी हुँ लडकी बनुँ के कुलट्टी ।
यो गूनि पाउँ प्रभुको मनरूपि चट्टी ॥१४१॥
संग्रामका समयमा त मलाइ नाथ !
झट् आफनै हृदयबाट चिढ्याइ साथ ॥
घिच्च्याइ दूर झटपट् गरिबक्सिएला ।
नाहीं भने वजन भैकन दुक्ख देला ॥१४२॥
जुन् ठाउँमा प्रभुको त सवारि ताहाँ ।
यो मन् टुपुक्क पुगिजान्छ रहन्न याहाँ ॥
जाहाँ पुगे रवि उहीं पुगिहाल्छ छाया ।
यस्तै विचित्र गतिको विधिको छ माया ॥१४३॥
हे नाथ् ! लडेर रणमा सकसै परेर ।
फिर्ता भएर बचने गवडै गरेर ॥
यस्तो भईकन अनित्य शरीर् जिलाई ।
घर् आउनू उचित हुन्न यसै जलाई ॥१४४॥
हे वीरधूर्य ! रणमा गइ खुप् लडेर ।
छातीविषे अधिक वाणहरू बिझेर ॥
ठेला जमी अधिक भार समर्थ छाती ।
आलिंगनै म गरुँला खुप संझि जाती ॥१४५॥
कान्तीमती यति कही पतिलाइ फेरि ।
दीदी भइन् सब ति शस्त्र नलाइ देरी ॥
हे नाथ ! यो धनु बजाइ रणस्थलैमा ।
घुम्दा बनून बहिरा रिपु तत्क्षणैमा ॥१४६॥

लीबक्सियोस पगडी गडिमा कसेको।
पाऊमहाँ न त परोस रिपूहरूको ॥
देखेर यस्कन रिपूहरु सूर्य देखी।
उलूक झैं सब डराउन छोडि सेखी ॥१४७॥
लीबक्सियोस् खवच यो अति हर्षसाथ।
पैह्रेर यो गरि हिफाजत खूब गाथ ॥
रणमा गएर रिपु कत्तल पारि ताहाँ।
आराम-साथ फिरिबक्सनुपर्छ याहाँ ॥१४८॥
ठोक्रा दुई छन सहर्ष लिबक्सियोस।
वीराग्रय ! भन्छु यसको म त एक दोष ॥
मेरै समान बुझि इज्जत येसलाई।
देखाउनू ठिक हुँदैन नि बैरिलाई ॥१४९॥
पुष्कल्जिले सुनिसकेर ति बात फेरि।
उत्तर् तहाँ दिनुभयो नगरेर देरी ॥
कान्ते ! नमान तिमिले कहि फिक्रि हेर।
फिर्नेछु दुश्मनहरू वश पारि धेर ॥१५०॥
काँतर्कि पत्नि भनि हेर प्रिये ! कसैले !
भन्नै सक्दैन यहि भन्दछु आज मैले ॥
हुन् वीरपत्नि इ भनी जगतैभरीमा।
प्रख्यात भै तिमि बनौलि सुभाग्यसीमा ॥१५१॥
येतो भनी कवच कुण्डलहेरु लाई।
पुष्कल् तयार हुनुभो जब जानलाई ॥

पूजा म गर्छु भनि कान्तिमती सहर्ष ।
सजीम् तयार गरि गर्छिन पुष्पवर्ष ॥१५२॥
कस्तूरि चन्दन र कुम्कुमहेरु ताहाँ ।
छिट्दी भइन् खुशि भई पतिदेहमाहाँ ॥
नीराजनै सहित धूप र दीप बाली ।
घूमिन् पती वरिपरी तहिं सातपालि ॥१५३॥
घुम्दामहाँ गहभरी टलपल् भएर ।
आँसू बढी नयन बन्द हुनै गएर ॥
लोट्नै तयार भइ झट् पुछँदा नयन्-जल् ।
थाहा भयो र तब भन्छन फेरि पुष्कल् ॥१५४॥
के चाल हो प्रियतमे ! तिमिले गरेको ।
हूँ वीर पत्नि भनि मन् किन छाड्दिएको ॥
प्रस्थानका बखत मङ्गल गान छड्यौ ।
आँशू गिराइ तिमिले बुढिरूढि तोड्यौ ॥१५५॥
यस्तो सुनेर तिनिले पनि धैर्य-साथ ।
मङ्गल् अहोस् भनि उँचो गरि केही माथ ॥
उत्तर् दिइन् नि चतुरी अधिकै बनेर ।
प्राणेशतर्फ नयनै दिक्दार भएर ॥१५६॥
धूप्को कडा परनगो र अतीव रोग ।
आँखा मिचे छइन दिल्तिर क्यै विराग ॥
रूमाल् चिसो हुन गयो बहि धेर् पसीना ।
ई मोति हुन् स्तनहरू बिच सूक्ष्म दाना ॥१५७॥

यो बात् सुनी खुशि भई अलि हाँसि ताहाँ ।
पुष्कल्जि पालनुभयो पितृमातृकाहाँ ॥
पस्रे र पाउबिच फेर् जननी जनक्को ।
वक्तव्य झट् भननुभो उचितै जउन् थ्यो ॥१५८॥
माता पिता अतुल हर्ष भयेर ताहाँ ।
क्याबात वीर भनि धाप् दिइ पीठमाहाँ ॥
संग्राममा अतुल साहसि वीर् बनेर ।
फर्कै घरैतिर चिरायु तिमी भएर ॥१५९॥
पाई बिदा अनि मुमा र बुबा दुवैको ।
पुष्कल्जिको तब सवारि हयैतरफ् भो ॥
पाञ्चाल-उत्तर-कुरु कुरुदेश-सीमा ।
फेरी दशार्ण अभ उज्जयिनीपुरीमा ॥१६०॥
घोड़ा पुग्यो अधिक चापल वेगवाला ।
पर्थे सबै नृपति नाम पढेर हाला ॥
धन्-जन् सबै त रघुनायकलाइ अर्पी ।
चल्थे नृपालहरु भैकन अश्वतर्फी ॥१६१॥
शत्रुघ्नका सुमति नामक मन्त्रिवर्य ।
साथ्मा थिए सकल बुद्धि-विवेक-धूर्य ॥
तिन्को लिई अनुमती सब कार्य गर्थे ।
कोही नयाँ नगरमा पनि चट्ट शोध्थे ॥१६२॥
श्रीरामको प्रबल कीर्ति प्रभाव जाहाँ ।
जस्बाट रावणवधादि सुने नि ताहाँ ॥

शत्रुघ्नले तिनिहरूकन खुश भएर।
दिन्थे अती धन पनि इ लिऊन् भनेर ॥१६३॥
यो चालले हय चल्यो जुन जौन ठाम।
त्यो स्वर्णपत्र चढि जाँचिइ रामनाम॥
संझी प्रताप प्रभुको हय धर्न छाडी।
सौंपेर धन् नृपहरू चलथे पछाडि ॥१६४॥
यस्तै गरेर कहि दिन् अहिछत्र नांको।
पूरीमहाँ पहुँचनै हय गो नि रामको॥
शत्रुघ्नहेरु हयका पछिबाट पौंचे।
देखेर त्यो पुर समृद्धि दङ्ङ परीगे ॥१६५॥
बस्थे तहाँ खुशि भईकन चार वर्णैं।
विप्रादि त्यो अतुल सम्पति भोग गर्नैं॥
सब् घर् थिए स्फटिक माणिक पत्थरैका।
थीए कही चमकने बिजुली सरीका ॥१६६॥
घर्का अटालिहरूमा परि खूब मस्त।
हिंड्थे कहीं सुनयनाहरु सुस्त-सुस्त॥
देख्तामहाँ सुन सरी सबको त कान्ति।
कार्तीककी बिजुलिको हुन जान्छ भ्रान्ति ॥१६७॥
रम्भाहरू अति बढे मिति स्वर्गवास।
छन् रूपमत्त यिनको अपवर्ग नाश॥
गर्छु भनेर विधिले मनुँ यो नगर्मा।
सृष्टी गरे कि युवतीहरु हर्तवर्मा ॥१६८॥

सौन्दर्यको अतुल धाक छ तेसलाई ।
त्यो मेनका अधिक उन्नत ठाम पाई ॥
त्यस्मा पनी म कम के छु भनेर झट्ट ।
कोही उँचा छतमहाँ चढथिन् कि चट्ट ॥१६९॥
ब्रह्मन् ! घृताचिसँग तोड़ पर्‍यो र मेरो ।
मैले गरें कबुल जित्तछु रूप तेरो ॥
जीतूँ कसोरि ! भनदा विधिले कि मानूं ।
दीए पलक् नयनमा अरु के म ठानूँ ॥१७०॥
वीर्‌हेरु जो शहरमा हरियर् भिरेर ।
घुम्थे तहाँ हरदमै सब चेक् गरेर ॥
गुण्डा र डाकु ठग चोर कतै कसैको ।
थीएन डर् जनहरूकन फेरि रोग्‌को ॥१७१॥
सौभाग्य त्यो सहरको सब दिल् दिएर ।
हेर्दै थिए सकलले नगिचै गएर ॥
क्वै बाग थ्यो अधिक रम्य नगर् बिचैमा ।
घोडा कुदेर चलिगो तहिं तत्क्षणैमा ॥ १७२॥
जम्मा अशोक करबीर कदम्ब चाँप ।
पुन्नाग केसर गुलाब शिरीष आँप ॥
बेला जुही कटहरै बिमिरो अनार ।
नास्पाति स्याउ बडहर् बट काञ्चनार ॥१७३॥
फेर् जामुनै बकुल चम्पक साल ताल ।
मन्दार पाखरि बयर् तिनदू तमाल ॥

इत्यादि फलफुल अनेक भई तमाम ।
बस्ने सहर्ष हर जन्तु बनाइ ठाम ॥१७४॥
त्यै बागका बिच अती रमणीय ताहाँ ।
मन्दिर् थियो कहि अपूर्वइ देखदामा ॥
जस्का सुवर्णमय थामविषे अनेकन् ।
हीराहरू खचित भैकन चम्कने झन् ॥१७५॥
त्यो देखि ताज्जुप भई क्यहि रोकिएर ।
शत्रुघ्नले सुमतिसाथ खुशी भएर ॥
सोध्नूभयो सकल बात र फेरि चट्ट ।
भन्छन् तहाँ सुमति हर्षित भै बिछट्ट ॥१७६॥
हे नाथ ! यो असल मन्दिर लोकमाई ।
कामाक्षिको गरनुपर्छ प्रणाम जाई ॥
जस्लाइ नित्य सुर-दानव-यक्ष किन्नर् ।
गर्छन् नती-स्तुतिहरू वर माग्दछन् धेर् ॥१७७॥
इन्लाइ नाथ ! अहिक्षत्र पुरा बसेको ।
राजा थिए सुमद नाम भनी कहेको ॥
उन्ले ठुलो तप गरी बहुतै रिझाई ।
मन्दिर् बनाइकन राखिदिए खुशाई ॥१७८॥
शत्रुघ्नले सुमतिबाट यती सुनेर ।
भन्नूभयो अधिक नै दिल खुश् गरेर ॥
त्यो हो पुरी कउन को नृप हुन् कसोरी ।
काहाँ गरे तप बताउ रती नछोडी ॥१७९॥

पाए जसै हुकुम वेश् र ति मन्त्रिजीले ।
शत्रुघ्नका सँग बताउँ दछन् खुशीले ॥
हे वीर् ? अगाडि अहिछत्र पुरीमहाँ क्वै ।
राजा थिए सुमद नामक शूर एकै ॥१८०॥
बैरी मिलेर निजलाइ समर् बिचैमा ।
जीती लिएर बलले सब तत्त्वणैमा ॥
बूवा–मुमा–गज–बलाश्व–धनादि–हीन ।
हूँदा महासुमद खूब बनेर दीन ॥१८१॥
पौंचे र हेमगिरिका बनका बिचैमा ।
कामाक्षिको पदकमल् भजनै मनैमा ॥
एकासनै भइ दुवै नयनै लगाई ।
नासाग्रमा तप गरे बहुतै रमाई ॥१८२॥
यो चालले तिन वरष् तहिं नै बिताई ।
फेरी गरे तप जपीकन माइ ? माई ॥
खाली चपाइ मुखले तब शुष्कपत्र ।
काट्ता तिनै वरष भो अतिक्षीण गात्र ॥१८३॥
फेर् ठण्डिमा जलविषे गरमी जसै भो ।
पञ्चाग्नि तापि, जब श्रावण मास भैगो ॥
खोला बढे जब जमीनमहाँ पसेर ।
गर्दा तपै वरषदिन् पनि बित्न गो र ॥
रोकेर फेरि सब वायुगती समाधि ।
लीएर त्याग गरि बहिरि आँधि व्याधि ॥

हृत्पद्ममा जननिको गरि खूब ध्यान ।
गर्दै थिए सुमदले तप यो महान ॥१८५॥
बाह्रै वरष् यहि तवर् सँग बित्न गो र ।
इन्द्रै कहाँ खबर पुग्न गयो र घेर ॥
देला कि ! दख्खल मलाइ भनेर ताहाँ ।
चिन्ता पऱ्यो अतुल फेरि सुरेन्द्रमाहाँ ॥१८६॥
कन्दर्पलाइ झटपट्ट झिकाइ फेरि ।
भन्छन् ति इन्द्र उसका मुखतर्फ हेरी ॥
भाई ! परयो सकस आज मलाइ केही ।
तिम्रा अगाडि गरछू म बयान तेही ॥१८७॥
के गर्दछौ जब जबै हुन जान्छ चिन्ता ।
कन्दर्प ! हेर दिलमा अधिकै दुरन्ता ॥
दीने हुँदा उचित नै तिमिले सहाय ।
तिम्रा सँगै प्रगट गर्दछु आफ्नु राय ॥१८८
सुन्छौ कि हेमगिरिका वनभित्र ऐले ।
सूनैं ठुलो सुमदको तप आज मैले ॥
के गर्नलाइ निजले तप यो गरे हुन् ।
इन्ले अवश्य मकनै दखलै दिने हुन् ॥१८९॥
सूनेर त्यो खबर रातभर नीद् परेन ।
भान्सामहाँ पनि रुची बुझ क्यै भएन ॥
सङ्गीत गर्न भनि खूब भएर खुशी ।
आयाकि थिन् दिल खुलेन फिरिन् सुकेशी ॥१९०॥

ठान्छू ठुलो हुनु त दुःख रहेछ खालि ।
यो पिर् मलाइ अरु हिंड्छन फूर्तिशाली ॥
ताराहरूकन नटेरि सदैव राहु ।
पक्रन्छ चन्द्र किन ली तिमि नै बताऊ ॥१६१
जिल्लाविषे अति ठुलो अनिकाल पर्दा ।
खानै नपाइ घरघर् जनहेरु मर्दा ॥
सन्ताप् जती दिनदिनै गरछन् अमीर ।
लीदैन है उति बुझ्यौ पिर ता फकीर ॥ १६२॥
तेसो हुँदा अब नगीच पुगी सुमद्कै ।
शेखी हटाउ ! अब झट्ट गएर मद्कै ॥
त्यै काममा तिमि लगाउ बलै अपार ।
उद्योग आफनु न निष्फल आज पार ॥१६३॥
देवेन्द्रको उस बखत् क्यहि दिक्क साथ ।
मर्जी हुँदा तब त केहि झुकाइ माथ ॥
अर्जी गरे अति उमेद बढाइ फेरि ।
कन्दर्पले खुशि भई नगरेर देरी ॥१६४॥
हे नाथ ! त्यो सुमदलाइ नटेरि केही ।
बस्मा म गर्दछु नहोस् अब खेद तेही ॥
सेवक् छँदाछँदइ लौ मइले समान ।
यो कार्य के समझनू प्रभुले महान ॥१६५॥
आज्ञा हवस् त विधिको पनि कार्यभंग ।
पारूँ म ई युवतिबाट दिलाइ रङ्ग ॥

हो कौन यो सुमद मानिस एक पाजी ।
तीन् चुट्किमा वश परी भनुँला हँहाँजी ॥१९६॥
मेरा कडा शरहरू गडदा तमाम ।
कस्को मती हुन गएन हरे ! विकाम ॥
तारा पछाडि दउडे अघि चन्द्र आफै ।
हुन् पत्नि ई अरुकि, यो नलिएर भावै ॥१९७॥
जङ्गल्महाँ बसि खरानि घसी सदैव ।
सारा जनम्भरि भजीकन सिर्फ दैव ॥
तेस्ता ति कौशिक मुनी सरि ज्ञानि को थे ।
ती मेनका वश परी बहुला बनेथे ॥१९८॥
गफ् के गरूँ नि अरुको अघिको म ऐले ।
छोड्दामहाँ अति कडा शरहेरु मैले ॥
विह्वल् भएर बहुतै पहिले हजूर ।
पाल्नूभयो कुटिमहाँ गरूँ के हजूर ? ॥१९९॥
कन्दर्पजी यति भनी लिइ झट् बिदाइ ।
अफ्ना सबै गणहरू पछिबाट लाई ॥
पौंचे जहाँ सुमदको त थियो समाधि ।
चिम्ली दुवै नयन आसनहेरु बाँधी ॥२००॥
उन्का सखा ऋतु वसन्त गएर ताहाँ ।
सब् वेश फूल्हरु फुले ढकमक्क वाहाँ ॥
कुर्लेर कोइलि कुहू कुहु गर्न थाले ।
पौंचाउँ थ्यो अति सुगन्ध तहाँ हवाले ॥२०१॥

फेर् अप्सरा गणहरू चुनिएर पौंची ।
त्यो चालको सुमदको दृढभाव देखी ॥
रम्भा अगी सरि हरेक बजाइ बाजा ।
नाच्ती भइन् ति बस पारुँ भनेर राजा ॥२०२

गानाबिषे जब दिइन् र अनेक ताना ।
नाना किसिम् तब समाधि भयो रवाना ॥
बाना फिरेर ऋतुको अहिले घराना ।
खाना चपाउँछन कोइलिहेरु साना ॥२०३॥

यस्तै विचार नृपले जब गर्न थाले ।
ती अप्सराहरु त औसर छोपिहाले ॥
पाऊ दबाउँछिन कोहि त नेत्रभङ्गी ।
पार्छिन् कही मधुर बोल्छिन रगिचंगी ॥२०४॥

कन्दर्पजी सुमदको पछिबाट पौंची ।
कान्सम्म आफ्नु धनू पनि खूब खैंची ॥
यिन्का उपर् अब चलाउँछु खूब तीर ।
भन्ने विचार गरि ठिक्क भए नि धीर ॥२०५॥

यो देखि दङ्ग परि झट्ट सुमद् नृपैले ।
आफ्ना मनैमन गबड् खुप गर्न थाले ॥
आखीरमा त दिल छक्क पऱ्यो र फेरि ।
सोध्नूभयो नि सबका मुखतर्फ हेरी ॥२०६॥

को हौ तिमीहरु यहाँ किन आज आयौ ।
मेरो पनी जनम यो सफलै गरायौ ॥

आज्ञा सुनेर नृपको खुशिसाथ फेरि ।
रम्भा जवाफ गरछिन् मुखतर्फ हेरी ॥२०७॥
भूपालवर्य ! प्रभुको तप यो अघोर ।
ऐले अचूक भइ तामिल भै शक्यो र ॥
ब्रह्माजिको हुकुम भैकन स्वर्ग सुक्ख ।
दीलाउनै म छु तयार नदेउ दुक्ख ॥२०८॥
जो स्वर्ग स्वर्ग भनि भूतलमा तमाम ।
कल्पेर पुण्य सब गर्छन ठाम ठाम ॥
दोस्रो कहीं छइन हामिहरू सिवाय ।
कस्तो अपूर्व सुख लुट्नु भयो नि हाय ! ॥२०९॥
हुन् ई घृताचि सुनको सरि वर्णवाली ।
गर्नोस पान अधरामृत पुण्यशाली ! ॥
जस्को त दर्शन मिले पनि मात्र खालि ।
संन्यासिको पनि दिलै बनला बहाली ॥२१०॥
रम्भा म हूँ सकल काम-कला प्रवीणा ।
छू है अती विषमवाण बिझेर दीना ॥
मेरो सँगै चढि विमानविषे अनेकन् ।
गर्नोस् विहार पुगि नन्दन वन्‌महाँ भन् ॥२११॥
मन्दारको छ करमा मइले लिएको ।
माला वरण् गरनलाइ प्रभो हजूर्‌को ॥
आशा म गर्छु प्रभुलाइ वरण् गरेर ।
यो मुग्ध यौवन सुफल् गरुँला भनेर ॥२१२॥

विल्वस्तनी इ बुझनोस तिलोत्तमा हुन् ।
देवेन्द्रलाइ पनि बार नआउँदै जुन् ॥
दुर्लभ्य छन् उनि कटाक्ष गरी अपार ।
उत्कण्ठितै छन बनाउनलाइ यार ॥२१३॥
यस्तै अरू पनि अनेक विलास भंगी ।
वस्ताद, पैहि कपड़ाहरु रंगि रंगी ॥
ई अप्सरा चमर हाँकनलाइ नाथ !
तैयार छन् सकल-काम-विकार-साथ ॥२१४॥
क्याबात जन्म प्रभुको कति धन्य धन्य ।
मानीस भै गरनुभो र अगण्य पुण्य ॥
यस्ता कुरंगनयना सब हामि-साथ ।
पाऊनुभो सयल गर्न अलभ्य नाथ ! ॥२१५॥
यति भनि जब रम्भा चूप लागिन् र ताहाँ ।
सुमद गरन थाले यो गवड् चित्तमाहाँ ॥
जसतस गरि मेरो इन्द्रले विघ्न गर्नै ।
इनिहरुकन भेज्या चित्त मेरो बिगार्नै ॥२१६॥
जननि ! गर दया है क्यै गरी चित्त मेरो ।
विकल हुन नजाओस् देखि स्वर्गीय फेरो ॥
यसरि मनमनैमा माइको ध्यान् गरेर ।
सुमद नृपति बोले झट्ट धैर्यै लिएर ॥२१७॥
सुन-न सुन-न भन्छू आज रम्भे म केही ।
जउन छ अभिलाषा खोल्दछू हेर तेही ॥

जुन भुवनमहेशी देवि कामाक्षिको यो ।
गरदछु म त सेवा, ऊ मिले आज भैगो ॥२१८॥
तिमिहरु सब मेरी माइका अंश मात्र ।
बुझिकन रतिभर् लौ लिन्न क्यै कम्प गात्र ॥
जति जति गरिहाल्यौ स्वर्गको यो बयान ।
उति उति खुप मेरो निम्ति यो तुच्छ जान ॥२१९॥
उठ सुमद ! तिमी झट् माग्नु जो पर्छ ऐले ।
खुशि सित तिमिलाई आज दिन्छू नि मैले ॥
कुन दिन जगदम्बा आइ भन्निन् मलाई ।
यहि छ मनमहाँ एक् कामना दिल् लगाई ॥२२०॥
अरु कयहि मनमाहाँ चिन्तना आउँ दैन ।
तिमिहरुकन देखी चित्त यो बिग्रदैन ॥
विधि-हरि जुन माताका शरण् हर्दमै छन् ।
शरण छु म त उन्का अत्तिइन्थैं म के झन् ॥२२१॥
सुख कयहि पनि मैले स्वर्गमा देख्दीनँ ।
यहि बुझिकन मेरो चित्तले चाहँदैन ॥
क्षणिक-सुख जउन् हो अप्सरा साथको जो ।
सकल कृमि लगायत् भोग् गरेकै न हो त्यो ॥२२२॥
अमृत पनि त थोड़ा पुण्यले पाइने हो ।
अलि दिन पछि चट्टै छोडनूपर्न्य नै हो ॥
कनकगिरि चुरो भो नन्दनै बाग हाल ।
यिनिकन पनि सम्झी हुन्न खै दिल् बहाल ॥२२३॥

सुनिकन नृपको यो बात छक्कै परेर ।
वश लिउँ भनि सब्को निश्चयै पट्न गो र ॥
झटपट गरि ताँदो कानसम्मम् पुऱ्याई ।
तड तड शर छाडे कामले भूपलाई ॥२२४॥
छमछम गरि पाऊजेबहेरू बजाई ।
फनफन भइ फन्की भूपके सामु जाई ॥
ति युवतिहरु ताहाँ नाच्न थाले सहर्ष ।
सुमकदन कटाक्षै बाणको पारि वर्ष ॥२२५॥
कहि त ललित भङ्गी साथ केही इशारा ।
गरिकन तहिं उठ्थिन् अर्किको ली सहारा ॥
कहि त नृपतिलाई गर्दथे अङ्कमाल ।
कहि त मधुर बोली चित्त गर्थे कमाल ॥२२६॥
यस रितसित आफ्नू गर्नसंमन् गरेर ।
नृपति-वश नपर्दा दिक्क साहै भएर ॥
सुरपुरतिर फिर्ता भै सबै इन्द्रसाथ ।
खबर सब सुनाए नम्र पारेर माथ ॥२२७॥
यहि रितसित तिन्को देखि त्यो तीव्र भक्ति ।
सुमद नृपतिनेरै पाल्नुभो आदिशक्ति ॥
शर धनु लिइ हात्मा पाँचमूखे भएकी ।
असल मुकुट लाई सिंहमाथी चढेकी ॥२२८॥
जब सुमद नृपैले आफ्नू सामुमाहाँ ।
त्रिभुवन धनिलाई देखिहालेर ताहाँ ॥

अति खुशि भई ताहाँ पक्क भैंगेर चट्ट ।
बढिकन हरषाश्रू देख्न छोडे नि पट्ट ॥२२९॥
अनिपछि शिरमाहाँ धाप दीएर फेरि ।
सुमदकन करैमा पक्रनूभो र हेरी ॥
तब त क्यहि विचारै मन्महाँ फुर्दिनाले ।
गदगद भइ केही भूपले बक्न थाले ॥२३०॥
जय जय जगदम्बे ! सर्वलोकैकमान्ये !
सुरमुनिजनवन्द्ये ! पर्वताधीशकन्ये !
अखिलनिगमवेद्ये ! पाशचापादिहस्ते !
भुवन जननि ! मातः ! शुद्धरूपे ! नमस्ते ! ॥२३१॥
अचर चर सबै यो तीन् त्रिलोक् व्याप्त पारी ।
घट घट रहि सब्को पाप पुण्यै बिचारी ॥
दुख सुख दिइ लोक्मा साक्षिरूपै भएकी ।
जननि ! हजुर एक् छौ वेदले मानिएकी ॥२३२॥
विधि-हरिहर लोक्को सृष्टि संहार पालन् ।
भइ खटन हजुरकै खूशिले नित्य गर्छन् ॥
हरदम हिंडि यो दिन् रात हो यो भनेर ।
त्रिभुवनबिच घुम्छन् सूर्यचन्द्रै मिलेर ॥२३३॥
किरणहरु फिजाई सब् रसै खैंचि फेरि ।
रवि गरछन वृष्टि श्रावणै मास हेरी ॥
गरछिन धरती यो धारणै नित्य लोक्को ।
भगवति ! हजुरैको शक्तिको काम नै हो ॥२३४॥

जुन बखत छ सृष्टी तेसभन्दा अगाडि ।
प्रलय समयभन्दा धेरई नै पछाडि ॥
अविकृत भइ एकै रूपले नै रहेकी ।
हजुरकन म ठान्छू नित्यरूपै भएकी ॥२३५॥
हजुरकन गराइ खूशि क्यै कालमाहाँ ।
वर लिइकन शक्ति प्राप्त भै फेरि याहाँ ॥
छल गरि म ठुलो हूँ शक्तिमान् छू भनेर ।
भुवनबिचमहाँ नै पूजिए देव धेर ॥२३६॥
स्तुति गरन हजुर्को शेष ब्रह्मै हरू नै ।
नशकिकन यथार्थै गर्दछन् है विरामै ॥
भगवति ! म गरूँ ला के स्तुती फेर् हजूर्को ।
कनिकुथि गरिहाले तैपनी होस् न झर्को ॥२३७॥
यति भनि जब राजा माइको पाउमाहाँ ।
स्तुति गरि दृढभक्ती पस्त्रिएथे र वाहाँ ॥
उठ-न वर म दिन्छू भन्नुभो जब् वहाँले ।
तब त सुमद नृप्ले खूशिले भन्न थाले ॥२३८॥
भगवति ! म छु ऐले हीन दीनातिदीन ।
रिपु बढि हुन जाँदा राज्य सम्पत्तिहीन ॥
उहि बखत म पाऊँ भक्ति होस् फेर् हजूर्को ।
लय पछि हुँ हुजूमैं तीन् थरी भो हजूर्को ॥२३९॥
यति सुनि जननीले भन्नुभो झट्ट फेरि ।
मुसुमुसु गरि हाँसी भक्तका तर्फ हेरी ॥

कतल दुशमनैको पारि फेर् राज्य सारा ।
लिइ ससुख बसौला वर्षहेरू हजारा ॥२४०॥
जब त रघुपतीले रावणैलाइ मारी ।
गरदछु हयमेधै यज्ञ लौ आज भारी ॥
भनि यति हय छोड्लान् भाइ शत्रुघ्नलाई ।
दिइकन हयरक्षातर्फको मुक्तियारी ॥२४१॥
हय घुमि घुमि तिम्रा आउला देशमा जब् ।
धन जन सब अर्पी जाउला साथमा तब् ॥
हयसित गइ पोंची रामको गाइ नाम ।
अनि पछि त पुगौला मुक्तिको जुन छ धाम ॥२४२॥
यति भनिकन अन्तर्धान माई हुनूभो ।
धन जन सुमदैले फेरि त्यो पाउनूभो ॥
हय रघुवरको यो चाल पाए उनीले ।
हजुरसँग त मिल्नै आउलान् है खुशीले ॥२४३॥
यति सुनि दृढ भक्ती राखि कामादिमाहाँ ।
सुमद नृपतिको यो घोर तप् फेरि वाहाँ ॥
अति खुशि भइ तारीफ् गर्नु भो धीर् बनेर ।
सुमद नृपतिको शत्रुघ्नले दङ् परेर ॥२४४॥
उसतिर त सुमद्का मन्त्रिहेरू लिएर ।
कचहरिबिच राज् थ्यो खुप् तयारी भएर ॥
क्वहि गइकन कान्मा झट्ट यो बात् सुनायो ।
घुमि घुमि हय यौटा भूपते ! आज आयो ॥२४५॥

सुनिशकि यति ताहीं भूपले चर् पठाए ।
तिमि गइ गरि थाहा फेरि फर्केर आए ॥
गइ पढि गरि एकीन् दूत फर्केर आयो ।
हय त रघुपतीको हो भनी झट् बतायो ॥२४६॥
भइ खुशि सुमदैले आफनो त्यो नगर्मा ।
हुकुम गरि पठाए आज लौ झट्ट घर्मा ॥
गरनु खुब महोत्सव् तोरणै बाँधिहाल्नू ।
सडक पनि सबैले हर्षका साथ् पखाल्नू ॥२४७॥
यति दिइकन उर्दी आफु तय्यार् भएर ।
कसन भनि लगाई हात्तिहेरू चुनेर ॥
लिइकन सब छोरा रानिहेरू तमाम ।
सुमद पनि पुगे शत्रुघ्न थे जौन ठाम ॥२४८॥
तब त अति खुशी भै हात्तिबाटै झरेर ।
लिइ विनय बहूतै पाउमा पस्रिएर ॥
प्रणति गरि सुमद्ले झट्ट शत्रुघ्नजीको ।
विनति गरन थाले जो भएको अघीको ॥२४९॥
हुकुम म जननीको ख्याल गर्दै सदैव ।
दिन कटनि गरेको थें खुशी भै सुदैव ॥
दरशन गरि आफूलाइ धन्यै म ठान्छु ।
म पनि हय हजुर्कै साथ ऐले त जान्छु ॥२५०॥
जति छ धन समृद्धी अर्पणै गर्छु नाथ ।
खुशि भइ लिइबक्स्योस् राज्य यो भक्तिसाथ ॥

यति सुनि सुमदैको प्रार्थना खुश् भएर ।
शहरतिर सवारी चल्न गो धीर् बनेर ॥२५१॥
सहित तनय पुष्कल् वीर शत्रुघ्नलाई ।
नृपति सुमदजीले हात्तिमा नै चढाई ॥
नगर सब घुमाए पूजनै गर्न लाए ।
अनिपछि दरवार्मा हर्षको साथ ल्याए ॥२५२॥
लगिशकिकन आफ्नो मुख्य दर्बार-भित्र ।
ठिक गरि सरसर्जाम् अर्घहेरू पवित्र ॥
खुशिसित गरि पूजा वीर शत्रुघ्नको नै ।
अरपण गरि राज्यै रामको नाममा नै ॥२५३॥
अनिपछि सुमदैले वीर शत्रुघ्नसाथ ।
रघुपतिकन सोधे नम्र पारेर माथ ॥
दशवदन निभाई राज्यको भार बोकी ।
रघुवरकन आराम् गाथमा छैन हो कि ! ॥२५४॥
जनि गरि प्रभुले क्यै श्रीसितानाथका क्वै ।
वरणन गरि बक्स्ये नी चरित्रामृतै तै ॥
सफल जनम हुन्थ्यो जो कृपा हुन्छ ऐले ।
ढिपि अब गरूँ के धेर् फेर् हजुर् साथ मैले ॥२५५॥
यति सुनि बुझि भक्ती रामका पाउमाहाँ ।
सुमद नृपतिको त्यो वीर शत्रुघ्न ताहाँ ॥
उनिकन त सुनाई राम-नाम-प्रभाव ।
तिन दिन बसि फर्कौं लीकनै स्वच्छ भाव ॥२५६॥

अनिपछि सुमदैले आफनू राज्य-भार ।
सुतकन दिइ आफू जान साहै तयार ॥
भइकन गरि सर्जाम् सैन्यहेरु लिएर ।
हय पछि हिडनामा मन् गरे खुश् भएर ॥२५७॥
धन जन सब जम्मा पारि शत्रुघ्न वीर ।
सुमदकन लिएरै पालनूभो सुधीर ॥
हय पनि दगुऱ्यो झट् फेर् पयोष्णी नदीका ।
तिरतिर कुटि जाहाँ धेर थीए मुनीका ॥२५८॥
अति असल तहाँ क्वै आश्रमै देखियो र ।
विविध हरिण खेल्दा चित्त खुशी भयो र ॥
सुमतिकन तुरन्तै वीर शत्रुघ्नजीले ।
सब कहु भनि ताहाँ सोध्नुभो यस रितीले ॥२५९॥
वरिपरि शुभ-वेद्‌का पाठले घन्किएको ।
अति हवन हुँदा त्यै रापले रन्किएको ॥
घट सरि कलचौंडे गाइले शोभिएको ।
मृग हरिणहरूले पाउरी मारिएको ॥२६०॥
खुशिसित कहिं मूसासाथ बिराला बसेको ।
कहिँ मुजुर त सर्पैसाथ खेलीरहेको ॥
उहिं कहिं चितुवाका साथ गाई बसेको ।
कउन मुनिजिको यो आश्रमै हो बनेको ॥२६१॥
यति सुनि सुमतीले भन्दछन् नाथ! जल्ले ।
मनुमखबिच भयास्सै आफनो नै खुशीले ॥

बलसित अघि सेखी इन्द्रको तोडने जो ।
च्यवनमुनिजिको यो भाग्यवान् आश्रमै हो ॥२६२॥
यति सुनि अनि फेरी वीर शत्रुघ्नजीले ।
कहु सब भनि आज्ञा गर्दिनूभो खुशीले ॥
तब सुमति खुशी भै हात जोडेर फेरि ।
बरणन सब गर्छन् मालिकैतर्फ हेरी ॥२६३॥
भृगु मुनि तिन लोकमा मान्य जो थ्ये उनीले ।
कहि दिन अलि सायङ्कालमा नै खुशीले ॥
गृहिणिकन त जिम्मा अग्निका लाइ बन्मा ।
कुशहरु लिनलाई पाल्नुभो है मगन्मा ॥२६४॥
तब त खल जउन् थ्यो दुर्मना राक्षसैले ।
खयि! भनि मुनि-पत्नी क्रोधले सोध्दिनाले ॥
डर भइ अति अग्नीले इनै हुन् भने जब् ।
बल गरि उसले ता कुसु न्याई लग्यो तब् ॥२६५॥
डर भइ मुनिपत्नीको भयो गर्भपात ।
रिस गरिकन बालक्का कटाक्षै हुँदा त ॥
उठिकन दुइ ज्वाला भस्म भो राक्षसै ता ।
लिइकन निजबालक् फर्किइन् फेरि माता ॥२६६॥
यति सुनि मुनिले झट् अग्निलाई रिसैले ।
सब चिजहरु खाने शाप भइँ दिनाले ॥
शरण छु भनि अग्नी पाउमा पर्दिनाले ।
तइपनि शुचि होलास् भन्नुभो खुश हुनाले ॥२६७॥

पतन हुन गयो लौ गर्भदेखिन् भनेर ।
च्यवन भनिदिए नाम् जातकर्मै गरेर ॥
अनि बढि सब शिष्यै साथमा नै लिएर ।
तप गरुँ भनि रेवाका तिरैमा पुगेर ॥२६८॥
सय अयुत वरष तक् आसनैमा जमेर ।
तप गरिकन बस्ता ढिस्किलो क्वै बनेर ॥
गुँड पनि धमिराले लाइहाले उनैमा ।
तिनि च्यवन ऋषीका सामुमा क्वै दिनैमा ॥२६९॥
कहि नृप सरयाती तिन्कि पुत्री सुकन्या ।
अति असल गुणैकी रूपमा खूब धन्या ॥
उनि सखिहरु साथै वन् विहार् गर्न थालिन् ।
च्यवनकन ठुटोका भानले घोचिहालिन् ॥२७०॥
नयन फुटि मुनीको खुप् रगत् बग्न थाल्यो ।
मन मन नृपकन्याका त शंका परीगो ॥
नभनिकन कसैका साथ यो गुप्त बात ।
गइकन बसिहालिन् पालमा रातमा त ॥२७१॥
तब त नृपतिको त्यो छाउनीमा तमाम ।
अधिक भयद उत्पात् फैलियो राम राम ॥
धन जन त हराए कोहि रोगले कराए ।
डगमग धरती भो कोहि ती बडबड़ाए ॥२७२॥
अनि तब नृपले सब् आफना पार्टिलाई ।
धिरज गरि सुध्याए केहि लालच् दिलाई ॥

च्यवन मुनि यहाँ छन् क्यै कसैले उनीको ।
मन नबुझि बिजाईं गर्दियो की कुटीको ॥२७३॥
धकसित त सुकन्याको वचन् त्यो सुनेर ।
मुनिसँग तब राजा पुग्नुभो दीन् बनेर ॥
भइकन अनजानै क्यै कसैले बिराऊँ ।
इनिहरु गरिहाले यो मुने ! माफ पाऊँ ॥२७४॥
यति तब नृपको त्यो बिन्ति सुन्दा मुनीले ।
भइकन अलि दिग्दार् भन्नुभो तै खुशीले ॥
नृप ! सब सुन कन्या तिम्रि जो हुन् सुकन्या ।
दुइ नयन बिगार्न्या बन्न गै रूपधन्या ॥२७५॥
मनसुब यदि यो उत्पातको गर्न शान्ति ।
छ तब खुरुक देऊ कन्यका छोडि भ्रान्ति ॥
म विधिसित विवाहै गर्दछू हर्षसाथ ।
टहल इ गरनिन् है भक्तिले संझि नाथ ॥२७६॥
बुझिकन मुनिको यो मतलबै झट् नृपैले ।
क्वहि नमिलि उपायै पुत्रि सौंपे खुशीले ॥
शमन गरि उपद्रव् केहि दिग्दार नै भै ।
शहरतरफ फर्कैं भूपती राज्य गर्नैं ॥२७७॥
उसतिर त सुकन्या आफना स्वामिलाई ।
हरतरह गरेरै बस्तथिन् खुश् तुल्याई ॥
खुशि भइ मुनिकाहाँ अश्विनीका कुमार ।
घुमदइ दुइ आए देवता एक वार ॥२७८॥

उनिहरुकन पूजा अर्घहेरू गरेर ।
अतिथि भनि सुकन्याले गरिन् मान धेर ॥
खुशि भइ वर दिन्छौं माग लौ मन् दिएर ।
तब उनि वर लिन्छिन् वैद्य हुन् ई भनेर ॥२७९॥
नयन विकल घर्मा देखदा स्वामिलाई ।
अति विरह सधैं यो उठ्छ हेर्नोस् मलाई ॥
यदि क्यहि छ दबाई योग्य ई नेत्रलाई ।
जनि गरि यसमाथी बक्सनोस् स्वामिलाई ॥२८०॥
यति सुनिकन फेरी भन्दछन् वैद्यराज ।
सुन-न सुन सुकन्ये ! एक हाम्रो छ काज ॥
यदि ऋषि भइ खूशी यज्ञमा भाग हाम्रो ।
हक छ भनि दिलाउन् पार्दछौं नेत्र राम्रो ॥२८१॥
अनुमति मुनिको भो त्यो कबोलमा खुशीले ।
दहबिच मुनिलाई ली दुवै फाल हाले ॥
अलिपछि तब उत्रे दिव्यरूपी बनेर ।
नचिनिकन सुकन्या आत्तिइन् है भुलेर ॥२८२॥
चकित नबन तिम्रा ई पती हुन् भनेर ।
स्वभवनतिर फर्के तो दुवै खुश् भएर ॥
अनिपछि त सुकन्या आश्रमैमा गएर ।
टहल गरि पतीकै बस्तथिन् दङ् परेर ॥२८३॥
टहल हरदिनैको देखि तिन्को अगएय ।
क्वहि दिन ऋषिजीले ठानि तिन्लाई धन्य ॥

सकरुण तिनिलाई भन्नुभो हे पियारी !
म खुशि छु वर लेऊ दीनमा छू तयारी ॥२८४॥
यति सुनि पतिको त्यो मानु अमृरीत वर्ष ।
वचन मिलि सुकन्यालाइ भैगो र हर्ष ॥
अनि तब कर जोरी भन्दछिन् भूपछोरी ।
वरपर कहि हेरी आफनू भाव फोरी ॥२८५॥
धनजनहरुको सुख् माइतै भोगिहालें ।
मुनिटहल तिरैको सुख् पनी चाखिहालें ॥
अब कउन छ बाँकी आफुले नै हजूर ।
बुझिकन वर बक्स्योस् के गरूँ फेर् उजूर ॥२८६॥
मुनि पनि अनि मस्की भन्नुभो के छ धन्दा ।
मनसुब पुगिजाला झट्ट नै येति भन्दा ॥
बहुत किसिम सर्जाम् रत्नका नै महान ।
घुङरुहरु जड़ेको ताहिं आयो विमान ॥२८७॥
मणिखचित भएको फेर् बघैचा खुलेको ।
तहिं महल तयार् भो योगबल्ले खिचेको ॥
अब त यहि सरोवर् बीचमा गै नुहाऊ ।
सकल मल पखाली ठाँटिइ फेरि आऊ ॥२८८॥
तबत यहि मुताबिक् स्नान गर्दा सुकन्या ।
अति दङ परिहालिन् देखदा धेर कन्या ॥
छमछम गरि पाऊजेउहेरू बजाई ।
चलछन अति गम्की सुन्दरै गान गाई ॥२८९॥

सब छन उहि रङ्का फेरि एकै अवस्था ।
तरुणिहरु हजारौं स्नानमा ताहिं पस्ता ॥
मिलिकन तब भन्छन् भाग्यले भट्ट आज ।
हजुरकन मिलीगो दासिको यो समाज ॥२९०॥
अनि पछि त सुकन्या दासिहेरू पछाडि ।
हिंड भनि पुगनूभो मालिकैका अगाडि ॥
रसवशतिर उन्को भाव ठानी जुरुक्क ।
उठि मुनि उ विमान्मा हालि पारे फुरुक्क ॥२९१॥
असल रँगविरङ्का ताहिं छन् धेर वस्त्र ।
तहिं फल फुल बाजा छन् जउन् कामशास्त्र ॥
पलङ लङ लगाई भूल चादर् भरेका ।
हरचिज तहिं छन् है ठामठांमा धरेका ॥२९२॥
तहिं बसि खुशिसाथै किन्नरीहेरुलाई ।
सरस मधुर गाना गर्नमा गै खटाई ॥
कुल गिरिहरुमाहाँ नन्दनैंमा कहीले ।
सयल खुब खुशीले गर्नुभो है मुनीले ॥२९३॥
अयस यस किसिंले गर्न लाग्दा मुनीको ।
सय वरष बितीगो क्यै नलागी ननीको ॥
तब अनुमति लीई कामिनीको ऋषीले ।
उहि विपिनकुटीमा फर्कनूभो खुशीले ॥२९४॥
स्थिति जउन पहीले थ्यो उही रीतिसाथ ।
टहल गरि सुकन्या बस्तथिन् संभि नाथ ॥

कहि दिन मख गर्नैंलाइ सर्याति राजा ।
दुत वनबिच भेजे ज्वाइँ छोरी लि आजा ॥२९५॥
च्यवनमुनि जहाँ थ्ये दूत पौंचेर ताहाँ ।
सब कहि लिइ आया झट्ट नै यज्ञमाहाँ ॥
तब त नृप सुकन्यासाथ अकैं ठिठोले ।
मुनिकन जब देखे दङ् परी चट्ट बोले ॥२९६॥
नबस नबस मेरा छेउमा आज दुष्टे !
मनुकुल त कलङ्कित् पारिहालिस् कुचेष्टे !
पति पितृ-कुल डूबे भ्रष्ट पारिस् तईंले ।
किन जनम दिएँछु हाय ! तेरो मईले ॥२९७॥
च्यवन मुनि सरीको सिद्धयोगीश्वरैको ।
टहल गरन कन्यादन दी फर्किएको ॥
खुशि भइ लिन भेज्दा हाल यो भूसतिग्रे ।
सहित घर तँ पस्ता तीन पुस्ता त बिग्रे ॥२९८॥
भुवन भर दुनीयाँ मामुली नै हवोस ।
गरलि भनि कुचेष्टा छोरिमा दिन्छ होश ॥
तइ म त नृप तैंले के लिइस् दुष्ट राय ।
अब गरुँ म कसो लौ के भनूँ हाय हाय ॥२९९॥
मख गरुँ भनि आँटें पारिहालिस् सरम् ता ।
बसदिनँ घरमाहाँ चल्दछू भै फिरन्ता ॥
जनम हुनु तँ जस्तो नक्कले छोरि चाहिं ।
बरु गरभ पतन् होस् या हउन् कोहि नाहीं ॥३००॥

अनिपछि त सुकन्या आफनो बाबुलाई ।
धिरज धरि सबै त्यो हाल् सुनाइन् बुझाई ॥
तब त अति खुशी भै चट्ट सर्याति भूप ।
मनबिच लिइहाले छक् परी हर्ष खूप ॥३०१॥
तब त अति खुशी भै साम यज्ञै शुरू भो ।
कबुलियत मुनीले चट्ट नै संभनूभो ॥
अनि तब पहिले नै अश्विनी-पुत्रलाई ।
च्यवन मुनि दिनूभो भोग चट्टै लगाई ॥३०२॥
तब त अति रिसाई वेगले इन्द्र भट्ट ।
गगनबिचमहाँ नै बज्र लीएर चट्ट ॥
च्यवनतिर प्रहारै गर्न तय्यार् हुँदामा ।
च्यवनमुनिजिले ता एक हुङ्कार् दिदामा ॥३०३॥
हलनचल जसै ता इन्द्रको बाहु भैगो ।
तब त सकल चट्टै इन्द्रको गर्व गैगो ॥
शरण अब लिनूहोस् बालकै हूँ अजान ।
बरु अश्विनिकुमार्ले पाउलान् भाग खान ॥३०४॥
यिनिहरु सब हाम्रा वैद्यहेरू हुनाले ।
अनुचित अलि पर्ला यज्ञको भाग् दिनाले ॥
भनिकन अभसम्मन् रोकियो भाग नाथ ।
हुकुम लिइ हजूर्को सो दियौं हर्षसाथ ॥३०५॥
जब शरण परेथ्यो इन्द्र यस्ता रितीले ।
तब त सुरुक बाहु खोल्दिनूभो मुनीले ॥

खुशि भइकन यज्ञै झट् समाप्तै भयो र ।
धन-जन अनगिन्ती भूपले दान् दिएर ॥३०६॥
च्यवनमुनि खुशीले आश्रमै पालनूभो ।
खतम गरिदिएँ लौ नाथले सोध्नु जो भो ॥
अब गरिकन दर्शन् ई मुनीको गएर ।
मखबिच इनलाई भेज्नुहोस् खुश् भएर ॥३०७॥
यति सुनिसकि ताहाँ वीर शत्रुघ्न फेरि ।
सममिकन सूनी सब् क्यै नलीएर देरी ॥
च्यवन मुनि कुटी गै पाउमा पत्रिएर ।
म त रघुपतिजीको भाइ शत्रुघ्न हूँ र ॥३०८॥
हय पछि पछि आएँ यज्ञको भाग्यले पो ।
दरशन मिलदो भो लौ हजूर्को त यस्तो ॥
अब हजुर ममाथी राखि नीगाह नाथ ।
उहिं अब चलिबक्स्योस् यज्ञमा हर्षसाथ ॥३०९॥
मुनि तब क्यहि हाँसी भन्नुभो हेर कस्तो ।
अगम छ महिमा श्री रामको ढङ् छ यस्तो ॥
भुवन बिचभरैको पातकी रामजीको ।
स्मरण गरिदिनाले मात्र छौ जान्छ नीको ॥३१०॥
उहि भुवन विधाता रामले यज्ञ गर्नू ।
अरु सरह मखैमा कुश् बिछ्याएर सुत्नू ॥
अगम छ प्रभुको यो नाट्यलीला विचित्र ।
हरदिन सब जन्का जौन छन् खाश मित्र ॥३११॥

म पनि अब खुशी भै जान्छु है यागमाहाँ ।
अति भइकन बस्छन् श्रीसितानाथ जाहाँ ॥
यति भनिकन आफ्नू शिष्यवर्गै लिएर ।
मखतिर मुनि जानै आट्नुभो खुश भएर ॥३१२॥
तब लिइकन आज्ञा वीर-शत्रुघ्नजीको ।
खुशिसित हनुमान्जी यज्ञमा पाल्नूभो ॥
धरिकन पिठमाहाँ शिष्य साथै बलैले ।
मुनिकन पहुँचाए झट्ट वायू-कुमार्ले ॥३१३॥
च्यवन मुनि जसै ता पुग्नुभो यागमाहाँ ।
अनि त रघुपतीले खूब भै हर्ष ताहाँ ॥
मुनिकन तब पाद्यार्घ्यादिहेरू गरेर ।
उचित कुशल प्रश्नै गर्नुभो दङ भएर ॥३१४॥
उसतिर हय दौड्यो त्यो पयोष्णी तिरैतिर् ।
जल-तृणहरु खाँदै आफनू राखि जीगिर् ॥
पछि पछि सब दौडे सैन्य शत्रुघ्नसाथ ।
कहि नगरि बचावट् खूब हल्लाइ गाथ ॥३१५॥
यहि रित सित पौंच्यो रत्नतट् नामको जो ।
विमल नृपतिको त्यो राजधानी खुदै हो ॥
तब त नृप खुशी भै रामका पाउमाहाँ ।
धन जन सब सौंपी चल्नुभो साथमाहाँ ॥३१६॥
यहि तवर हयै त्यै फेरि दौड्यो बिछट्ट ।
गजब गिरि तहाँ कै देखिदो भो र चट्ट ॥

दङ परिकन फेरी वीर शत्रुघ्नजीले ।
सुमति तरफ हेरी सोधनूभो खुशीले ॥३१७॥
वरिपरि छहरा छन् छर्किने वेगवाला ।
दिइकन अति शोभा दील गर्ने बेहाला ॥
पवन पनि चलेको शीतलो मन्द मन्द ।
लिइकन खुब खाशा फूलको त्यो सुगन्ध ॥३१८॥
सुन पितल र चाँदीहेरुको खानिमाहाँ ।
टक परि त किरण् झट् सूर्यको सामुमाहाँ ॥
झलमल भइ आँखाहेरुको तेज हर्ने ।
सब रङ मिलदा इन्द्राणिको भान पर्ने ॥३१९॥
फुल फुलि सब हाँगा वृक्षका नूहिएर ।
हरघडि चलि हावा फूलहेरू खसेर ॥
गिरिवरकन पूजा गर्नलाई भनेर ।
तरु सजित भए झैं भान नै पर्छ धेर ॥३२०॥
उहिं कहिं अति खाशा गेरुको त्यो जमीन्मा ।
फुल खशि रङरङ्का फीजिइ पर्दिंदामा ॥
कटितट पहिरेको सिंहको चर्मशाली ।
शिवजि सरि मलाई भान गै पार्छ खालि ॥३२१॥
स्फटिकतट हुनाले एक् तरफ् स्वच्छ कान्ति ।
हरित-मणि हुँदामा उस् तरफ् हुन्छ भ्रान्ति ॥
उस तरफ सफेद् भाग् एक् तरफ् नील भाग ।
दुइ नदि मिसिएका संझिहाले प्रयाग ॥३२२

ढुकुर-मजुर-कालिज्-कोइली फेर् जुरेली ।
चउतरफ खुशीले बोल्दछन् खुब् सुरीली ॥
भ्रमर मुनि-गणैको अप्सरादीहरूको ।
ध्वनि सुनि अति मीठो चित्त मेरो खुशी भो ॥३२३

खुशिसित सब द्योताहेरु कान्ता सँगैमा ।
लिइकन सब चल्छन् नाच हेर्दैं मगन्मा ॥
कहि खुशि भइ चारण् फेरि गन्धर्व साथ ।
सुरपति मुनि गाना मस्तछन् व्यस्तमाथ ॥३२४॥

अभ्रतक यस रित्को कीहि सुन्दर् महान ।
गिरि न त कहिं देखें सत्य यो बात जान ॥
म त मन मन ठान्छू यै सरीको त अर्को ।
भन-न ! कहिं न होला क्यै नमानेर झर्को ॥३२५

कुटि छ कुन ऋषीको येसको टाकुरामा ।
खुशिसित फिरदा छन् देवता घर् मगन्मा ॥
तिमि सकल बताऊ हर्षले लौ सुमन्त्र !
प्रथम भन जउन् हो नाम यस्को स्वतन्त्र ॥३२६॥

सुनिकन यति ताहाँ मर्जि शत्रुघ्नजीको ।
खुशिसित तब भन्छन् मन्त्रिले जो भएको ॥
यस गिरि उपरैमा पार्षदै साथ् लिएर ।
त्रिभुवन पतिको वास् श्रीहरीको भएर ॥३२७॥

छ अति मधुर शोभा नील् गिरी नां भएको ।
यहि गिरि बुझिबक्स्योस् हाल् नजर् भैरहेको ॥

अति हुन गइ पुण्यै जन्म जमान्तरैको ।
गिरिवर प्रभुको यो सामुमा देखिनै गो ॥३२८॥
परधन परनारी रक्त ढाँटेर बोल्ने ।
पितृ-गुरु-जनलाई चट्ट दुर्वाच्य बोल्ने ॥
यहि तवर कुकर्मी आउने बित्तिकैमा ।
यहि गिरि बुझिबक्स्यो लुक्छ है बेपतैमा ॥३२९॥
यस उपर हरीको मन्दिरैमा पुगी जो ।
धरिकन दृढ भक्ती खान्छ नैवेद्य झट् त्यो ॥
उहि बखत चतुर्भुज् विष्णुको रूप धारी ।
बनदछ म त भन्छू क्यै कथा आज भारी ॥३३०॥
अघि कहि नृप थीए रत्नग्रीव् नाम् भएका ।
त्रिभुवन गनिएका काञ्चिपुर्मा बसेका ॥
सुत सरि गरि राख्थे आफना रैति सारा ।
रइति पनि थिएनन् पापि क्यै साहुमारा ॥३३१॥
कहि दिन नृप आफ्नू थे सभा बीचमाहाँ ।
खुश भइ कहि ब्राह्मण् पौंचिहालेर ताहाँ ॥
चरणतल तिनैको पस्नि बद्धाञ्जली भै ।
उनि नरपतिले यो प्रश्न सोधे खुशी भै ॥३३२॥
द्विजवर ! सब ग्रोताहेरुमा को छ धन्य ।
त्रिभुवनभरका सब् तीर्थमा को छ मान्य ॥
मउपर गरि मेहर्बानि यो दूइ बात ।
निरणय गरि बक्स्योस् जोड्दछू खूब हात ॥३३३॥

यति सुनि मुनि भन्छन् देवमा रामतुल्य ।
नृपवर बुझिबक्स्योस् कोहि छैनन् अनूल्य ॥
दिइकन इतिहासै तीर्थ हेरूमहाँ जो ।
छ अतिशय त मुख्यै भन्दछू हर्षले पो ॥३३४॥
कहि दिन मनमाहाँ तीर्थ सब् गर्नलाई ।
लहड अति चलीगो ज्यास्ति नै जब् मलाई ॥
गरदछु सब तीर्थै लौ भनी झट् पहिल्यै ।
नृपवर ! म खुशीले झट् अयोध्या पुगीगै ॥३३५॥
दरशन गरि ताहाँ देवताको बहूतै ।
अनिपछि म त फर्कें काशिमा देश हेर्दै ॥
उसपछि त त्रिवेणी संगमैमा पुगेर ।
खुशिसित म त गङ्गासागरै स्नान् गरेर ॥३३६॥
जति जति छन नामी तीर्थहेरू जगत्भर् ।
उहिं उहिं म त पोंचें तीर्थको राखि आदर् ॥
नृपवर ! सुनिबक्स्योस् तैपनी नीलपर्वत् ।
सरि अति गजबैको तीर्थ देखीनँ अन्यत् ॥३३७॥
जुन गिरिवर पुग्दा भर्जनम् ताति छाती ।
हरिणहरु गिराई हिंड्दछन् भाँति भाँति ॥
प्रकृति कुटिल यस्ता भिल्लहेरू तमाम ।
बनिकन त चतुर्भुज् घुम्दछन् गाइ नाम ॥३३८॥
अनुभव गरि यस्तो खूद आफ्ना नजर्ले ।
गवड खुब गरें यो झट् तहाँ मन्मनैले ॥

विधि रविहरुलाई दुर्लभैको कुरा यो ।
कसरि ! इनिहरूमा आज लौ घट्न आयो ॥३३९॥
चकित अति भएँ जब् देखि त्यस्तो विचित्र ।
तिनिहरुकन सोध्नै निश्चयै भो र मित्र ॥
नगिच पुगि त बिन्ती साथ सोधें र मैले ।
खुशिसित उनिहेरु मन्त्र थाले क्रमैले ॥३४०॥
बालक् यौटा कहि दिनमहाँ यै गिरीको चुरैमा ।
हाम्रा टोलको डुलदइ गई फर्किगो तत्क्षणैमा ॥
चार् बाहुको हरिसरि सबै तेसको देखि रूप ।
सोध्यौं कारण् शिशुकन सबै दङ् परी चित्त खूप ॥३४१॥
कस्ता रीत्ले झट बदलिगो आज तिम्रो शकल् यो ।
भन्दा उत्तर् खुशिसित गऱ्यो विष्णुभेष्को निदान् त्यो ॥
सुन्नोस् खेल्दै गिरिशिखरमा पौंचिहालेंछु ताहाँ ।
देखें मन्दिर् मणिजड़ित एक् रत्नको रम्य वाहाँ ॥३४२॥
कौतुक् साहै हुन गइ म ता झट् गएँ तेसभित्र ।
केयूर् कुण्डल् सहित हरिको मूर्ति देखें विचित्र ॥
हात्मा राखी फुल तुलसिदल् गर्दथे कोहि पूजन् ।
धूप दीप् गर्थे सुरमुनिहरू हर्षले क्वै अनेकन् ॥३४३॥
कोही नाच्थे हर तरहको स्तोत्र पाठ् कोहि गर्थे ।
क्वै नैवेद्यै लगिकन असल् विष्णुका साम्नु धर्थे ॥
यस्तो पूजा गरिसकि प्रसाद् खाइ जाँदा सबैले ।
दीए थोडा मकन र प्रसाद् चट्ट खाएँ र मैले ॥३४४॥

चार् बाहुको सहज बनदा विस्मयै भै तमाम ।
फर्के टोल्मा यहि गिरि सबै मल कारण् छ जान ॥
बालको यो सुनिसकि वचन् हामिहेरू सबै जन् ।
पौंची ताहाँ खुशि भइ गर्‍यौं विष्णुको फेरि पूजन् ॥३४५॥
नैवेद् खाई सब बनिगयौं विष्णुको रूप धारी ।
धूप् दीप् नीराजन पनि गर्‍यौं भक्ति राखेर भारी ॥
यस्तो रूपको हुन मन भए जानुहोस् यी गिरीमा ।
नैवेद् खाई हरि सरि भई फिर्नुहोस् भूमिमाहाँ ॥३४६॥
यस्ता रीत्ले सब सुनिसकें भिल्लको दिव्य बात ।
पौंचे ताहीं म पनि खुशि भै दुइ जोडेर हात ॥
पूजा वन्दन्हरु गरिसकी भक्ति राखेर खूप ।
नैवेद् खाई झट बनिगयो विष्णुको मैं स्वरूप ॥३४७॥
संसार्-सागर् तरि सहजमै पार जाने जनैले ।
जान् योग्यै यहि गरि भनी निश्चयै गर्छु मैले ॥
तीर्थाटन्को यदि मन भए पाल्नुहोस् ताहिं राजन् !
यस्तो सुन्दा मन नृपतिको उत्सुकै भै गयो झन् ॥३४८॥
सोध्छन् रत्नग्रिव नृप पनी नम्र पारेर माथ ।
त्यस्को तत्त्वै सब बुझुँ भनी द्विज्कनै भक्ति साथ ॥
ब्रह्मर्षे ! यो सुनिकन त हाल् नीलगिरीको विचित्र ।
साह्रै श्रद्धा बढिकन !! अहो पग्लिगो चित्त-भित्र ॥३४९॥
कैले जाऊँ विधि कउन हो दर्शनै गर्न ताहाँ ।
जान्छू निश्चे सब भनिदिनोस् त्यो क्रमै आज याहाँ ॥

राजाको यो सुनिकन सवाल् ती ऋषी खुशिसाथ ।
भन्छन् तीर्थाटन विधि तहाँ केहि संक्षेपसाथ ॥३५०॥
तीर्थैं जाने जब मन भयो तेस दिन्देखि आफ्नू ।
स्त्री-पुत्रादी धन जनमहाँ तिर्सना चट्ट छोड्नू ॥
हर्दम् चिन्ता हरिचरणको गर्नु शुद्धै भएर ।
गोब्राह्मण्को गरनु प्रणती भक्तिले खुद् नुहेर ॥३५१॥
पुण्य स्थल्मा पुगिकन जउन् गर्छ साधूहरूको ।
दर्शन् श्रद्धासित यदि भने भेगयो श्रीहरीको ॥
एक् एक् भक्तै रघुपतिजिका भेटिइन्छन् अकस्मात् ।
सिद्धाश्रम्को हरतरहले दर्शनै गर्नु तस्मात् ॥३५२॥
जुन् दिन् तीर्थैं हिंडनु छ उसै दिन्महाँ विप्रभोजन् ।
निम्ता दीई खुशि भइ अती झट् गराएर राजन् ! ॥
एक् कोश् सम्मै गइकन तहाँ वास बस्नू खुशी भै ।
तन्मन् तीर्थैं तिर दिनु सबै संझना छोड्नु जो क्वै॥३५३॥
मुण्डन् दोस्रो दिन गरि ठुलो स्नान गर्नू नदीमा ।
तीर्थार्थीका जनमभरको पाप ती केश्हरूमा ॥
बस्छन् डर्ले ति हटुन भनी चौरहेरू गरेर ।
वस्त्रै शुद्धै पहिरि हिंडनू एक् कमण्डल् लिएर ॥३५४॥
कीर्तन् गर्नू हरतरहले नाम श्रीईश्वरैको ।
चल्नू पैदल् निरमल भई छोड्नु चिन्ता घरैको ॥
घोडा डोलीहरु उपरमा भै सवारी जउन् जन् ।
तीर्थैं जान्छन् अधिक फल ता बोकने लिन्छ भन्छन् ॥३५५॥

बाटामा जो मिलछन बडा साधु सन्तै महात्मा ।
खूशी पार्नैं उनिकन सके आफुले कोहि बात्मा ॥
बुझ्नू साक्षात् हरि म उपरै खूशि भैगे भनेर ।
हिंड्छन् ईश्वर् कलियुगमहाँ साधुकै भेष् लिएर ॥३५६॥
ब्राह्मण्को यो सुनिसकि कुरा रत्नग्रीव् भूप फेरि ।
आज्ञा गर्छन् खुशिसित तहाँ मन्त्रिकै तर्फ हेरी ॥
मन्त्री ! तिम्ले सकल दुनियाँलाइ संचार् बताऊ ।
राजाका साथ् तिनिहरु सबै नील्गिरि जान आऊ ॥३५७॥
आज्ञा माफिक् सब इ दुनियाँलाइ मंत्रीजिले फेर् ।
उर्दी दीए खुशिसित तहाँ क्यै नलीएर धेर् बेर् ॥
सुन्दा ई बात् सुत युवति ली तेस देश्का तमाम ।
तीर्थैं जाऔं भनि जन चले गाउँदै राम नाम ॥३५८॥
ब्राह्मण्ले जो विधि अघि भने त्यै मुताबिक् गरेर ।
आफ्ना बन्धू पनि लिइ चले भूप खूशी भएर ॥
अन्धा लूला जति जनहरू मार्गमा भेटिइन्थे ।
रत्नग्रीव्ले उनि सबकनै धन्हरू बाँटिदिन्थे ॥३५९॥
गर्दैं हर्दम् हरिभजन सब् चल्दथे मार्गमाहाँ ।
निर्मल् ठंडा जलयुत नदी भेटिइन् चट्ट ताहाँ ॥
जस्का तीर्मा हरतरहका चक्रचिह्नित् भएका ।
शालिग्रामै मिलछन मुनीहेरुले पूजिएका ॥३६०॥
आश्रम्हेरू छन मुनिहरू गर्दछन् वेद-पाठ ।
स्नान्का निम्ती सिढि चिनि चिनी ठिकभएको छ घाट ॥

बस्छन् ताहाँ हरतरहका पक्षिहेरू अनेकन् ।
देखे सब्ले अति असल त्यो गण्डकीको तपोवन् ॥३६१॥
सोही ब्राह्मणकन नृपतिले सोध्नुभो हर्षसाथ ।
ब्रह्मर्षे ! यो कुन हुन नदी भन्नुभो धैर्यसाथ ॥
राजाको यो सुनि शकि सवाल् भन्न थाले मुनीले ।
सुन्नोस् इन्को गरदछु बयान् जो सुनेको छु मैले ॥३६२॥
नाम् कृष्णा हो फगत दरशन् गर्दिनाले यिनैको ।
मन्कै पापै डढदछ तबै स्नानले सब् शरीर्को ॥
जस्का तीर्का नृपवर ! हरेक् पत्थरै मात्र खालि ।
पूजा गर्नै जनहरु सबै बन्दछन् पुन्याशाली ॥३६३॥
यस्ती कृष्णा नदिकन पनी सृष्टिका आदिमाहाँ ।
लोक्को उद्धार् गरन मनसुब् विष्णुको भट् हुँदामा ॥
फोरी गण्डस्थल जब नदी सृष्टि गर्नूभएथ्यो ।
यै हेतूले नृप बुझनुहोस् गण्डकी नाम् चलेको ॥३६४॥
कस्तै पापी जन पनि यदी भक्ति राखेर मन्मा ।
शालिग्राम्को हरदिन पुजा गर्छ ध्यान्ले मगन्मा ॥
या ता श्रद्धा गरिकन फगत् शिर् नुहाई उनैको ।
पादोदक् जो प्रतिदिन लिया त्यो त शुद्धै बनीगो ॥३६५॥
स्त्री जातीले भुलिकन पनी पूजनै गर्न मात्र ।
शालिग्राम्को हुदइन भनी वारणा गर्छ शास्त्र ॥
तस्मात् टाढै बसकिन गरून् स्त्रीहरूले प्रणाम ।
तेत्तीकैले फल मिलिदिदा छूनु ता छैन काम ॥३६६॥

ठूला यज्ञैहरु गरिलिदा पुण्य जो पाइने हो ।
शालिग्राम्को प्रतिदिन गरे पूजनै सो मिलीगो ॥
तिन्को जस्को निशिदिन भरै हुन्छ पूजाविधान ।
राजन् ! त्यो घर् सहज बनिगो पुण्यतीर्थै समान ॥३६७॥
यस्मा कोही नृप ! छ इतिहास् गर्छु तेस्को बयान ।
एकाग्रै भै सुनि बुझनुहोस् कत्तिको हो महान ॥
कट्टक् देश्मा अघि नरपते ! दुष्टकार्यप्रवृत्त ।
व्याधा थीयो पथिकहरुको धन्विषे दत्तचित्त ॥३६८॥
जात्रूको ता निशिदिन बसी चट्ट गौडो बथानी ।
दौलत् लिन्थ्यो खतम गरदै छातिमा बाण हानी ॥
यस्तै चाल्ले बन-बन घुमी प्राणिहेरू मराई ।
हिंड्थ्यो व्याधा नरकतिको दुःखको ख्याल् नपाई ॥३६९॥
एक् दिन् काल्का वश परिगयो दूत पाएर मौका ।
तेस्का जीव्को फजियत गरे दुक्ख दीनै झरेका ॥
कोही सर्पै बनिकन बडा क्रोधले नाक डस्छन् ।
कोही बल्दो लिइकन चिराक् टाउको झोसिदिन्छन् ॥३७०॥
कोही राङो झट बनि तिखा सीङ्ले छाति फोर्छन् ।
कोही बिच्छी भइकन त हे मर्म ठाम्मा दपोट्छन् ॥
भन्छन् कोही अधम ! तइँले काम के के गरीथिस् ।
कोही भन्छन् बलजफतले साधुको प्राण् लिईथिस् ॥३७१॥
यस्तो तेस्को खपि नसकनू दुर्गती देखि धेर ।
क्वै वैष्णव्को हृदयबिचमा झट् दया उठ्न गो र ॥

शालग्राम्को झटपट शिला हातमा नै पखाली ।
त्यो व्याधाका शिर उपरमा छर्दिए जल् नि खालि ॥३७२॥
कान्मा तेस्का गइ फुकिदिए रामको नाम् पटापट् ।
तत्कालैमा यहिं पुगिगए विष्णुका दूत् खटाखट् ॥
मार् पीट् गर्दै यमदुतकनै झट् हटाई क्रमैले ।
बन्धन् काटी त्यस अधमको विष्णुदूत् सोध्न थाले ॥३७३॥
हे यम्दूत् हो ! किन तिमिहरू मन्परी गर्न थाल्यौ ।
के कारण्ले यसरि यसको हुर्मतै आज लीयौ ॥
यस्तो सुन्दा यमदुतहरू गर्दछन् फेर् उजूर ।
निस्तुक् यस्को नबुझि कसुरै तानिबक्स्यो हजूर ! ॥३७४॥
जन्मैदेखी द्विज र अदना मारि दौलथ् लुटेर ।
आफ्ना घर्मा गइ सुख गऱ्यो येसले धेर धेर ॥
दुष्कर्मैको भइ बहि खड़ा छैन सत्कर्म केही ।
ल्याओ भन्ने हुकुम यमको मिल्नगो हेतु येही ॥३७५॥
यस्तो तिन्को सुनिकन प्रमाण् विष्णुदूत् भन्दछन् फेर् ।
उत्तर् प्रत्युत्तर मुफतमा व्यर्थका के गरौं धेर् ॥
शालग्राम्को जल छ शिरमा कानमा रामनाम ।
वैष्णव् भैगो अब त बुझ यो पुग्छ वैकुण्ठधाम ॥३७६॥
यस्तो उत्तर् दिइकन तहाँ तेसलाई लिएर ।
विष्णूका दूत् सब चलिगए आफन् जित् गरेर ॥
राजन् ! तेस्तो अधम पनि लौ पौंचिगो स्वर्गमाहाँ ।
शालिग्राम्को गरुँ गुण-कथन् एक् मुखैले म याहाँ ॥३७७॥

यस्तो अद्भुत् जब सुनिसके भूपले त्यो प्रभाव ।
अस्नान् कृष्णा नदिबिच गरे खूब संझेर लाभ ॥
शालग्राम्को पनि विधि-विधान् साथ पूजा गरेर !
द्रव्यादी दान् पनि अति गरे पात्रहेरू चुनेर ॥७८॥
ताहाँदेखिन् नृप चलिए नील पर्वत्तिरै नै ।
लावा लश्कर् सहित मुखले भन्दथे सब् हरी नै ॥
गङ्गासागर् कपिलमुनिको रम्य त्यो आश्रमैमा ।
जाँदा जाँदा बहुत दिनले पौंचिहाले सुखैमा ॥७९॥
पूगी ताहाँ नृपति गरछन् प्रश्न ब्राह्मण् सँगै यो ।
कैले हामीहरु पुगदछौं फेदिमा नील् गिरीको ॥
भन्छन् ब्राह्मण् नृपसित अली आत्तिएझैं गरेर ।
पैले थीयो नृपवर ! यही सामने टापुनेर ॥८०॥
के भो ऐल्हे ! अब सब मिली स्नान याहीं गरेर ।
सीतानाथ्को भजन त गरौं देखियोस् त्यो भनेर ॥
ब्राह्मण्को यो सुनिकन वचन् चित्त बुझ्दा सबैले ।
अस्नान्-पूजन्हरु सब गरे भक्तिमा उत्सुकैले ॥८१॥
मिल्छा दर्शन् जब त गिरिको जौन दिन् हामिलाई ।
तब्तक् गर्छू म अनशन व्रत् राममा चित्त लाई ॥
यस्तो मन्मा गरिकन विचार् रत्नग्रीव् भूपतीले ।
विष्णूको झट् स्तुति मन दिई आफुले गर्न थाले ॥८२॥
इच्छाले यो त्रिभुवन रची फेरि संहार गर्नें ।
दुष्टैलाई दलन गर्नैलाइ औतार धर्नें ॥

दीनोस् दर्शन् अब त भगवन् ! पर्दछौं लौ शरणमा ।
नाहीं ता लौ सब मिलिजुली चित्त दीयौ मरणमा ॥३८३॥
प्रल्हाद्लाई अतिशय गरी बाबुले दुख् दिदामा ।
उद्धार् खातिर् नरहरि-सरूप् भो प्रकट् थाममाहाँ ॥
ग्राहाक्रान्तै गजपतिकनै आपदैदेखि टारी ।
दीइबक्स्यो गरिकन दया आफनू धाम भारी ॥३८४॥
आफ्ना भक्तै हरु जब-जबै पर्दछन् संकटैमा ।
दीई दर्शन् विपद हरने हर्षले तत्क्षणैमा ॥
क्यारूँ पर्छू शरण म पनी दास नै हूँ हजुर्को ।
चिच्च्याउ छू जसतस यहाँ क्यै नलागोस झर्को ॥३८५॥
यस्तै रीत्ले अनशन गरी पाँच दिन् जब् बितेथ्यो ।
सन्यासीको गरिकन सुभेष दर्शनै झट् दिनूभो ॥
देखी सन्यासिकन नृपले आसनै सौंपि ताहाँ ।
पाद्याघ्यादी पनि सब गरे जो मिल्यो चीज वाहाँ ॥३८६॥
राजा भन्छन् तिनिसँग उहाँ हात जोडेर खूब ।
दर्शन् पाएँ म त हजुरको धन्य हो यो स्वरूप ॥
यस्तो साधू कसरि नि यहाँ पालनूभो मकाहाँ ।
प्रश्नै केही गरदछु म लौ भन्दिनूहोस याहाँ ॥३८७॥
दर्शन् गर्नैं भनिकन सबै नील् गिरीकै खुशीले ।
आएका हौं तर दरशनै गर्न पाईनँ मैले ॥
कारण् केही अनुचित कहीं हामिबाटै भयो कि ।
आज्ञा गर्नोस् उचित अरती स्वामिजी ! सुन्नुभो कि ॥३८८॥

राजाको यो सुनि अरजि झट् विष्णुरूपी फकीर ।
दर्शन् मिल्ला तिमिकन बुझ्यौ भोलि मध्याह्नतीर ॥
धैर्यै लेऊ नगर अति ताप् येति मात्रै कहेर ।
सन्न्यासी ता झट गइगए अन्तरैधान् भएर ॥३८६॥
तेस्तो सुन्दा अलि दिलविषे मद्दतै पर्न जाँदा ।
तेस् रात्रीमा निद परन गो तैपनी क्यै नखाँदा ॥
स्वप्नामा भै चतुरभुज त्यो नील्गिरीमा गएको ।
देखी राजा खुशिसित भने ब्राह्मणैथ्यैं भएको ॥३६०॥
भन्छन् ब्राह्मण् फरकि त गए जो हिजो बात् बताई ।
सोही माफिक् शुभ शकुन भो स्वप्नमा नाथलाई ॥
यो सब् सुन्दा अब त नृपते ! दर्शनै हामिलाई ।
देलान् भन्छू गिरि उपरमा विष्णु नै खाश आई ॥३६१॥
ब्राह्मणको यो सुनिसकि तहाँ बात हर्षित् भएर ।
गंगा सागर् पुगि नृपतिले स्नान् गरे खुश् भएर ॥
अस्नान् तर्पणहरु जति थियो आफना नित्यकृत्य ।
राजाले सब् तय गरिसके जो थियो दान नित्य ॥३६२॥
रत्नग्रीव्ले खुशिसित तहाँ कीर्तनै गर्न थाले ।
फूल्को वर्षा नृप-उपर झट् गर्दिए देवताले ॥
नाना बाजा गगन-बिचमा घन्किए चौदिशामा ।
साम्ने आयो उहि गिरि तहाँ दोपहर् ठीक् हुँदामा ॥३६३॥
नील् पर्वत्को झलमल छटा कोटि सूर्यै-समान ।
देख्ता राजकन परिगयो संशयै यो महान ॥

आगै पो हो कि खुब बलदो एकठामै रहेको ।
ज्वाला यो हो बिजुलिहरुको मात्र थुप्रो बनेको ॥३९४॥
राजालाई भ्रम हुन गयो लौ भनी ब्राह्मणैले ।
भन्छन् राजन्! प्रणति गरनोस् नील् गिरी हुन् खुशीले ॥
सुन्दा हर्षित भइ नृपतिले भक्ति राखेर मन्मा ।
साष्टांगैले प्रणमन गरे पल्टिई झट् जमीन्मा ॥३९५॥
ब्राह्मण् मन्त्री सुत र महिषी एक् नोकर् लिएर ।
राजा पौंचे गिरिशिखरमा भक्तिभावै गरेर ॥
देखे देवालय सुनइको धूपदीपै गरेको ।
ब्रह्मा आई हरिचरणको पूजनै बस् गरेको ॥३९६॥
राजा खूशी भइकन अती पाँच् जना लीइ साथ ।
मन्दिर्भित्रै तब घुसिगए नम्र पारेर माथ ॥
पाद्याद्यर्घादी विधिसित गरे शास्त्रवाक्यानुरूप ।
भक्ती लाई हरिचरणमा भन्दछन् फेरि भूप ॥३९७॥
लोक्को सृष्टि स्थिति प्रलय सब् गर्न सक्ने सदैव ।
औतार् नाना धरिकन भगत् पाल्ने खास दैव ॥
हे नाथ् विष्णो! स्तुति हजुरको गर्न ता शेषनागै ।
शक्तैनन् लौ म गरुँ कसरी! कुन् छ हाम्रो र भावै ॥३९८॥
राजाको यो स्तुति सुनिसकी विष्णुले फेरि ताहाँ ।
भन्नूभो यो गरिकन दया खूब उच्चा स्वरैमा ॥
राजन्! खूशी म छु तिमि उपर् झट्ट नैवेद्य खाऊ ।
सेवक् साथै बनि चतुरभुज् धाममा जाइजाऊ ॥३९९॥

हुकुम् यस्तो सुनि हरिजिको भूपले भक्ति लाई।
नैवेद् खाई सब जन मिली चार भूजा बनाई॥
पाई आज्ञा झट हरिजिको सब् विमान्मा चढेर।
बैकुण्ठैमा सब चलिगए दिव्य रूपी बनेर॥४००॥
यो सब् देखी नृपति-पुरका जो थिए रैतिहेरू।
साहू दङ्दास् परि घर फिरे अन्न खाँदै बजारू॥
यस्तो हो यो गिरि कति भनूँ येसमाथी बसे जुन्।
राम् विष्णु हुन् जनकतनया खाश लक्ष्मी सरूप् हुन्॥४०१॥
लोकाचार्ले अब गरिसकी अश्वमेध् भूमिमाहाँ।
श्रीसीतानाथ् अनि लय हुनन् आफ्नू धाममाहाँ॥
शत्रुघ्नैको सँग यति कुरा बिन्ति गर्थें सुमन्त्र।
घोडा पौंच्यो खुब दउडदै नील् गिरीमा स्वतन्त्र॥४०२॥
शत्रुघ्नैले पनि खुशि भई स्नान दर्शन् गरेर।
आफ्नू जन्मै सुफल समझे दर्शनै भो भनेर॥
घोडा दौड्यो अति दमकले झट् सुबाहू नृपैको।
चक्रांका क्वै पुर बिचमहाँ झट्ट बेग्ले चलीगो॥४०३॥
शीकार् खेल्नै भनिकन तयार् बाबुसाहब् दमम् थे।
तेस्तो घोडा पकडन भनी राज्कुमार् झट्ट दौडे॥
कस्तो घोडा भनिकन निधार्मा थियो पत्र सुन्को।
बाँची अक्षर् अनि बहुत नै रिस् उठ्यो ती दमन्को॥४०४॥
भन्छन् पृथ्वीतल बिचमहाँ राम राजा भएछ।
उस्ले यज्ञै गरदछु भनी अश्व यो छोडदिएछ॥

घोडा रक्षक् प्रबल भनिने वीर-शत्रुघ्न आज ।
मेरा सामू लडिकन बुझयौ पाउला धेर लाज ॥४०५॥
पृथ्वीभर्मा अधिक बलवान् हेर मेरा पिताजी ।
वाहाँको डर् क्यहि नगरि लौ बढ्न लागेछ पाजी ॥
मेरा बाणको खपि नसकनू चोटले रक्तधारा ।
खाई भाग्ला झटपट बुझयौ रामको सैन्य सारा ॥४०६॥
लेखेको झन् अवधपुरका भूप श्रीरामजीले ।
अश्वैमेधको मनसुब हुँदा छोडियो जो खुशीले ॥
घोडा यै हो हिकमत भए पक्रनू है नृपैले ।
शत्रुघ्नैको कि त शरणमै पर्नु बेकुन्द्रथीले ॥४०७॥
धेरै दिन् भो कुकुर अझ स्याल् क्यै नभै दिल् बहाल ।
हिंड्थे तिन्को मनसुब म ता पूर्ण गर्दिन्छु हाल ॥
देख्लान् मेरो समर-बिचमा फूर्ति सबले बिरुद्द ।
घोडा ऐले बरु जतनले घर् पुर्याओ ! न झद्द ॥४०८॥
आज्ञा यस्तो गरि हयकनै घर्तिरै नै पठाई ।
लौ झट् पल्टन् बन सब तयार् यो हुकूमै चलाई ॥
तैय्यारै थे जब दमन वीर् तेहि औसर् लिएर ।
शत्रुघ्नैका चरहरु पुगे ताहिं नै आत्तिएर ॥४०९॥
घोडा हाम्रो लिइ कउन गो चोर जस्तो भएर ।
तागत् थ्यो ता समरबिचमा लड्नुपर्थ्यो डटेर ॥
यस्तो भन्दै हयतरफका चर्हरू खोजदैथे ।
ठूलो पल्टन् लिइ दमन ता ताहिं थे चट्ट देखे ॥४१०॥

श्रीराम्को फउजै तरफ् अति ठुला * वीर् क्यै प्रतापाग्र्य थे ।
उन्ले त्यो पलटन्महाँ दुत कुनै * भन्ने पठाईदिए ॥
सो दूत् पौं चि दमन् सँगै तब भन्यो * घोड़ा सितानाथको ।
कस्ले आज हऱ्यो यमालयमहाँ * जाने मनै गर्छ को ॥४११॥
यस्तो वाक्य सुनेर झट् दमन वीर् * बोले रिसाई तहाँ ।
हो त्यो वीर कउन् अजेय म सँगै * आक्रोस्-न लड्नै यहाँ ॥
क्षत्रीको लड्का हुँदा हय धरें * जानेर रांको भनी ।
आक्रोस् राम पनी लड़ाइँ बिचमा * लड्नेछु शूरो बनी ॥४१२॥
यस्तो बात सुनी अली अलि तहाँ * हाँसेर चर्ले पनि ।
घोडाको सब हाल् बयान् गरिदियो * यो येति भन्छन् भनी ॥
यो सुन्दा अधिकै रिसाइकन झट् * आफ्नो रथै खुप् सजी ।
लड्नैलाइ कमर् कसेर खुशि भै * दौड्या प्रतापाग्र्यजी ४१३
त्यो देखी दमनै पनी अगि सरे * दूवै तरफ्का लडे ।
हात्ती रथ् हयमा सवारि गरने * आफू समान्मै भिडे ॥
लौ काट् मार् यसको त कत्तल तँ गर् * टुक्र्याइदे लौ अब ।
फेला आज परिस् बिताइ अब द्यूँ * ती भन्दथे है सब ॥४१४॥
घोड़ा हात्ति लडे हिलो हुन गई * रथहेरु ताहीं गडे ।
कुस्ती कोहि लडे मरी विरहरू * त्यै रण्महाँ नै सडे ॥
यो देखी दमनै सँगै लडुँ भनी * मन्मै ठुलो क्रोधले ।
आफ्नो रथ् तहिं नै पुऱ्याउन पनी * लाए प्रतापाग्र्यले ॥४१५
साम्नेमा तिनिलाइ देखि खुशि भै * आया दमन् वीर् पनि ।
आऊँछौ तिमि नै यहाँ यदि भने * हटथें म काहाँ भनी ॥

भन्छन् फेरि दमन् विरैकन तहाँ * रिस्ले प्रतापाग्न्यले ।
टोकी ओठ कमाइ हात बहुतै * पूर्णै भई कोपले ॥१६॥
लड्कैया मति मै गरिस् दमन है * तैंले नि साहै नकाम् ।
घोड़ाको तहिं भाल देशबिचमा * देख्तैमहाँ रामनाम् ॥
कालो सर्पकनै चिढ्याइ अहिले * तैंले उठाइस् भने ।
तेरो वंश विनाश भो अब बुझिस् * क्यै छैन कां लागने ॥१७॥
यस्तो बात सुनेर फेर् दमनले * भन्छन् हरें लौ हय ।
अच्छा बालक् नै भए तइपनी * पान्यैंछु काम् ता तय ॥
बालक हूँ तर के भयो र यसले * खेल्छू भकुण्डो सधैं ।
तिम्रोशिर्झिकिखेलुँला म त यहाँ * क्यारूँ ! भकुण्डो नभै १८
येती बात कही चढाइ धनुमा * सौ वाण् दमन् वीरले ।
शंखै फूकिदिएर तेस् बखतमा * ढाक्यो सबै नादले ॥
छोडे क्रुद्ध भएर सौ शर जसै * ताहाँ दमन् वीरले ।
छीटो ज्यास्ति गरेर तत्क्षणमहाँ * काटे प्रतापाग्न्यले ॥१९॥
फेरी क्रुद्ध भएर झट् दमनले * भाला त शान् लायकै ।
छाती ताकि प्रहार् पनी गरिदिए * धेरै प्रतापाग्न्यकै ॥
भाला छोडिदियो मलाइ यसले * भन्ने ठुलो ईखले ।
दश् बाण् फेरि ललाट ताकि झटपट्* छोडे प्रतापाग्न्यले ॥२०॥
लाग्दामा पनि बाण् ललाट बिचमा * केही नमानी पिर ।
तीन् सौ वाण तिखा तहाँ दमनले * हाने नि दुश्मन्तिर ॥
ती बाण वेगसितै गयो हृदय ता * छेडी प्रतापाग्न्यको ।
भैगो चट्ट अधोगमन् भुवनमा * जस्तो महापाग्न्यको॥२१॥

फेरी क्रोध गरेर वर्षण गरे * बाणको प्रतापाग्न्यले ।
घोडा चार् शरले ध्वजा त दुइले * सुत्को शिरै एकले ॥
कत्तल् पारि दमन्कनै त शर चार् * लाईदिएथे जब ।
अर्को रथ् चढि हातमा धनु लिई * आए दमन् वीर् तब ॥२२॥
तिंले हाल प्रताप आफनु गर्‍यौ * लौ हेर मेरो भनी ।
चार् बाण्ले हय चार बाण अरुले * रथ् चूर्ण पारे अनि ॥
एक्ले सारथिलाइ एक शरले * छाती प्रतापाग्न्यको ।
छेड़ी शङ्ख फुकेर गर्जन ठुलो * भैगो दमन् वीरको ॥२३॥
यस्तो देखि भएर पूर्ण रिसले * फेरी प्रतापाग्न्यले ।
अर्को रथ् उपरै चढेर बहुतै * बाण् छोड्दिए क्रोधले ॥
दुश्मन्लाइ त ढाकिदें नि शरले * ऐले मईले भनी ।
खुश् भै सिंह समान गर्जन गरे * रण्मा उनीले पनि॥२४॥
नाना शस्त्र प्रहार् गरी दमनले * बाण्-जाल काटे जब ।
भन्छन् क्रुद्ध भएर हेर मइले * गर्छू प्रतिज्ञा अब ॥
तिंलाई त गिराउनै सकिनँ लौ * यस् बाण्ले ता भने ।
वेद्निन्दा गरदा जउन् छ बुझ पाप् * भैगो म त्यो पाप् लिने॥२५
येती बात भनी प्रहार् गरिदिए * एक् वाण दमन् वीरले ।
तेस्लाई म गिराउँ छू भनि जतन् * गर्थे प्रतापाग्न्यले ॥
तेस्तो थ्यो तपनी तृणै सरि गनी * ती वाण् बिचै काटदै ।
फोर्‍यो बाण गई दमन् विरजिको * छाती प्रतापाग्न्यकै ॥२६॥
बाण्को चोट परी जमीन् बिचमहाँ * लत्रे प्रतापाग्न्य जब् ।
झट्टै मागथिले उठाइकन ता * दूरै पुर्‍यायो नि सब् ॥

हाहाकार मच्यो ठूलो स्वर गरी * शत्रुघ्नका तर्फ ता।
आऊलान् कहि वीर् भनी दमन वीर् * रणमा खडा थे उता२७
कस्ले आज हयै लगी पलटनै * मारीदियो यो सब।
झट्टै आज भनोस् भनी हुकुम यो * शत्रुघ्नको भो तब॥
सेनाबाट कसूरि हो दमन वीर् * भन्ने जसै सुन्नुभो।
रिस्ले चूर्ण भई रणस्थमहाँ * शत्रुघ्नजी पाल्नुभो॥२८॥
आफ्ना सब् हय हात्ति रथ्हरु मरी * ठूलो रगत्को कुलो।
देख्ता सोध्नुभयो स्वसैन्य बिचमा * गर्ने विचार् भै भलो॥
हे वीरों ! तिमिहेरुमा दमनका * सङ्मा बलैले गरी।
लड्नेछौ कि नहीं भने म त गएँ * एक्लै अगाडी सरी॥२९॥
श्री शत्रुघ्नजिको सुनी यति सवाल् * झट् पुष्कलैजी गई।
साम्ने बिन्ति गरे हरे !! दमनको * संहार कर्ता भई॥
छोरो आज खड़ा छँदै किन अहो!! * यस् पाजिको साथमा।
लड्नै निम्ति हजूरले किन दिनू * तक्लिफ् उसै गाथमा ३०
श्रीराम्को चरणारविन्द तिरको * ध्यान्मा विमुख् जो त छन्।
दोस्रो तीर्थ बुझी विरोध जसले * आमा सँगै गर्दछन्॥
तेस्तो पातकिको हुन्या जउन हो * सो गत् म भैगो लिने।
ऐले सो रणमा दमन् विरकनै * जीतीनँ मैले भने॥३१॥
सुन्दा पुष्कलको तहाँ सब कुरा * शत्रुघ्नजीले अनि।
आज्ञा दीनु हुँदा खुशी भइ गए * रणमा ति पुष्कल् पनि॥
आएका उनलाइ देखि रणमा * आए दमन् वीर् जब।
साम्ने भै उनका बडो स्वर गरी * पुष्कल्जि भन्छन् तब ३२

पुत्रै हूँ म भरतजिको रणमहाँ * आएँ प्रतिज्ञा गरी ।
श्रीरामचन्द्रजिको म हूँ चरणको * दास् त्यै प्रभाव्ले गरी ॥
जित्नेछू तिमिलाइ हेर अहिले * बाण्को प्रहारै गरी ।
मेरो नाम छ पुष्कलै सब गुनी * आऊ अगाडी सरी ॥३३॥
यो सुन्दा म पनी सुबाहु नृपको * छोरो दमन् नामको ।
मै हूँ मारिदिन्या रणस्थलमहाँ * सेना बहुत् रामको ॥
देख्नेछन् सबले रणस्थलविषे * जितबाजिमा जो हुनु ।
होला है बकवाद के गरूँ भनी * हात्मा लिए झट् धनु ३४
कान् सम्मन् धनु खैंचि फेर् दमनले* बाण्को प्रहारै गरे ।
आकाश् मण्डललाइ तत्क्षणमहाँ * ती बाण्हरूले भरे ॥
देख्ता त्यो अतिकष्ट झैंकन तहाँ * वीर् पुष्कलैले पनि ।
जल् आचमन् गरि वाण् प्रहार् गरिदिए*संहार गर्छू भनी ॥३५॥
तेस् द्वारा तहिं अग्नि झट् उठिगयो*दुश्मन् तिरैको डढे ।
छाताहेरु जले तहाँ कसइका * हात्ती कसैका मरे ॥
रथ् घोडा त सबै भुसुक्क भइगै * क्वैका उँटै पो मरे ।
खाकै पारिदियो सबै पलटनै * हाहा दमन् वीर् गरे ॥३६॥
तेस्को शान्ति गरूँ भनी दमनले * फेर् वारुणास्त्रै लिए ।
छोडी तेस्कन सब् जलैजल गरी * सन्ताप् सबैको हरे ॥
तेस्द्वारा गगनैमहाँ वरिपरी * बादल् बहूतै भई ।
जल् वर्षा हुन गो र तेस्कन पनी * ऐले हटाऊँ भनी ॥३७॥
वायव्यास्त्र उठाइ पुष्कलजिले * छोडी दिएथे जब ।
हावा बढ्न गयो र मेघकन ता * छिन्याइदीयो तब ॥

घोडा हात्ति र रथ् यताउति भए * ऊडाउँदा जोरले ।
सेनाहेरु त ज्रुलिफ फर्किरहँदा * उड्थे ठुलो शब्दले ॥३८॥
त्यो ह्रीकन रोक्नलाइ रिसले * फेरी दमन् वीरले ।
संग्राम्मा तब पर्वतास्त्र झटपट् * छोडीदिए क्रोधले ॥
फेरी पर्वतको तहाँ हुन गई * बर्षाद पल्टन् भरि ।
सेना नाश हुँदा उठ्यो रिस पनी * पुष्कल्जिको तेस् घरि ३९
फेरी वज्र लिएर मन्त्रए गरी * छोडीदिएथे जब ।
पर्वतहेरुकनै पिसेर तिल झैं * चूर्णै गराई तब ॥
बज्र्यो छातिमहाँ जसै दमनको * त्यो बज्र खुब् बेगले ।
मूर्छा पर्न गयो र तेस् बखतमा * हाहागर्‍यो सैन्यले ॥४०॥
शिक्षा रामजिको विचार गरि झट् * पुष्कल्जिले तेस् बखत् ।
रोके शस्त्र भयो जयै भनि तहाँ * हर्षित् भए है फगत् ॥
श्रीशत्रुघ्नजिले दमन्कन यहाँ * जीते अहीले भनी ।
तारिफ् पुष्कलको तहाँ गरनुभो * गर्थे अरूले पनि ॥४१॥
दौडी दूतहरू तहाँ पुगिगए * जाहाँ सुबाहु थिए ।
संग्राम्को सब हाल जो जति थियो * सब् वर्णनै गर्दिए ॥
छोराको सब त्यो सुनेर हबिगत् * रिस्ले र शोकले अति ।
चूर्णै भैकन भन्दछन् झिकि तहाँ * क्रोध्ले भएभर् जति ॥४२॥
हे सेनापति ! सैन्य सब् गर तयार् * ऐले भएको जति ।
आफै गैकन लड्दछू छ नि जहाँ * शत्रुघ्न त्यो दुर्मति ॥
बालक्लाइ सबै जना मिलिज्रुली * ऐले गिराईदिए ।
यिन्ले आज मबाट नाश हुनमा * आफै विचार् पो लिए ४३

यो सेनापतिले सुनेर खुशि भै * सेना र सर्जाम् पनि ।
सब् ठीक् पारि गरे तहाँ विनति जब् * ठिक् पारिहालें भनी ॥
त्यो सुन्दा नृपती सुबाहु रिसले * चूरै अधीकै भई ।
सब् सेना पछि लाइ झट् चलिगए * ठूलो अवाजै दिई ॥४४॥
घोडा हात्ति र रथ्हरू अति गए * पल्टन् अगिन्ती गयो ।
तेस्को भार हुँदा अती उस बखत् * भूकम्प चट्टै गयो ॥
भाई थे उनका सुकेतु कहिन्या * नामी गदा युद्धमा ।
रथ्माथी चढि ती पनी चलिगए * ताहाँ ठुलो सैन्यमा ॥४५॥
चित्राङ्गै र विचित्र थे नृपतिका * छोरा दुवै ती पनि ।
रथ्मा नै चढि दुःखितै भइ चले * दाजू बिहोश् छन् भनी ॥
यस्तै वीरहरू अरू पनि गए * शस्त्रास्त्रमाहाँ पुरा ।
शत्रुघ्नैकन जित्तछौं भनि तहाँ * सारा लड़ाकी शुरा॥४६॥
पौंचे सैन्य लिएर झट् समरमा * राजा सुबाहू पनि ।
मूर्छित पुत्र जहाँ थिए उहिं पुगे * कस्तो छ हालत् भनी ॥
ए बाबू! भनि हातले नृपति खुश * भै खुब् मुसारीकन ।
शीतल् जल् छिटि सुर् पनी जब गरे * पङ्खाहरू हाँकन ॥४७॥
तेस्का बाद त चट्ट होश् खुलन गै * ताहाँ दमन् वीर ता ।
लागे भन्न उठेर ख्वै! धनु अरे! * पुष्कल् दग्यो है कता ॥
देखे सामुमहाँ पिताकन जसै * पस्त्रे र पाऊमहाँ ।
झट् नम्रै भइ दण्डवत् गरिलिए * संग्रामको बीच्महाँ॥४८॥
छोरालाइ चढाइ त्यो रथमहाँ * फेरी सुबाहू नृप ।
भन्छन् व्यूह बनाउ क्रौञ्च कहिने * सेनापते! वश् खुप ॥

त्यस्तो मर्जि सुनी अती खुशि भई * सेनापतीले पनि ।
व्यूहै झटपट त्यो तयार् गरिदिए * वीर्हेरु जाँचीबिनी ॥४९॥
पैले मुख्तिर थे सुकेतु विर एक् * चित्रांग घाँटीमहाँ ।
राजाका सुत दुइ भाइ रहिगे * ठीक् ती पखेटामहाँ ॥
पुच्छमा नृपती सुबाहु रहिगे * बीच्मा अरू दुर्जय ।
शूरा वीर्हरु राखि झट् भइगयो * सो क्रौञ्च व्यूहै तय॥५०॥
श्रीशत्रुघ्नजिले तहाँ सुमतिथ्यैं * सोध्नूभयो यो तहाँ ।
कस्को हो भन यो अगण्य अहिले * देख्छू म सैन्ये यहाँ ॥
को हुन् ई सब वीरहेरु अहिले * रक्षा दमन्को गरी ।
लड्नैलाइ रचेर व्यूह खुशि भै * तैयार छन् यो घरि ॥५१॥
यस्तो प्रश्न सुनेर झट् सुमतिले * बिन्ती चढाए तहाँ ।
चक्राङ्का कहिने कुनै नरपते ! * परी असल् छन् यहाँ ॥
तिन्मा भूप सुबाहु छन् अति शुरा * धर्मिष्ठ ज्ञानी पुरा ।
आए ती उनिसाथ लडन अहिले * को वीर् छ यै होस् कुरा ५२
श्रीशत्रुघ्नजिले सुनेर यति बात् * फर्केर सेनातिर ।
सक्ने तोडन व्यूहलाइ छ कउन् * हाम्रा तरफ्मा विर ॥
यस्तो हुकुम पाइ भेद गरछू * त्यो क्रौंच व्यूहै भनी ।
झट् लक्ष्मीनिधिजी खुशी भइलिए* पान्को बिडा एक् पनि ५३
उन्को रक्षक भै चले खुशि भई * पुष्कल् र उग्राश्व फेर् ।
वीर् मर्दन् अनि नीलरत्न-रिपुताप्* यस्तै थिए वीर धेर् ॥
बाजा बज्न गए दुवै तरफका * घोडा र हात्तीहरू ।
जोर्ले कोहि कराउँथे क्वहि तहाँ * रुन्थे पनी घुर्घुरु ॥५४॥

ती लक्ष्मीनिधिले सुकेतु सँग गै * भन्छन् खुशी भै अति ।
घोडा व्यर्थ हन्यौ सितेश प्रभुको * लाग्यो र के दुर्मति ॥
नां लक्ष्मीनिधि हो कुमार म त हूँ * संझे जनक्राजको ।
तिम्रो नै बलिदान् दिनेछु मइले * संग्राममा आजको ॥५५॥
यस्तो बात सुनी सुकेतु विरले * वर्षा गरे वाणको ।
श्रीलक्ष्मीनिधिले हटाइ सब बाण् * सात् बाण छोड़े छिटो ॥
ती बाण् बज्रन गै सुकेतु विरको * छातीविषे वेगले ।
घूस्यो भूतलमा विवर्ण हुन गै * भिज्दा उहाँ रक्तले॥५६॥
फेरी क्रुद्ध भई सुकेतु विरले * बाणको प्रहारै गरे ।
धारा बग्न गई दुवै रगतको * फुल्दा पलाश् झैं थिए ॥
छोड्छन् वाण् यिनिले धनू उपरमा * जोड्छन् यसोरी भनी ।
हेर्नेले त तहाँ छिटा अति हुँदा * देख्दैनथे कै पनि ॥५७॥
झट् लक्ष्मीनिधिले चढाइ धनुमा * आठ् बाण तेही घरि ।
घोडा चार् शरले ध्वजा र सयसै * दूई शरैले हरी ॥
एक् बाण्ले धनु काटि ऐक् हृदयमा* ताकी लगाईदिए ।
त्यो देखी सब देवता दङ परी * तारीफ बहूतै गरे ॥५८॥
यस्ता रीतसित जब् भए विरथि नै * रिस्ले सुकेतू पनि ।
हात्मा एक गदा लिई अघि बढे * तैंलाइ मारूँ भनी ॥
त्यो देखीकन हातमा लिइ गदा * ओर्लें र रथ्देखि ता ।
श्रीलक्ष्मीनिधिले पनी रिस गरी * तैयार भैगे यता ॥५९॥
श्रीलक्ष्मीनिधिले सुकेतु विरको * छातीमहाँ क्रोधले ।
हाने सोहि गदा उठाइ बहुतै * उफ्री बडा जोरले ॥

यस्तो चोट पनी सहेर खुशि भै * भन्छन् सुकेतू तहाँ ।
ऐल्हे लौ तिमि एक चोट बलले * मेरो सहू रण्महाँ ॥६०॥
येस्तो बात कही सुकेतु विरले * लक्ष्मीनिधीको जब ।
हाने ताकि निधारमा त रिसले * खुन् बग्न गो धेर् तब ॥
फेर् लक्ष्मीनिधिले सुकेतु विरका * हाने जसै शीर्महाँ ।
क्रोध्ले काँधमहाँ सुकेतु विरले * हाने तुरुन्तै तहाँ ॥६१॥
यस्तै रीत्सित धेरबेरतक ता * तिन्को गदा-युद्ध भो ।
फेर् लक्ष्मीनिधि हातमा लिइ गदा * साम्ने जसै कुद्नुभो ॥
त्यो देखी रिसले सुकेतु विरले * पक्रेर उन्कै गदा ।
हान्दा लक्ष्मिनिधी उरस्थलमहाँ * गिर्थे रगत्का बुदा ॥६२॥
वीर् लक्ष्मीनिधिको गदा लगिदियो * यस्ले भनी झट् तहाँ ।
कुस्ती खेल्न तयार् भएर उ पनी * आए जसै रण्महाँ ॥
तब् लक्ष्मीनिधिले सुकेतु विरका * छातीविषे एक् मुठी ।
दीए फेर् उनले पनी शिरमहाँ * हाने मुठी खुप् कसी॥६३॥
यस्तै चाल गरेर द्वन्द्व दुइको * हुँदै थियो क्रोधले ।
वीर् लक्ष्मीनिधिको समाति चरणै * उन्ले घुमाईदिए ॥
फेर् लक्ष्मीनिधिले सुकेतु विरको * पक्रेर हाने जब ।
जोर्ले चट्ट घुमाइ फ्याँ किदिनुभो * मूर्छा परे ती तब ॥६४॥
दाँतैदाँत नखानखै गरि प्रहार् * कैल्हे त हाल्ले गरी ।
पालैसीत भएर मूर्छित पनी * लड्दामहाँ तेस् घरि ॥
हार्जित्को क्यहि निश्चयै नभइ रण् * हुँदो भयो फेर् तब ।
क्याबात् वीर दुवै रहेछन भनी * आश्चर्य भैगे सब ॥६५॥

चित्राङ्ग सँग गै भिडे रिस गरी * अर्का तरफ् पुश्कल ।
तिन्को घोर हुँदा तहाँ रण ठुलो * फैलीगयो खल्बल ॥
स्वामी कार्तिक तारकासुर सरी * थीए दुवै वीर नै ।
लड्थे कामु कलाइ गालि गरि खुब् * जित्नैमहाँ दी मनै ॥६६॥
चित्राङ्ग कन रिस् गरेर बहुतै * पुष्कल्जिले वाण् सय ।
हान्दा क्रुद्ध भएर फेरि उनले * काटेर पारे तय ॥
पुष्कल्ले अनि भ्रामकास्त्र रिसले * छोडी दिएथे जब ।
वीर् चित्रांग रथै समेत उडिगे * आकाशमाहाँ तब ॥६७॥
चक्कर् खाइसकेपछी गगनमा * घोड़ा समेतै तहाँ ।
वीर् चित्रांगजिको त रथ् गिरिगयो * तेही समर्-भमिमा ॥
रिस्ले चूर भएर पुष्कलसितै * चित्रांग वीर्ले अनि ।
भन्छन् हेर पराक्रमै अब यहाँ * मेरो तिमीले पनि ॥६८॥
येती बात कहेर मन्त्रण गरी * एक् बाण छोडे जब ।
फेरी पुष्कलको उड्यो रथ अती * आकाशमाहाँ तब ॥
चक्कर् खूब लिई जबै जमिनमा * रथ् बस्न तय्यार् थियो ।
अर्को वाण त बीच्महाँ पुगन गो * फेर् चट्ट चक्कर् लियो॥६९॥
छोराको रण-कौशलैकन बयान् * गर्थे सुबाहु तहाँ ।
पुष्कल्को रथ खुब् घुमेर अनि ता * आयो रणस्थल्महाँ ॥
पुष्कल् क्रुद्ध भएर तेस् बखतमा * हाने जसै वाणहरू ।
घोडा सारथि रथ् खरानि बनिगे * धेरै बयान् के गरूँ !॥७०॥
फेर् चित्रांग रिसाइ लड्दछु भनी * अर्को रथैमा जब ।
आए पुष्कलले विरथ् गरिदिए * दशपल्ट रणमा तब ॥

एघारौं रथमा चढेर रिसले * चित्रांग वीर्ले तहाँ ।
हाने शर् तब पाँच पुष्कलकनै * ताकेर छातीमहाँ ॥७१॥
बाण्को चोट खपेर पुष्कलजिले * दश् बाण हाने जब ।
तिन्को चोट सहेर पुष्कलकनै * चित्रांग वीर्ले तब ॥
भाला पाँच चुनी ललाटबिचमा * लीए जसै जोर् गरी ।
साहै क्रुद्ध भएर पुष्कलजिले * भन्छन् अगाडी सरी ७२
हे चित्रांग ! म आज एहि शरले * तिम्रो गला काटन ।
कोही कारणले सकीनँ त भने * यो बात तिम्ले सुन ॥
अर्काकी त पतिव्रता-वधुकनै * जो गर्छ है दूषित ।
त्यस्को पातक जौन हो उहि म ता * भोग्नेछु खुशीसित ॥७३॥
यस्तो बात सुनेर हाँसिकन ता * चित्रांगजीले पनि ।
भन्छन् लौ सुन है तिमी पनि यहाँ * मेरो प्रतिज्ञा भनी ॥
त्यो बाण् काट्न सकीनँ पो यदि भन्या * तीर्थार्थि रोक्ने जन ।
फेर् एकादशि छोडने जुन नरक् * जानेछ त्यो भोगन॥७४॥
यस्तो बात सुनेर पुष्कलजिले * एक् वाण हात्मा धरी ।
भन्नूभो सबले सुनून् भनिकनै * ऊँचा स्वरैले गरी ॥
भक्ती श्रीरघुनाथका चरणको * मैले गरेको छ जो ।
फेर् पत्नी-व्रतको प्रभाव छ भने * साँचो हओस् बात यो ७५
यस्तो बात कहेर पुष्कलजिले * कालानलैले सरी ।
त्यो बाण् चट् धनुमा मिलाइ बलले * जोड्नूभयो त्यै घरि ॥
देखेथे जब आउँदो शर तिखो * चित्रांग वीर्ले तहाँ ।
बाण् हानी झट दो टुकै गरिदिए * ताहाँ रणस्थल्महाँ॥७६॥

त्यो टुक्रा गडि गो पछाडितिरको * धर्तीविषे त्यै घरि ।
अर्को भाग उडेर शिर् लगिदिए * चित्रांग वीर्को हरी ॥
हाहाकार मच्यो रणस्थलमहाँ * ती वीर् गिरेथे जब ।
खुश् भै व्यूह अगाडि नै बढिगए * पुष्कल्जि रण्मा तब ॥
त्या चित्रांगजिको हुँदा हबिगती * दुःखित् हुँदामा मति ।
छोराको गुण संझि संझि नृपले * शोक् गर्न थाले अति ॥
टाऊको सुतको लिएर करमा * हे बाबु ! रण्मा किन ।
निद्राले तिमि मस्त छौ कि ! किन हो* देख्छू म पौरुष् हिन ॥७८॥
क्रोधले पूर्ण मलाइ देखि तिमि ता * आई अगाड़ी सरी ।
गर्थ्यौ बात् हँसिला लिएर मुख यो * खुश् पार्दथ्यौ बेसरी ॥
उस्तो हो अहिले मलाइ रणमा * देखेर शोकाकुल ।
बोल्दैनौ किन हो म देख्छु मुहुडा * निस्तेज यो बिल्कुल ७९
ए ! बाबू उठ हात्ति पैदलहरू * तिम्रा नगीचैमहाँ ।
आई सब् शरणै परे यदि भने * रक्षा गरीद्यौ यहाँ ॥
शूरा वीर समर्थ क्षत्रिय तिमी * लिन्छौ उदासीन ता ।
भ्रष्टै भो बुझ वीरधर्म अहिले * मिल्दैन येता उता ॥८०॥
संग्राम्मा तिमिले विहीन मइले * बाण् आज शत्रुघ्नको ।
शक्थें के अब खप्न यो रणमहाँ * बल् गर्छु है रूनको ॥
यस्ता रितिसित धेर् विलाप गरदै * छाती पिटी जोरले ।
बौलाहा सरि भै सुबाहु नृपती * रुन्थ्ये बडा शोकले॥८१॥
तिन्का पुत्र विचित्र फेरि दमनै * दूवै अगाडी सरी ।
भन्छन् शोक् लिनुभो बुवा किन हरे * ऐले अजानै सरि ॥

दाजूको हुन गो असल् गति अहो * क्याबात यो भाग्यले ।
उन्को फिक्रि लिएर नाहकमहाँ * के गर्नु लौ हामिले॥८२॥
के काम् गर्नु पर्‍यो दिनोस् हुकुम लौ* तैयार गर्छौं सब ।
पुष्कल्लाइ गिराउँछौं रणमहाँ * हेर्नोस् हजूर्ले अब ॥
हाम्रो जिन्दगि लौ खडा छँदइमा * बूबा हजूर्ले यहाँ ।
चिन्ता रण्तिरको लिई मनविषे * शोक् गर्नु पर्ला कहाँ॥८३॥
यस्तो बात् सुतहेरुको सुनि तहाँ * खुश् भै सुबाहू नृप ।
संग्राम्मा गइ वैरिदल्हरुकनै * नाश् गर्न थाले खुप ॥
भीडे चट्ट गई दमन् त रिपुताप्-* का साथमा क्रोधले ।
तड्थे फेरि विचित्र वीर् पनि तहाँ * नील्रत्नका साथले ॥८४॥
राजा क्रुद्ध भएर तेस् बखतमा * शत्रुघ्नका साथमै ।
लड्छू लौ भनि रथ् बढाइ पुगिगे * शत्रुघ्नका सामुमै ॥
त्यो देखीकन लड्नमा मन गरी * आफै हनूमान वीर् ।
दौडे चट्ट सुबाहुका सँगमहाँ * नड्कै बनाएर तीर् ॥८५
देखी श्रीहनुमानलाइ रिसले * फेरी सुबाहू नृप ।
सोध्छन् दाँतहरु टोकदै दुइ नयन् * लाल्लाल पारी खुप ॥
भाग्यो पुश्कल लौ कहाँ भन कपे! * शत्रुघ्न लूक्यो कहाँ ।
को हो राम दब्यो कहाँ समरका * जान्छू म रोक्ने उहाँ॥८६॥
यस्तो बात सुबाहुको सुनिसकी * बोले हनूमान् पनि ।
सट्टामा उनको लडाकि हनुमान् * साम्ने तयार् छू भनी ॥
सक्छौ ता जिति झट् मलाइ नृपते * ऐले अगाडी बढ ।
उन्कै सेवकका मिलेर लपटा * या ता जमीन्मा लड ॥८७

यस्तो बात सुनी रिसाइ नृपले * दश् वाण हाने जब ।
हातैले हनुमानले गरिदिए * झूरा झुरा नै तब ॥
पुच्छलें हनुमानले नृपतिको * रथ्लाइ बेहीकन ।
आकाश्मण्डलमा लिएर खुब रिस् * थालेनि फैलाउन॥८८॥
त्यो देखी नृपले तिखा शर बिनी * पुच्छर्महाँ त्यै घरि ।
हाने श्रीहनुमानका अति छिटो * शर्हेरु ता सर्सरी ॥
धेरै चोट पर्‍यो र त्यो रथ पनी * छोड्दा हनूमानले ।
दाह्राले नृपको रथै गरि धुलो * कूदे बडा कोपले ॥८९॥
त्या देखी रथमा चढेर अरकै * फेरी सुबाहु नृप ।
क्रोध्ले श्रीहनुमानलाइ बहुतै * बाण् छोडिदीए खुप ॥
पुच्छर् छाति चरण्महाँ जब गडे * तीखा तिखा शर्हरू ।
क्रोध्ले पूर्ण तहाँ भए नि हनुमान् * धेरै बयान् के गरूँ ॥९०॥
तेसै औसरमा सुबाहुकन ता * एक् लात हाने जब ।
मूर्छा पर्न गई सुबाहु नृपले * छादे रगत् खुब् तब ॥
ठूलो कोप लिएर व्यूहहरु सब् * तोडेर बल्ले गरी ।
वैरीको बल हर्नलाइ हनुमान् * घूसे तहाँ सर्सरी ॥९१॥
मूर्छैमा सपना हुँदा नृपतिले * देखे सिताका पति ।
सर्जूका तिरमा जुटाइ सरजाम् * ब्राह्मण् कती हुन् कति ॥
आफ्नो मूर्ति लिएर वेदहरुले * हर्दम् गरीने स्तुति ।
यज्ञैमा बसने पवित्र भइ खुब् * छोडेर द्वेषको मति ॥९२॥
मूर्छा खुल्न गयो र चट्ट नृपले * भाई र छोराकन ।
हुकूम् झट् दिनुभो खुशी भइ तहाँ * संग्राम नै थामन ॥

भन्छन् चूक गर्‍यौं गर्‍यौं किन अहो * श्रीरामको यो हय ।
जस्को क्रोध बढेपछी जगतमा * हौ जान्छ च्तणमा लय६३
तीर्थाटन् गरछू भनेर म हिँडें * पैले जगत् भर्महाँ ।
सोद्धै सब् मुनिलाइ ईश्वर कउन् * कस्तो छ जाहाँ तहाँ ॥
तेस्मा क्वै असिताङ्ग नाम मुनिले * वर्णन् ठुलो नै गरी ।
श्रीराम् ईश्वर हुन् सिता भगवती * ठूला यिनै लोक् भरि॥६४॥
यो सुन्दा मइले भनें इ त मुने * सांसारिकै जीव हुन् ।
सुख् दुख्को यिनलाइभेद छ सधैं * क्यै छैन यिन्मा त गुन् ॥
सीताराम्कन छोडि कोहि अरु नै * द्यौता बताईदिनोस् ।
जस्मा सृष्टि स्थिती र पर्लय समेत् * गर्ने समर्थै त होस् ॥६५॥
यो मेरो प्रतिउत्तरै सुनि तहाँ * साहै रिसाई मुनि ।
भन्नूभो नबुझेर तत्त्व तइँले * बक्‌वाद गर्छस् खुनी ॥
निन्दा श्रीरघुनाको त तइँले * मेरा अगाडी गरिस् ।
त्यस्ले ज्ञानविहीन मूर्ख जनमै- * भर्लाइ हुने भइस् ॥६६॥
यस्तो शाप सुनेर पाउबिचमा * पर्दे र माफ् मागदा ।
मेरो आज बिलाप यो सुनिसकी * मैमाथि दिठ् लागदा ॥
भन्नूभो मुनिले पछी रघुपति * ज्यू को त घोडा जब ।
पक्रौला तिमिले तहाँ अति ठुलो * होला लडाईं तब ॥६७॥
रिस्ले झट् हनुमानले तिमिकनै * एक् लात्ति दीए भने ।
तेही दिन् तिमिले बुझै नरपते * अज्ञानले छोडने ॥
सो बात् माफिक आज सब् हुन गयो* घोडा लिआओ अब ।
पर्नूपर्छ खुशी भएर शरणै * शत्रुघ्नजीको सब॥६८॥

यस्तो बात सुनी सुबाहु नृपको * साँचै कुरा हो भनी ।
छोरा भाइहरू गई समरमा * ल्याएर घोडा पनि ॥
नाना वस्त्र मणीश्रसल् जति थिए * दौलत् सँगैमा लिई ।
श्रीशत्रुघ्नजिको नगीच पुगिगै * राजा विनीतै भई ॥६६॥
पाऊमा परि हात जोडि नृपले * भन्छन् बिरायौं प्रभो !
पक्र्यो अश्व विकाममा दमनले * माफ् पाउँ जो गल्ति भो ॥
आप्को बल् अधिकै हुँदा भ्रम भई * सोही मतैमा गए ।
लात् खाँदा हनुमानको त अहिले * राम्लाइ जान्दोभएँ ५००
धन्यै हुन् हनूमान जो जनमभर् * श्रीराम-सेवा गरी ।
बस्छन् पुत्र कलत्र संग्रह सबै * छोडेर जो हर्घरि ॥
जस्को लात् मिलदा रणस्थलमहाँ * अज्ञान सारा गई ।
राम्लाइ मईंले चिनें यस बखत् * चित्तै विशुद्धै भई ॥१॥
पाऊको जसको धुलोतक परी * पत्थर् बन्यो मानिस ।
उस्ता श्रीरघुनाथको त मइले * सुन्दो भएँ नालिश ॥
अज्ञान्ले असलै गरेछ भनि सब् * माफ् आज पाए हुँदि ।
दर्शन् गर्न भनेर यज्ञ-बिचमा * जानेछु ऐले कुदी ॥२॥
यस्तो बात सुनी सुबाहु नृपको * शत्रुघ्नजीले पनि ।
भन्नूभो नृपते ! ठिकै गरनुभो * बेठीक् त क्यै छैन नि ॥
क्षत्री हूँ म भनेर अश्व पकडी * लड्नूभयो रिस् गरी ।
संग्राम्मा पनि पौरुषै गरनुभो * वैरीसँगै बेसरी ॥३॥
जो भो सब ठिक बुझ्नुहोस् अब बरू * आफ्ना कुमारैकन ।
राज्यै सौंपिदिएर अश्वतिर नै * चल्नोस मद्दत् दिन ॥

यो शत्रुघ्नजिको सुनीकन वचन् * तेही मुताबिक् गरी ।
रामूका नाउँ महाँ गरेर अरपण् * साथमा चले तेस् घरी ॥४॥
घोडा फेरि कुद्यो गरेर अति बेग् * देश् देशमाहाँ पुग्यो ।
शत्रुघ्नेकन ती सबै सहरमा * सत्कार मिल्दै गयो ॥
तेज्पुर्मा हय पुग्नगो र जसमा * धर्मिष्ठ राजा अति ।
सत्यैवान् जसको त नाम परथ्यो * काम् क्यै नभै दुर्मति॥५॥

देखेर त्यो पुरमहाँ रमणीय खाशा ।
मन्दीरहेरु बिचमा गजबै तमासा ॥
गंगाजिका तटमहाँ बसि विप्र घेर ।
गर्थे स्वकर्महरु तन्मन नै दिएर ॥६॥
शत्रुघ्नले सुमतिका मुखतर्फ फेरि ।
हेरेर सोधनुभयो नगरेर देरी ॥
बतलाउ लौ असल यो कुन यो सहर् हो ।
राज्यै गरेर बसने यसमा कउन् हो ॥७॥
हूकूम यो सुमतिले सुनि हर्षसाथ ।
गर्छन् बयान सब नम्र गरेर माथ ॥
हे नाथ ! तेजपुर भन्छन येसको नाम् ।
छन् सत्यवान् नृपति गर्छन आफ्नु दाम्काम् ॥८॥
सेवा गरेर गउको यिनका पिताले ।
यिन्लाइ कोशिश गरी जनमाउनाले ॥
यी विष्णुभक्तहरुमा गनिए प्रधान ।
यिन्कै छ यो नगरमा अहिले कमान ॥९॥

शत्रुघ्नले यति सुनीकन फेर् सवाल ।
गर्नूभयो सुमतिको सँग भै बहाल ॥
ई सत्यवान नृपको हुन बाबु कौन ।
खूशी भइन् कसरि ! गाइ बताइद्यौ-न ! ॥१०॥
शत्रुघ्नको यति सुनीकन प्रश्नबात ।
बिन्ती गरे सुमतिले पनि जोडि हात ॥
हे नाथ ! तेजपुरमा पहिले महान ।
राजा ऋतम्भर थिए गरछू बयान ॥११॥
रानीहरू ति नृपका सब रूप रम्य ।
थीए सुयोग्य कुलका घरमा अगण्य ॥
सन्तान तैपनि त कत्ति नभैदिनाले ।
राजा तहाँ दिनहुँ दुःखित बन्न थाले ॥१२॥
दर्बारमा ति नृपका कहि दिन् महर्षि ।
जावालि आउनुभयो करुणाम्बुवर्षी ॥
पर्नेर पाउबिचमा मुनिका ति भूप ।
वर्णन् गरे सकल दैन्य लिएर खूप ॥१३॥
क्यारूँ ! मुने सकल राज्य भयो विकाम ।
पर्लोकमा मकन मिल्दछ कौन ठाम ॥
सन्तान छैन घरमा हकदार एले ।
यो राज्य छोड्दछु विरक्त भएर मैले ॥१४॥
जस्का सधैं घरमहाँ खुशिसाथ साना ।
बच्चाहरू दिनहुँ भङ्गि गरेर नाना ॥

तोते वचन् सरस आइ सुनाउँ दैनन् ।
तेस्तो गृहस्थकन पितृ रुचाउँ दैनन् ॥१५ ॥
अन्यत्रबाट घरमा फिरदा सदैव ।
जस्का अतीव अनुकूल बनेर दैव ॥
बाबा भनी सुत धुलैसित चढ्छ काख ।
हो धन्यवाद भवमा उनलाइ लाख ॥१६॥
दर्बारमा अतुल संपति रानिहेरू ।
छोडी चटक्क म त बन्दछु है भिखेरू ॥
दीबक्सियोस् अब मलाइ त एहि राय ।
सन्तानको नहि भने कहनोस् उपाय ॥१७॥
जावालिले कहनुभो नृपते ! अनेकन् ।
छन् है उपाय म बताउँछु श्रेष्ठ नै भन् ॥
गौको पऱ्यो गरनु पूजन रानि-साथ ।
तन्मन् दिएर हरदिन् गरि नम्र माथ ॥१८॥
गौका सधैं मुख पुछर् सिङ् पीठमाथि ।
द्यौताहरू बसदछन् लिइ धेर साथी ॥
तस्मात् गरेपछि त पूजन नै सदैव ।
गौको, बने उसउपर् खुशि पितृ-देव ॥१९॥
तन्मन् दिएर जसले खुशिसाथ नित्य ।
सेवा गऱ्यो नि गउको बनि खूब भृत्य ॥
त्यै पुण्यले सब मनोरथ तेसका ता ।
सिद्धै गराउँछन खूश भई विधाता ॥२०॥

बाँधेकि गाइ तिरखालु पनी घरैमा ।
छन् कन्यका परसरेकि त माइतैमा ॥
तेस्ता गृहस्थहरु धर्म सबै भुटेर ।
पुग्छन् नि रौरवमहाँ सब पाप् लुटेर ॥२१॥
गौलाइ घाँस पनि खान नदी जउन् जन् ।
हाँक्छन् अनाहकमहाँ उनि नर्क पर्छन् ॥
जो लाठिले गउकनै कुटछन् विकाम ।
बेहाल भै पुगदछन् यमराजधाम ॥२२॥
जो डाँसहेरु गउकै त धापाइदिन्छन् ।
दीएर घाँसहरु सेवन धेर गर्छन् ॥
पुर्खा नरक्ति भए पनि तेसका ता ।
स्वर्ग उपर् पुगदछन् खुशि भै विधाता ॥२३॥
भन्छू म फेरि इतिहास् यसमा अघीको ।
गोशुश्रुषाविषयको मइले सुनेको ॥
क्यै कालमा जनक भूपति देह छाडी ।
स्वर्ग तरफ् चलदथे बढदै अगाडि ॥२४॥
बाटो परेछ नरकै बिचमा र ताहाँ ।
हावा पुगेछ नृपका जिउको त वाहाँ ॥
नष्टै हुँदा अधिक कष्ट ति पापि जन्को ।
बोल्दा भए सकल पापि बढाइ रन्को ॥२५॥
पुण्यात्म ! हौ तिमि कऊन नगीच आऊ ।
हामीहरूकन चटक्क नछोडि जाऊ ॥

तिम्रो शरीर बिचको यहिं खालि हावा ।
चल्दा त हामिहरुका पिर हट्छ बा ! बा! ॥२६॥
यो आर्तनाद सबको सुनि भूपति चट् ।
द्वार्मा खडा भइगए बनि ढीट बीछट् ॥
एक् दिन् नरक्‌तिर सवारि भयो र यम्को ।
देखे जनक्‌कन त भेट भयो र जम्को ॥२७॥
सोध्नूभयो यमजिले नृपते ! अचानक् ।
आऊनुभो नरकमा नबुझी भयानक् ॥
पाल्नोस स्वर्गतिर भोगनुहोस् आएस ।
यो नर्क भोग्छ जुन गर्दछ काम् नवेश ॥२८॥
क्वै पुण्यवान पृथिवीतलमा अहीले ।
देख्दीनँ हे अब तपाइँ भइँ मईले ॥
छन् अप्सरा सब घृताचिहरु सुयोग्य ।
पाल्नोस स्वर्ग अब मिल्छ अनेक भोग्य ॥२९॥
जो गर्दछन् नि अपवाद पराइको नै ।
लालच् सदैव गरने पर-द्रव्यको नै ॥
झगडा सधैँ अरुसगै गरने विकाम ।
तिन्लाइ यो नरकमा छ तयार ठाम ॥३०॥
सेवापरायण अतीव स्वधर्मवाली ।
जो आफना गृहिणिलाइ दिएर गाली ॥
केही बिराउ नभईकन त्याग गर्छन् ।
ती कालसूत्र यहिं नर्कमहाँ त पर्छन् ॥३१॥

धन्को गरेर अभिलाष विकाममाहाँ ।
ठग्छन् नि मित्रहरूलाई त वस्तुमाहाँ ॥
तेस्ता ति क्रूर जनलाइ भनेर योग्य ।
बन्दो भयो नरपते ! उनको त भोग्य ॥३२॥
जो रामनाम तन-मन्-बचनैहरूले ।
दंभादिले गरि यहाँ भजनै त भूले ॥
तेस्ता पशू सरि अभागि मनुष्यलाई ।
पीडा दिनै भनि तयार छ यो सजाइ ॥३३॥
जो गर्दछन् अति ठुलो अपराध धेर ।
तिन्लाइ दूतहरु ल्याउँदथे गएर ॥
श्रीरामनाम हरदम् भजने खुशीले ।
यस्ता हजूरकन ल्याउँदथे कउन्ले ॥३४॥
सत्कारसाथ यमको सुनि बात फेरि ।
भन्नूभयो जनकले नगरेर देरी ॥
मेरा शरीर-बिचको पवनै गएर ।
क्यै शान्ति पापिहरूलाइ प्रभो ! मिलेर ॥३५॥
उन्कै खुशामद भएर म आज याहाँ ।
तैय्यार छू बसनलाइ म छोडुँ काहाँ ॥
की छोडदिनोस यिनलाइ लगी सँगैमा ।
स्वर्गैतरफ् म चलुँला परि खुब् मगन्मा ॥३६॥
येती सुनी जनकलाइ पनी यमैले ।
भन्नूभयो सुननुहोस तपाइँ ऐले ॥

के के गरेछन यिनीहरु घोर पाप।
यो नारकीय गरदा छन भोग ताप ॥३७॥
विश्वस्त मित्रबधुको कारकाप लाई।
स्वामिव्रता धरमलाइ दिया डढाई ॥
यै हेतुले अधिक भीरमहाँ पकाई।
साहौ कडा दुख दिई दिउँला झराई ॥३८॥
दुर्मत् परस्त्रिहरुको यसले लियो र।
दुःख् भोग्छ सौ बरष रौरवमा बसेर ॥
यस्ले हडप् गरिदियो परद्रव्य धेर।
छटो भई डुबछ पीप रगत् निलेर ॥३९॥
वास्ता गरेन यसले अघि पाहुनाको।
भोकै सुते उनिहरू गरि बल् रुनाको ॥
तेस् निम्ति खुब् भ्रमरले हरदम् डसेर।
या अन्धतामिसरमा छ विपत् सहेर ॥४०॥
निन्दा गऱ्यो नि अरुको हरदम् तसैले।
यो हाँस्तथ्यो थपरि मारि सुनी बलैले ॥
यै हेतुले यि दुइ नै गिरि अन्धकूप।
बेहोर्दछन् अतुल कष्ट भएर चूप ॥४१॥
यस्ता अरू पनि कसूरिहरू तमाम।
तैय्यार छन् कति घुमी अब ठाम-ठाम ॥
यिन्लाइ पूर्ण नदिईकन मुक्तमान।
छोड्दैन मन् गरनुहोस अब स्वर्ग जान ॥४२॥

यिन्को त यो दुख छुटाउनमा जिगीर ।
राजन् ! छ सो सुननुहोस कुनै उजूर ॥
बीहान शुद्ध भइ राम-भजन् गरेको ।
जो पुण्य हो उहि दिनोस् यतिले पुगीगो ॥४३॥
सुन्दा त यो जनकले यमको सवाल ।
त्यो पुण्य सौपनुभयो गरि दिल् बहाल ॥
तत्कालमा ति सब पापिहरू तमाम ।
पौंचे स्तुती जनकको गरि स्वर्ग-धाम ॥४४॥
देखेर यो यम सँगै नृपले त फेरि ।
सोध्नूभयो दङ भई नगरेर देरी ॥
यो पापि मात्र रहने पुरमा कसोरी ।
कुन् पापले म पनि आइगएँ यसोरी ॥४५॥
यस्तो सुनेर नृपको यमराज ताहाँ ।
भन्नूभयो जनकको तहिं सामुमाहाँ ॥
मन्-माफिकै चरन लागेकि गाइलाई ।
दीबक्सियो हुकुम हाँक्न सिपाहिलाइ ॥४६॥
त्यै पापले नृपतिवर्य ! तपाइँ याहाँ ।
पाल्नूभयो नहि भने त यसोरि काहाँ ॥
ऐले तपाइँ सरिको सुकृतप्रधान ।
मानीसको सहज आउँदथ्यो विराम ॥४७॥
येती सुनी जनक भूपति स्वर्गतर्फ ।
पाल्नूभयो चढि विमान नराखि गर्व ॥

यै हेतुले जसरि हुन्छ सदैव राजन् ।
गर्नू उचित् छ गउको त सहर्ष पूजन् ॥४८॥
सन्तानका निमति सेवन गाइको नै ।
गर्नोस भूप अरु काम छईन कोनै ॥
जावालिको यति सुनी उपदेश वेश ।
फेर् सोधनी गरदछन् खुशि भै नरेश ॥४९॥
विप्रेन्द्र ! पूजन गरूँ ! गउको कसोरी ।
आज्ञा हओस् विधि विधान सबै विचारी ॥
यस्तो सुनेर नृपको अभिलाष फेरि ।
भन्नूभयो ऋषिजिले नगरेर देरी ॥५०॥
गर्नू पुजा दिनहुँ चित्त लगाइ खूप ।
जानू चराउन सधैं भइ चूप भूप ! ॥
खवाएर जो गउकनै विनि गोबरैको ।
खानू पकाइ खुशिसाथ बुझेर मीठो ॥५१॥
वन्मा गएर पनि गाइ हिंडे त हिंड्नू ।
पानी पिए पिउनु काहिं बसे त बस्नू ॥
हात्मा लिई असल घाँस खुवाउनू फेर् ।
माखा र डाँस पनि हेरि धपाउनू धेर् ॥५२॥
भूपेन्द्र ! एहि रितिले गरि गोविधान ।
सन्तान हुन्छ यसमा द्विविधा नमान ॥
जावालिको वचन माफिक भूपतिले ।
गर्दैं थिए नि गउपूजन भक्तिभावले ॥५३॥

क्वै दिन् नवीन वनको अति रम्य रङ्ग।
हेर्दै थिए नृपति खूब भएर दङ्ग॥
पाएर औसर त्यहीं क्वहि सिंह आई।
पञ्जा दिएर गउलाइ दियो ढलाई॥५४॥
फर्केर आइ पृथिवी बिच पल्टिएकी।
देखेर गाइकन चट्ट मरी सकेकी॥
रोई कराइ खुप छाति पिटेर भूप।
जाबालिथ्यैं पुगिगए लिइ दैन्य खूप॥५५॥
भन्छन् ! मुने मकन चट्ट झुक्याइ आज।
मारीदियो गउकनै कहि सिंहराज॥
क्यारूँ ? कसो गरुँ ? म उत्रिउँ के गरेर।
बाचूँ म के ! बिहक गोवध यो गरेर॥५६॥
यो पाप नाश गरनाकन क्वै उपाय।
आज्ञा हओस् अब भए हुँदि दी सहाय॥
जावालिले सुनि ऋतम्भरको सवाल।
भन्नूभयो गरिदिई क्यहि दिल् बहाल॥५७॥
अज्ञानबाट भइ गोवध हे प्रजेश !
होला अवश्य कहि निष्क्रय खूब वेश॥
पाल्नोस हाल ऋतुपर्ण नृपेन्द्रकाहाँ।
बतलाउनन् उहि उपाय म भेज्छु ताहाँ॥५८॥
यस्तो सुनी तब ऋतम्भर छोडि देरी।
घरमा पुगे नि ऋतुपर्णजिका त फेरि॥

जोडेर हात सब आफनु त्या करामत् ।
मागे सबै गरि बयान सुयोग्य संमत् ॥५९॥
सूनेर त्यो सब ऋतम्भरको सवाल ।
भन्छन् तहाँ नि ऋतुपर्ण हरे ! नृपाल ॥
के जान्दथें म त मुनीहरुका अगाडि ।
आऊनुभो मसँग ती सबलाइ छाडी ॥६०॥
श्रद्धा ममाथि छ तथापि भने म केही ।
बतलाउँछू सुननुहोस नृपाल ! तेही ॥
श्रीरामको गरनुहोस भजन् सदा नै ।
ती खुश् भए ठहरदैन नि पाप कौनै ॥६१॥
गोदान तेस पछिबाट सुवर्णयुक्त ।
दीनोस ब्राह्मणकनै बनि रामभक्त ॥
यो राय चट्ट ऋतुपर्णजिको लिएर ।
सोही मुताबिक ऋतम्भरले गरेर ॥६२॥
खूशी भएर तब भन्दिभइन् ति गाई ।
वर् माग लौ भनि ऋतम्भर भूपलाई ॥
अर्जी गरे नृपतिले "सुत जन्मियोस ।
त्यो फेरि रामपदपङ्कजभक्त होस"॥६३॥
होला 'तथास्तु' तिमिलाइ भनेर ताहाँ ।
धेनू अदृश्य भइगैन् वनमध्यमाहाँ ॥
तेही बमोजिम ऋतम्भर भूपको ई ।
जन्मे सुपुत्र रघुनाथपदाब्ज सेवी ॥६४॥

नाम् सत्यवान भनि प्रोहितजी गएर ।
राखीदिए सकल शास्त्र विचार् गरेर ॥
नामै समान यिनको छ हरेक काम ।
भज्छन् सधैं मनमनै इ त रामनाम ॥६५॥
आफ्ना प्रजाहरुकनै इनले तमाम ।
उर्दी दिए भजन हर्दम रामनाम ॥
आठ् वर्षदेखि असि वर्षतलक् गएका ।
छन् है प्रजाहरु त भक्त सितापतिका ॥६६॥
थाहा भएपछि त श्रीरघुनाथको यो ।
घोडा रहेछ भनि सेवकले कहेको ॥
ई सत्यवान प्रभुका चरणै परेर ।
अर्पण् स्वराज्य गरनन् अति खुश् भएर ॥६७॥
आज्ञा मुताबिक सबै इतिहास ऐले ।
वर्णन् गरें इ नृपको खुशिसाथ मैले ॥
भन्दै थिए सुमति चट्ट त्यही बखत्मा ।
घोडा घुस्यो दउडदै तब त्यै नगर्मा ॥६८॥
श्रीरामको हय रहेछ भनेर चट्ट ।
थाहा भयो र नृप खूश भई बिछट्ट ॥
शत्रुघ्नका शरणमा परि भक्तिसाथ ।
सौंपे सबै धनजनै गरि नम्र-माथ ॥६९॥
शत्रुघ्नले पनि त त्यो तब राज्यभार ।
श्रीरुक्म नाम नृपका सुतलाइ यार ॥

संभेर सौंपनुभयो तब सत्यवान ।
घोड़ा पछी चलिगए मिलि योग्य मान ॥७०॥
घोडा चल्यो जबरजस्ति बढाइ चाल ।
आएर राक्षस कही बहुतै कराल ॥
मार्गैमहाँ बढि गयो अति अन्धकार ।
ऊठ्यो धुलो चहुँदिशा नहुने प्रजार ॥७१॥
चम्के तहाँ बिजुलिहेरु अनेक रङ्गी ।
गर्जे नि मेघहरु घेर गरेर भंगी ॥
बस्र्यो अनी रगत पीप बढेर धारा ।
आकूल व्याकुल भए तब वीर सारा ॥७२॥
थोरै पछी सकल बादल त्यो हटीगो ।
धूलो बसी चहुँ दिशा छरलङ्ग भैगो ॥
घोडा नदेखिकन खलबल मच्चिनै गो ।
विद्यूतमालि लडछू भनि झट् खड़ा भो ॥७२॥
ठूला ठुला अति भयङ्कर राक्षसैको ।
सेना खड़ा भइगयो बहुतै ननीको ॥
त्यो हाल देखि सुमतीकन चट्ट फेरि ।
शत्रुघ्नको हुकुम भो नगरेर देरी ॥७४॥
हे मन्त्रिवर्य ! यसमा सँग लड्नलाई ।
को छन् सुयोग्य विरहेरु कहू मलाई ॥
यस्तो सुनेर सुमती पनि चट्ट फेरि ।
शत्रुघ्नथ्यैं विनति गर्छन राय फोरी ॥७५॥

हे नाथ ! यो समरमा लडनै भनेर ।
शस्त्रास्त्रहेरु सब ठिक्क गरेर धेर ॥
पुष्कल्जि जाउन प्रथम् अहिले अगाडि ।
लक्ष्मीनिधी पनि चलून् उनकै पछाडि ॥७६॥
वीराग्रगण्य हनुमान सुबाहु-वीर ।
राजा सुमद् पनि चलाउन जाइ तीर ॥
शत्रुघ्नले यति सुनी सबलाइ खेरी ।
सोध्नूभयो सबइका मुखतर्फ हेरी ॥७७॥
संग्राममा गइ गरेर ठुलो लडाइँ ।
को छौ समर्थ भन राक्षस मार्नलाई ॥
सक्छौ भने गर अगाडिमहाँ प्रतिज्ञा ।
मिथ्या नहोस् जसरि हुन्छ दिएर प्रज्ञा ॥७८॥
शत्रुघ्नको यति सुनेर हुकूम ताहाँ ।
पुष्कल्जि गर्छन कबोल अगाडिमाहाँ ॥
त्यो दैत्यलाइ शरको वरषा गरेर ।
गर्नेछु मूर्छित अवश्य म धीर् बनेर ॥७९॥
त्यो काम गर्न नसके हुँदि आज मैले ।
गर्नेछु त्यो नरक भोग अती खुशीले ॥
जो वेदनिन्दक र पुत्र धनाभिलाषी ।
भोग् गर्दछन् नरक धेर् भइ पापराशि ॥८०॥
लक्ष्मीनिधी पनि यती सुनि जोशसाथ ।
भन्छन् तहाँ खुप उँचो गरि आफ्नु माथ ॥

गोविक्रयी द्विजकनै जुन पाप होला ।
त्यो आज शत्रु नजिती फरके म ल्यूँला ॥८१॥
येती सुनी गइ तहाँ हनुमान वीर ।
भन्छन् तहाँ गरि विचार बनी सुधीर ॥
जो तहाँ ब्राह्मणिगमन् गरि शूद्र जाला ।
त्यै पाप होस म मरे हुँदि आज होला ॥८२॥
शत्रुघ्नले पनि अनी सबका अगाडि ।
भन्नूभयो कबुलमा नहटी पछाडि ॥
तीखा तिखा शर प्रहार गरेर त्यस्को ।
शिर् काट्न आज नसके म त भन्छु यस्तो ॥८३॥
जो स्वर्ण चोरि गरदा हुन जान्छ पाप ।
जो कूटसाक्षिहरु भोग्छन घोर ताप ॥
जो पाप मिल्दछ नि वेद गरेर निन्दा ।
त्यो भोगनेछु यसमा कहि छैन धन्दा ॥८४॥
येती भनी समरमा पुगि वीर धेर ।
त्यै दैत्यका नगिचमा भिडनै गएर ॥
विद्यूतमालि सबले सुनन्यै गरेर ।
भन्दै गयो सकललाइ अली बढेर ॥८५॥
हे वीर हो ! नगर युद्ध सुरक्ष फर्को ।
देख्तीनँ क्वै समर-योग्य नलाउ झर्को ॥
बत्तीमहाँ पुतलि झैं तिमिहेरुलाई ।
मैले हजम्म् गरिदिनेछु यसैं चपाई ॥८६॥

विद्युतमालि म त रावणको सखा हुँ ।
लड्नैमहाँ मन छ ता त्यहि रीस पोखुँ ॥
आओस आफइँ अगाडि सरोस राम ।
त्यस्को रगत् नपिइ लौं किन छोडुँला म ॥८७॥
येती सुनेर पुगि राक्षसका समीप ।
पुष्पल्जि भन्छन नि त्यस्कन छाँटि खूप ॥
ई धक्कुलाइ विहकै रणभूमिमा त ।
हे दैत्यराज ! तिमि हाल नपार रात ॥८८॥
देखाउँछन् विरहरू बल कामबाट ।
छोडेर लड्नु तिमि हाल कुरा नकाट ॥
जस्ले त रावण-कुलै खतमै गरेथे ।
उन्कै हरी हय तिमी बचि जाउला के ? ॥८९॥
पुष्कल्जिको यति सुनीसकि योग्य बात ।
विद्यूतमालि तब चट्ट उठाइ हात ॥
पुष्कल्जिका उपर शक्ति चुनेर हान्यो ।
यस्लाइ कत्तल गरें भनि भित्र ठान्यो ॥९०॥
देखेर शक्तिकन पुष्कलले सहर्ष ।
गर्दा भए दिल दिई तिन बाण वर्ष ॥
ती बाणले तिन टुकै गरि शक्तिलाई ।
तेस्का अगाडि ठक ठक्क दिए खसाई ॥९१॥
विद्यूतमालि अति क्रुद्ध भएर फेरि ।
छोडे त्रिशूल भयदायि नलाइ देरी ॥

त्यसलाइ फेरि पनि पुष्कलले शरैले ।
धूलो धुलो गरिदिए सहसा बलैले ॥६२॥
पुष्कलजिले त धनु कानतलक् खिंचेर ।
बाण् छोड्नुभो तब त खीश अती गरेर ॥
तो बाण बज्रिकन छातिविषे टनाटन् ।
विद्यूतमालिकन कष्ट दिएर पो भन् ॥६३॥
मुद्गर् उठाइ अति रीस गरेर फेरि ।
पुष्कल्जिको उपर क्यै नगरेर देरी ॥
छोड्यो र दैत्यपतिले बलले गरेर ।
पुष्कल् लडे रथ उपर् विचयन् भएर ॥६४॥
आयो र होश पछि पुष्कल फेरि ताहाँ ।
विद्यूतमालिकन भन्छन सामुमाहाँ ॥
हे वीर ! धन्य तिमि छौ अब ता अहीले ।
देखाउँछू स्वबल पौरुष हेर मैले ॥६५॥
पुष्कल्जिले यति भनी जब वाण छोडे ।
त्यै वाणले त उसको पनि छाति फोडे ॥
देखी विमान बिच मूर्छित दाजुलाई ।
त्यो उग्रदंष्ट्र विर आइ लग्यो उडाई ॥६६॥
दाजूकनै समरदेखि हटाइ दूर ।
फर्क्यो रणस्थलमहाँ भइ खूब चूर ॥
मन्दो भयो अधिक कट् कट पारि दाहा ।
भट् त्यो रणस्थल पनी थरकाइ सारा ॥६७॥

हे दुष्ट । पुष्कल विहोश् गरि दाज्युलाई ।
बन्छस् अहो विजयि क्यै नगनी मलाई ॥
जीतिस् भने मकन यै रणभूमिमाहाँ ।
होलास् जयी नतर छोड्छु म सित्ति काहाँ ॥६८॥
यो उग्रदंष्ट्र विरको सुनि बात फेरि ।
दश् बाण् प्रहार् गरिदिए नगरेर देरी ॥
त्यो बाणको पिर सहेर अती रिसाई ।
एक् मुड्कि पुष्कलकनै त दियो बजाई ॥६९॥
पुष्कल्जिले अनि तिखा शरको प्रहार ।
तेस्का उपर् गरिदिए भइ लाल् मुहार ॥
त्यो चोट खाइ अनि दैत्य रिसाइ फेरि ।
छोड्यो त्रिशूल तब पुष्कललाइ हेरी ॥६००॥
त्यो शूलको अधिक चोट परेर ताहाँ ।
मूर्छा परे भरतपुत्र ठुलो रथैमा ॥
त्यो हाल पाइ हनुमान गएर चटट् ।
भन्छन् तहाँ तब त कोप गरी बिछट्ट ॥ १ ॥
रे मूर्ख ! भागिकन जान्छस हाल काहाँ ।
तैय्यार छू लडनलाइ म आज याहाँ ॥
येती भनेर सब राक्षसवर्गलाई ।
मार्पीट् गरे खुब तहाँ हनुमान जाई ॥ २ ॥
नङ्ले कसैकन कुनैकन दाँतले नै ।
काँहीं त लात दिइ मारिदिए नि कौनै ॥

देखेर त्यो चलन आत्तिइ खूप ताहाँ ।
त्यो उग्रदंष्ट्र पुगिगो तब सामुमाहाँ ॥ ३ ॥
भन्दो भयो पख न पख् हनुमान ऐले ।
तेरो रगत् पिउँछु लौ अहिले मजाले ॥
येती भनेर अति तीक्ष्ण त्रिशूल देखी ।
दाँत्ले चपाइकन खूब गरेर सेखी ॥ ४ ॥
हातै उठाइ जब ता हनुमान वीर्ले ।
दीए पटापट तहाँ चुर भै रिसैले ॥
त्यो उग्रदंष्ट्र अति क्रुद्ध भएर हेरी ।
माया त राक्षसि फिजाइ दियो र फेरि ॥ ५ ॥
चारै दिशा अति घना बढि अन्धकार ।
तेस्कालमा स्व परको हटिगो विचार ॥
ढुङ्गा पहाड सरिको बरसे तमाम ।
तर्स्यो तहाँ रगत पीप समस्त ठाम ॥ ६ ॥
देखेर त्यो अति भयङ्कर-युद्ध चट्ट ।
शत्रुघ्नतर्फ हलचल् मचिगो बिलट्ट ॥
श्रीरामको मनमहाँ मननै गरेर ।
सेनापति कहि त संमुखमा भिडेर ॥ ७ ॥
संमोहनास्त्र झट छोड़िदिएर तिन्ले ।
माया हट्यो दनुजको अधिकै रितीले ॥
ब्यूँझेर पुष्कल पनी लडनै भनेर ।
लीएर ईख पहुँचे रणभूमिनेर ॥ ८ ॥

आकाशमा भइ तयार चढी विमान ।
तेस् दैत्यको दल थियो लिइ खूब शान ॥
देखेर पुष्कलजिले पनि बाण-धारा ।
छाडेर व्याकुल भए तब वैरि सारा ॥ ९ ॥
शत्रुघ्नजी पनि म लड्छु भनेर खूप ।
पाल्नूभयो रणमहाँ लिइ धेर रूप ॥
वाव्यय अस्त्र रिपु-मण्डलमा रिसैले ।
मन्त्रेर छोडनुभयो सहसा बलैले ॥१०॥
त्यो अस्त्रले अधिक वायु बहीदिनाले ।
आकाशबाट त विमान्हरु खस्न थाले ॥
जुल्फी फुकेर अभ्र होश उडेर फेरि ।
खस्थे ति राक्षसहरू रणतर्फ हेरी ॥११॥
त्यो दैत्यले सब बिचारि हवाल चट्ट ।
पाशपतास्त्र तब छाडिदिएर झट्ट ॥
वेतालका गण खपर् खजिचीलिएर ।
संग्रामका बिचमहाँ खजितै भएर ॥१२॥
शत्रुघ्नका फउजको सब अङ्ग काटी ।
थाले रगत् पिउन खूब फुलाइ घाँटी ॥
शत्रुघ्नले पनि हबीगत आफ्नु हेरी ।
नारायणास्त्र गरि मन्त्र नलाइ देरी ॥१३॥
छोड्नूभयो र तब राक्षसले गरेको ।
माया हट्यो गजब चाल सँगै बढेको ॥

तेस्का पछाडि अतिकोप गरेर फेरि ।
दाखील दैत्य भइगो नगरेर देरी ॥१४॥
हातमा ठुलो त्रिशुल देखिं निशाचरैको ।
शत्रुघ्नले दुबइ हात खसाल्दिनुभो ॥
रिस्ले परेर चुर खूब कमाइ शीर ।
आयो र लड्न भनि हान्नुभयी र तीर ॥१५॥
विद्यूतमालि शिर दो टुक भै गिऱ्यो र ।
त्यो उग्रदंष्ट्र तब सामु गई भिड्यो र ॥
शत्रुघ्नले अनि तिखा शरले गरेर ।
त्यस्लाइ मारिदिनुभो दुशमन् भनेर ॥१६॥
दैत्यैहरू अरु त मालिकले विहीन ।
हूँदा उपाय नभएर बनेर दीन ॥
शत्रुघ्नको चरणपङ्कजमा परेर ।
सौंपे तहाँ हय हओस दया भनेर ॥१७॥
घोडा मिल्यो भनि तहाँ सब सैन्य फेरि ।
हर्षित् भए बहुत त्यो हयलाइ हेरी ॥
शत्रुघ्नजीकन तहाँ दिइ धन्यवाद ।
पल्टन् चल्यो खुब गरी हयतर्फ याद ॥१८॥
उत्तर दिशातिर कुद्यो हय दौडि खूप ।
दौड़े पछाडि विरहेरु भएर चूप ॥
रेवानदी- तिरतिरै हय दौडदै थ्यो ।
क्वै रम्य आश्रम त देखिन चट्ट आयो ॥१९॥

शत्रुघ्नको सुनि सवाल समस्त बात ।
गर्छन् बयान सुमती दुइ जोडि हात ॥
वीराग्रच ! आश्रम त हो अति शुद्ध खाश ।
आरण्यकै मुनिजिको छ सदैव वास ॥२०॥
प्रख्यात छन् इ मुनि ता रघुनाथ-भक्त ।
श्रीरामनाम भजनैतिर नित्य सक्त ॥
यिन्को अश्वय दरशन् गरि जानलाई ।
होला मुनासिव म ठान्छु हजूरलाई ॥२१॥
शत्रुघ्नजी त सुमती हनुमान पुष्कल् ।
लक्ष्मीनिधी सुमद फेरि सुबाहु ई बल् ॥
लीएर पाल्नुभयो खुप भक्तिसाथ ।
त्यो पुण्य आश्रममहाँ गरि नम्र माथ ॥२२॥
पूगी प्रणाम गरि ती मुनिवर्यलाई ।
बस्नूभयो सबइ नाम र ठाम् बताई ॥
देखेर आश्रमविषे ति अतीथिलाई ।
पूजा गरे तब त अर्घ्यहरू चढाई ॥२३॥
सोध्नूभयो मुनिजिले किन पाल्नूभो ।
मैले त ख्वै चिनिनँ कत्ति पनी कसो भो ॥
यस्तो सुनेर मुनिवर्यजिको सवाल ।
वर्णन् गरे सुमतिले भयभर् हवाल ॥२४॥
भन्नूभयो मुनिजिले पनि त्यो सुनेर ।
श्रीरामका चरणमा तनमन् दिएर ॥

साक्षात् निरञ्जन निरीह स्वयं भएर ।
श्रीरामले गरनु यज्ञ अजब् छ हेर ॥२५॥

तीर्थाटन् गरने भयो र मनसुब् * पैले म हिंड्दो भएँ ।
नाना-देश महात्म्यको त दरशन् * मन् लाइ गर्दै गएँ ॥
तत्त्वज्ञान भएन क्यारुँ ! कहि दिन् * लोमश् मुनी मिल्नुभो ।
हात् जोडेर खडा भएँ र मुनिले * के सोद्धछौ भन्नुभो ॥२६॥
ब्रह्मन् ! के अरु सोधुँ डुल्छु दिनहूँ * भूगोलतीर्थैं भरि ।
संसार् सागर तर्नलाइ उपदेश् * मिल्ने भरोसा गरी ॥
त्यस्तो क्वै मिलदैन तै मिलिगए * गर्दैन शिक्षा रती ।
ऐले दर्शन भो मुने ! हजुरको * सुध्रन्छ मेरो गति ॥२७॥
मेरो प्रश्न सुनेर लोमशजिले * गर्नूभयो शिक्षण ।
श्रीसीतापतिका चरण् कमलको * ध्यान्मा लगाई मन ॥
सुन्नोस् चित्त दिएर विप्र ! अहिले * गुप्तै म भन्छू पुरा ।
नास्तिक्हेरु सँगै नभन्नु कहिले * यस्ता प्रतापी कुरा ॥२८॥
राम्भन्दा कहि देव छैनन ठुलो * क्वै व्रत् र योगै पनि ।
यज्ञै कोहि छईन दान पनि लौ * राम्नाम मैं छैन नि ॥
ध्यानै श्रीरघुनाथको मन दिई * गर्नें त नीचै जन ।
संसार् सागर पार जान्छ सहजै * राम्को कृपा भैकन ॥२९॥
सारा शास्त्रमथन् गरेर मइँले * कैय्यौं युगैले गरी ।
जो सिद्धान्त गरें सबै कहिदिएँ * तिम्रा उपर् यो घरि ॥
राम्कै पूजन रामकै गर भजन् * ध्यान् फेरि राम्कै गर ।
होला गोपदले समान बुझ यो * संसार घोर् सागर ॥३०॥

यस्तो प्रश्न सुनेर धेर उपदेश * फेरी मन्त्रीले पनि ।
सोधें कुन् रितले मुने ! गरनु ध्यान् * पूजा कसोरी ? भनी ॥
यस्तो प्रश्न सुनेर फेरि मुनिले * केही विचारीकन ।
यो आज्ञा हुनगो म भन्छु सुननोस् * खूबै लगाई मन ॥३१॥
नाना चित्र विचित्रका घर सहित् * पुर् जो अयोध्या छ नि ।
सिंहासन् जुन हो उहाँ अति असल् * क्यै कल्पवृत्ते मनि ॥
कान्तीले धपधप् गरेर बलने * त्यै आसनैमा बसी ।
राज् गर्ने रघुनाथको गरनु ध्यान् * तन्मन् दिई मै बसी॥३२॥
दूबोका दलको समान जिउको * श्यामवर्ण सारा भई ।
पूर्णैचन्द्र समानको वदनमा * ती नीलकुन्तल् रही ॥
नाना रत्न जडाउ त्यो मुकुटमा * कान्ती अनौठा हुने ।
कुण्डल् कानमहाँ रही झलकँदा * शोभा बहूतै दिने ॥३३॥
मूगा झैं अति लाल ओठ दुइ भै * दाँतहेरु सेता अति ।
जिब्रो ता छ जपा सरी जसमहाँ * बस्छिन् सधैं भारती ॥
शङ्खाकार छ घाँटि काँध दुइ नै * ऊँचा र पुष्टै भई ।
बाहु ता अतिदीर्घ शोभित अती * बाजू बढ़ीया रही ॥३४॥
हीरा औंठि सहीतका ति आउँला * सुलुक्क पुष्टै भई ।
घूँड़ासम्म पुगेर स्पर्श गरने * शोभा बहूतै दिई ॥
ठूलो छाति भएर चिह्नित पनी * श्रीवत्सहेरू रही ।
नाभी फेरि कमर् छ शोभित अती * सकिन्न मुख्ले कही ॥३५॥
तिघ्रा कोमल लोमशून्य बढिया * घूँडा त पुष्टै अति ।
रेखाका यव-मत्स्य-चिह्नित चरण * शोभा कती हो कति ॥

यस्तो श्रीरघुनाथका स्वरुपको * जो गर्छ ध्यान् आफनू ।
शुद्धै हृत्कमलैमहाँ भव-नदी * त्यो तर्छ धेर् के भनूँ ॥३६॥
यस्तो लोमशको सुनीसकि वचन् * फेरी मजीले पनि ।
शोधें नम्र भएर तेस् बखतमा * शङ्का भयो यो भनी ॥
कुन् हुन् राम मुने ! लिए पृथिविमा * औतार यिन्ले किन ?
के के छन् यिनका चरित्र अहिले * आज्ञा यहाँ होस-न ॥३७॥
यो मेरो बिनती सुनेर मुनिले * उत्पत्ति देखिन् लिई ।
सीता त्यागतलक् बताउनुभयो * श्रीराममा मन् दिई ॥
फेरी भन्नुभयो अगस्ति मुनिका * सल्लाहले रामले ।
छोड्नेछन् हय यज्ञका निमतिमा * सेना सँगै हर्षले ॥३८॥
सो घोड़ा घुमदै कुनै दिनविषे * तिम्रो तपोवन्महाँ ।
आऊला उसका पछी विरहरू * आएर फेरी तहाँ ॥
श्रीराम्को महिमा तिनै विरहरू * गर्लान् खुशी भै अति ।
जाऊला तिमि येहि यज्ञ-बिचमा * मिल्नेछ ताहीं गति ॥३९॥
येही बात कहेर लोमश मुनि * स्वेच्छा गतीले गरी ।
पाल्नूभो म त भंज्दछू रघुपती * पाऊकमल् हर्घरी ॥
सोही माफिक आज आउनुभयो * ऐले तपाईंहरू ।
कोही राम गुणानुवाद गरनोस् * मेरा अगाड़ी बरु ॥४०॥
आरण्यक मुनिको सुनीसकि वचन् * शत्रुघ्नहेरू पनि ।
वर्णन् रामचरित्रको गरिसकी * यस् ठाममा यो भनी ॥
भन्नू हुन्छ अनी मुनी सब सुनी * के भाग्यले आज यो ।
राम्का भक्तहरू मिलेर अनजान् * मेरा यहाँ पाल्नुभो ॥४१॥

मेरो आज सुफल् भयो जनम यो * मैले गरेको तप ।
चान्द्रायणहरु जो गरें व्रत पनी * मन् लाइ दुष्कर् खुप ॥
ती सब्को फल पूर्ण आज हुन गो * श्रीरामको ई कथा ।
जो सुन्नै मिलिगो मलाइ हरने * संसाररूपी व्यथा ॥४२॥
जस्को ध्यान गरेर बस्छु म उनै * साक्षात् रघूनाथ्कन ।
यज्ञैमा दरशन् गरेर सहजै * संसारको बन्धन ॥
तोडूँला रघुनाथ-भक्त जुन हुन् * नामी हनूमानजी ।
उन्को गै म त अङ्कमाल गरुँला * संसारको पीर् तजी ॥४३॥
यस्ता ती मुनिको सुनीसकि वचन् * मै हूँ हनूमान ता ।
येसो भन्नु मुने ! अहो हजुरले * हूँदैन है योग्य ता ॥
आरण्यक् मुनिले पनी उस बखत् * सूनेर यस्तो कुरा ।
आलिङ्गन् हनुमानको गरनुभो * राखेर प्रेमै पुरा ॥४४॥
यस्तै रीतसित ती सबै विरहरू * श्रीरामकै कीर्तन ।
गर्दै ती मुनिका बसेर कुटिमा * गर्दा भए भोजन ॥
अर्को दिन् त उठी बिहानपख नै * रेवा नदीका तिर ।
आफ्नो नित्यक्रिया गरेर खुशि भै * फर्केर आई फिर ॥४५॥
श्री शत्रुघ्नजिले ऋषीश्वरकनै * डोले मगाई जब ।
भेज्नूभो र गए मुनी खुशि हुँदै * पौंचे अयोध्या तब ॥
देखी मण्डप-मध्यमा प्रभुकनै * आफ्नू जनम्को फल ।
पाएको बुझि हर्ष भै मुनिजिको * रोमाञ्चभो बिल्कुल ॥४६
आएका मुनिलाइ देखि खुशि भै * श्रीरामले तीकन ।
आसन्मा मुनिलाइ राखि विधिले * गर्नूभयो पजन ॥

पाऊ धोइ गरेर मार्जन पनी * शिर्मा बडा हर्षले ।
आचमन् गर्नुभयो अरू जन सरी * आफै सितानाथले ४७
श्रीरामचन्द्रजिका र ती मुनिजिका * सबका अगाडीमहाँ ।
वार्तालाप हुँदै थियो उहि बखत् * आश्चर्य भैगो तहाँ ॥
ज्वाला निस्कन गो र ती मुनिजिका * शिर्बाट शब्दै गरी ।
गैगो मिल्न जहाँ थिए रघुपती * साक्षात् जगन्नाथ् हरि ४८
बाजा बज्न गए गगन्-बिचमहाँ * फल्को भयो वर्षण ।
देख्ने ती मुनिहेरु सब् दङ परी * गर्थे नि यो भाषण ॥
सच्चा भक्त यहाँ रहेछन अहो !! * श्रीरामका नै यिनी ।
पाए आज विना-प्रयास यिनले * सायुज्य मुक्ती भनी ४९
श्रीशेष्का मुखबाट यो गजबको * सूनी मुनीको गति ।
लाई श्रीरघुनाथका चरणमा * आफ्नू विशुद्धै मति ॥
संम्भी रामचरित्रहेरु मनमा * हर्षाश्रु-धारा बही ।
वात्स्यायन् मुनिले सवाल् गरनुभो * शेष्का सँगैमा यही ५०
हे शेष्जी रघुनाथका शुभ कथा * सुन्दामहाँ यो घरी ।
मेरो चित्त अतृप्त नै छ अभ्तक * सन्तुष्ट केही गरी ॥
हूँदै हुन्न, अहो अरण्यक मुनी * हूँदै बडा भाग्यवान् ।
जल्ले दर्शन रामको गरिसकी * छोडे शरीर् नाशवान् ५१
त्यो घोडा कुन देशमा पछि पुग्यो * कल्ले हन्यो तेस्कन ।
कस्तो युद्ध भयो अघी कुन सरे * वैरीकनै रोकन ॥
त्यो सम्पूर्ण कथा बताउनुहओस् * राखी ममाथी दया ।
यस्तो प्रश्न सुनी मुनीश्वरजिका * श्रीशेष भन्दा भया॥५२॥

ब्रह्मर्षे ! तिमि रामभक्त अति छौ * त्यै कारणैले गरी ।
सून्याको नसुन्या सरी गरि गरी * शोध्छौ कथा हर्‌घरी ॥
ताहाँ देखि छुट्यो र त्यो हय चल्यो * सेना गयो साथमा ।
ब्रह्मर्षीहरु बस्तथे तप गरी * एकाग्र मन्‌मै जहाँ ॥५३॥
साहैं सुन्दर नर्मदा तिरमहाँ * घोडा पुग्यो वेगले ।
ताहीं एक् दहमा पसेर हय त्यो * गुप्तै भयो सैन्यले ॥
साहै विष्मय मानि आपुसमहाँ * बात् गर्न थाले अनि ।
घोडा लौ दहमा डुब्यो कसरि ! यो * निक्लन्छ ऐले भनी ५४
यस्तो बात् अति खिन्न भै विरहरू * गर्थे जसै आफुमा ।
ताहाँ टायममा अनेक विर लौ * शत्रुघ्न आया तहाँ ॥
देखी सब विरलाइ खिन्न मनमा * शत्रुघ्नजीले तहाँ ।
सोध्नूभो किन खिन्न छौ तिमिहरू * सन्ताप् लिई मन्महाँ ५५
घोडालाइ पनी म देख्‌तिनँ कुनै * जनूले नटेरीकन ।
पक्र्यो की ! दहमा डुब्यो सब कुरा * राम्रा तवलें भन ॥
श्रीशत्रुघ्नजिको हुकूम् यति सुनी * ती वीरहेरू पनि ।
भन्छन् हात जुटाइ माथ बिचमा * सब् बिन्ति गर्छौं भनी ५६

हे नाथ त्यो हय यही दहमा पसेर ।
गुप्तै भयो सकल सैन्यकनै छलेर ॥
निक्लेन फेरि सब हामि त छक्क नै छौं ।
जस्मा पसेर अब खोज्न तयार हुन्छौं ॥५७॥
यस्तो ति वीरहरुको सुनि बात ताहाँ ।
शत्रुघ्नले अलिअलो भइ खिन्न मन्मा ॥

शोध्नूभयो सुमतिको सँगमा पहीले ।
के गर्नु लौ अब सबै जनले अहीले ॥५८॥
कल्ले गएर अब त्यो हय खोज्न सक्छ ।
घोड़ा कउन् तरहले भन भट्ट मिल्छ ॥
शत्रुघ्नको हुकुम यो सुनि मन्त्रि फेरि ।
बिन्ती गरे सकल वीर्हरुलाइ हेरी ॥५९॥
हे नाथ ! त्यो दहमहाँ पसि खोज्नलाई ।
पुष्कल् र वीर हनुमान् हजुरै सिवाई ॥
सक्तैन कोहि जन खोज्न पसी नदीमा ।
यस्तो सुनी ति दुइ वीर लिई सँगैमा॥६०॥
लीएर त्यो दहमहाँ जब पालनूभो ।
जल्भित्र एक रमणीय शहर् नजर् भो ॥
थीए तहाँ चउतरफ् फुलवारि घेर ।
खूबै मनोहर बिछट्ट हवा चलेर ॥६१॥
सारस् र कोइलि जुरेलि चकोर् हलेसा ।
मैना सुँगा ढुकुर मूजुर रूपि खासा ॥
बोली गरेर जनको मनलाइ हर्थे ।
काहीं चराहरु अनेकन नाच गर्थे ॥६२॥
खम्भा थियो मणिजड़ीत अतीव सुन्दर् ।
झल्झल् गरी झलकने रवि झैं दिनैभर् ॥
देख्नूभयो हयकनै तहिं बाँधिएको ।
फेरी अली पर मणीहरूले जडेको ॥६३

खाट्मा सुतेकि कहि सुन्दरिलाइ ताहाँ ।
हाँक्थे चँवर् सखिहरू बसि सामुमाहाँ ॥
देखी तिनीहरुकनै सब सुन्दरीले ।
भन्छन् परस्परमहाँ अति खुशि मन्ले ॥६४॥
को हुन् यिनीहरु अतीव छ गौर रङ्ग ।
साहै सुकोमल इ छन् छन पुष्ट अंग ॥
काल्का फसेर यिनि पासमहाँ अहीले ।
आए निभाइकन खाउँ अबै सबैले ॥६५॥
गर्थे कुरा सब यही तिनिहेरु ताहाँ ।
शत्रुघ्नहेरु पनि डर् नगरेर मन्मा ॥
आई सरासर ति सुन्दरि-वर्गलाई ।
हाँसी प्रणाम् गरिलिया शिर खुब् नुहाई ॥६६॥
देखेर तीनिहरुलाइ नगीचमाहाँ ।
सोधिन् ति योगिनिकि स्वामिनिले नि ताहाँ ॥
हे वीर हो, भन यहाँ तिमिहेरु तीन ।
आयौ कसोगरि अहो कुन चीज लीन ॥६७॥
को हौ बताउ अहिले सब ठीक बात ।
घोडा म देख्छु अति सुन्दर पत्र-साथ ॥
कस्को बताउ हय यो मनमोहकारी ।
यस्तो सुनेर हनुमान सुवेषधारी ॥६८॥
भन्छन् मधुर् वचनले सबका अगाडि ।
हाँसेर केहि मनमा डर लाज छाड़ी ॥

हे सुन्नरी ! हयकनै अब जान तिम्ले ।
श्रीरामको मख-निमित्त विसृष्ट ऐले ॥६९॥
हामीहरू सब जना हय खोज्नलाई ।
आयौं यहाँ तिमिहरूकन डर् दिलाई ॥
घोडा फुकाइकन लौ अब छोडिदेऊ ।
सखी पनी मनमहाँ अब धेर् नलेऊ ॥७०॥
नाहीं भने सकल नारिसमाजलाई ।
लिन्छौं जितेर हयलाइ पनी फुकाई ॥
यस्तो कपीश विरको वचनै सुनेर ।
भन्छिन् ति योगिनि पनी मनमा गुनेर ॥७१॥
हे वीर ! ई सकल सखि गएर घर्मा ।
गर्नू बसेर सब बन्धु लिएर सङ्मा ॥
तिम्रा तिनी बुझ समस्त दिमाग सान ।
मिल्छन् अवश्य जिमिमा तिमि सत्य जान ॥७२॥
इन्द्रादि द्यौता सब शास्त्र ज्ञानी ।
आए पनी जित्तछु क्यै नमानी ॥
लाखौं कडोरौं तिमिहेरु जस्ता ।
हुन्छन् मुसूना म अगाडि बस्ता ॥७३॥
तथापि यो अश्व म छाडिदिन्छु ।
रामका चरण्को शरणै म लिन्छु ॥
दासी म हूँ श्रीरघुनाथजीकी ।
घोडा म रोकूँ बनि लौ ननीकी ॥७४॥

जानीनँ मैले हय रोक्नलाई ।
क्षमा गरून् श्रीपतिले मलाई ॥
अर्को कुरा यो सुन जो म भन्छु ।
शस्त्रै म यौटा तिमिलाइ दिन्छु ॥७५॥
अगाडि फेर् वीरमणी नृपैले ।
हर्नेछ घोडा बुझिलेउ ऐले ॥
शङ्कर्जिको त्यो छ अतीव भक्त ।
तेस्लाइ जित्नाकन छौ अशक्त ॥७६॥
यो शस्त्र आफ्नू विजयार्थ तिम्ले ।
लीनू उचित् ठान्दछु हेर मैले ॥
शङ्का नमानी मजिले दिएको ।
यो शस्त्र लेऊ अति तेज् भएको ॥७७॥
यो शस्त्रलाई नृपको उपर्मा ।
छोड्यो भने भक्ति गरेर राम्मा ॥
घोडाकनै ल्याइ बुझाउनेछ ।
राम्को चरित्रै पनि गाउनेछ ॥७८॥
यस्तो वचन् योगिनिको सुनेर ।
शत्रुघ्नले उत्तर मुख् गरेर ॥
आचमन् गरी शुद्ध भएर ताहाँ ।
अस्त्रै लिए ध्यान गरेर हात्मा ॥७९॥
घोडाकनै लाइ अगाडि फेरि ।
फर्कें तिरैमा नगरेर देरी ॥

देखी सबैले तिनिहेरुलाई ।
आश्चर्य मानेर लिया सुध्याई ॥८०॥
सब् हाल् हनूमानजिले बताया ।
जस्तो गरी अश्वकनै छुडाया ॥
त्यो हाल सारा विरले सुनेर ।
शङ्खे बजाए जय भो भनेर ॥८१॥

ताहाँ देखि अनेक् रकम् रकमका * बाजा बजाईकन ।
घोडा छोडिदिई पछी सब चले * थालिन् जिमी कापन ॥
जस्मा धेर थिए शिवालय ठुला * सुन् चाँदिद्वारा अति ।
शोभायुक्त हरेक् किसिम् किसिमका * थीए बघैचा जति ॥८२॥
काहीं कोइलिको कुहूँकुहूँ ध्वनी * काहीं मजूर् नाच्तथे ।
काहीं सुन्दर फूलमाथि भ्रमरा * भूँ भूँ गरी झुल्दथे ॥
काहीं हंस चकोर सारसा ढुकुर् * मैना जुरेली जति ।
बोल्थे खूब मधुर् ध्वनी गरि गरी * मन् मोह पर्थ्यो अति ॥८३॥
घर्घर्मा दरबारमा अति असल् * खम्भा फटिक्का थिए ।
हीरा मोति जुहार् जडीत घरले * शोभा बहुतै दिए ॥
त्यो सारा शहरै जुहारहरुले * गर्दा सधैं रातदिन् ।
एकैनास गरेर उज्ज्वल थियो * पर्दैनथ्यो रात छिन् ॥८४॥
फेरी त्यो पुरमा सदाशिव सदा * बस्ने हुनाले गरी ।
रात् दिन् शुक्ल र कृष्ण पक्षहरुमा * चन्द्रै थिए हर्घडी ॥
तेस् पुर्मा जति सुन्दरी जन थिया * दिन् रात श्रीचन्द्रको ।
हो की दर्शनले भन्या भ्रम थिया * मुख् स्वच्छसब्नारिको ८५

तेस्मा वीरमणी मणी सरि थिए * राजा प्रजापालक ।
तिन्को कीर्ति सदैव गान गरथे * कन्या अरु बालक ॥
तिन्को पुत्र थिए पराक्रमि अती * रूप्मा मदन्कै सरी ।
नाम् रुक्माङ्गद हो अनेक् युवतिका * साथ्मा रही हर्घरी ॥८६॥
फलबारी बिचमा वरीपरि घुमी * कान्ता सँगैमा रही ।
गर्थे भोग विलास् अनेक् तरहका * अत्यन्त मुग्धै भई ॥
ताहीं श्रीरघुनाथको हय पनी * घुम्दै पुग्यो वेगले ।
देखी त्यो हयलाइ शोभित अती * रुक्मांगदै वीरले ॥८७॥
कस्को अश्व रहेछ बुझदछु भनी * पक्र्यो अनी माथको ।
स्वर्णैंपत्रमहाँ थिया जति जती * कीर्ती सितानाथको ॥
बाँची केहि मसक्क मस्कि युवती * बीचमा घमण्डै गरी ।
थाल्यो भन्न, कतै म देख्तिनँ ठूलो * मेरो पिताले सरी ॥८८॥
जस्को रक्षण गर्नलाइ पुरमा * आएर श्रीशंकर ।
बस्नू हुन्छ सदा बनेर पहरे * पाले भजी घर्घर ॥
उस्ता वीरशिरोमणी विरमणी * मेरो पिता जीवित ।
हूँदैमा रघुनाथको मख हरे * होवैन के खण्डित ॥८९॥
सेखी हेर गरेछ भूतलमहाँ * मै छू ठूलो वीर् भनी ।
तेस्को सेखि म तोडदछू रणमहाँ * ऐले लड़ाका बनी ॥
जो जो सामु बढेर लड्न मसिते * सेखी बिछट्टै गरी ।
आऊलान् सबलाइ मार्छु रणमा * चारौं तरफ् बाण् छरी ॥९०
कुन् रीतले अब पूर्ण गर्छ हयमेध् * त्यो रामले यो घरी ।
कोही वीर बचोइनन् समरमा * हाम्रा अगाडी परी ॥

यस्तो चाल् सँग स्त्री समाज बिचमा * घेरै घमण्डै गरी ।
घोडालाइ लिएर घर् पुगिगयो * लड्नैमहाँ मन् धरी ॥९१॥
बाबूका नगिचै गएर सब हाल् * विस्तारपूर्वक् गर्‍यो ।
सुन्दा वीरमणीजिका मनमहाँ * केही ठुलै डर् पर्‍यो ॥
छोरालाइ रिसाइ वीरमणिले * यो बात भन्छन् तहाँ ।
काँतर् होस् तँ हरेर चोर् सरि भई * घोडा पुर्‍याइस् कहाँ ॥९२
वीर्ले ता हयलाइ बाँधि रणमा * साम्ने अगाडी सरी ।
लड्नूपर्दछ वीरको सँगमहाँ * वाण्को त वर्षा गरी ॥
यस्ता ढङ्सित पुत्रलाइ बहुतै * हप्काइ कैलासमा ।
राजा वीरमणी पुगेर शिवका * साम्ने अगाड़ीमहाँ ॥९३
विस्तार्पूर्वक सब् बयान् गरिसके * जो जो भएको थियो ।
यो सूनीकन श्रीसदाशिवजिको * आज्ञा तबै यो भयो ॥
रुक्माङ्गद् विरले रहेछ नृपते ! * घोडा अहो !! रामको ।
ऐले युद्ध ठुलो हुनेछ बुझिल्यौ * हाम्रो र शत्रुघ्नको॥९४॥
तेस् कारण् हय त्यो लगेर तिमिले * शत्रुघ्नको सामुमा ।
सौंपीदेउ शरण् म पर्दछु भनी * भक्ती गरी राममा ॥
यो आज्ञा शिवको सुनेर नृपले * हात् जोडि फेरी तहाँ ।
बिन्ती गर्न शुरू गरे शिवजिका * पस्रे र पाऊमहाँ ॥९५॥
हे नाथ् ! क्षत्रिय भै कसोरि रिपुको * रण्मा शरण्मा परूँ ।
मद्दत् केहि मिले हुँदी रिपुसँगै * भिड्ने थिएँ मै बरु ॥
यस्तो बिन्ति सुनी सदाशिवजिले * भन्नूभयो यो अनि ।
धन्यै छौ तिमिले समान विर ता * देख्तीनँ काहीं पनि॥९६॥

तिम्रो शौर्य बुझूँ भनेर मजिले * भन्दो भएँ ई कुरा ।
जाऊ लड्न म खूशि छू तिमि अती * शूरा रहेछौ पुरा ॥
तिम्रो हार भयो भने हुँदि तहाँ * आफै म आईकन ।
शत्रुघ्नैसँग भीडनेछु बुझिल्यौ * छोडेर वाण् दन्दन ॥६७॥
घौता दानव यत्त किन्नरहरू * आए पनी युद्धमा ।
कोही टिक्न शकोइनन् समरमा * मेरा अगाडीमहाँ ॥
श्रीराम्चन्द्रजि पाल्नुभो यदि भने * दर्शन् प्रभूको गरी ।
पाऊमा प्रभुको परेर प्रभुको * घोड़ा समर्पण् गरी॥६८॥
आफ्नो जन्म गराउँला सफल यो * राम्का चरण्मा परी ।
यो आज्ञा शिवको सुनी नृप फिरे * लड्नैमहाँ मन् धरी ॥
श्री शत्रुघ्नजिका सिपाहिहरु ता * घोड़ा नदेखीकन ।
कोही पर्वतमा कती सहरमा * घुम्थे कती बन्बन ॥६९॥
यै बीच्मा पृथिवीकनै डगमगै * पार्दै लिई धेर वीर् ।
श्रीशत्रुघ्नजि पाल्नुभो नगिचमा * दीदै फउज्मा नजर् ॥
घोडालाइ नदेखि वीर्हरुकनै * शत्रुघ्नजीले तहाँ ।
सोध्नूभो हय गो कता सब कुरा * साँचो बताऊ यहाँ॥७००॥
यो आज्ञा सुनि हात जोडि सबले * बिन्ती गरे यो अनि ।
हे नाथ् यै बनबाट एक् पुरुषले * घोड हर्‍यो वीर् बनी ॥
यो बिन्ती ति सिपाहिको सुनिसकी * शत्रुघ्नजीले तहाँ ।
मन्त्रीलाइ सुध्याइबक्सनु भयो * को बस्छ राजा यहाँ॥१॥
कत्तीको बलवान् छ फौज कति छन् * कुन् देवको भक्त छ ।
धर्मात्मा छ कि पापि यो छ लडनू * कुन् चालले पर्दछ ॥

यो आज्ञा सुनि भन्दछन् सुमतिजी * शत्रुघ्नका सामुमा ।
हात् जोडीकन ध्यान राखि मनले * श्रीरामका पाउमा ॥२॥
हे नाथ् ! यो पुरमा सदाशिवजिको * सेवक् प्रतापी ठुला ।
राजा वीरमणी रहन्छन यहाँ * वैरीहरूमा कड़ा ॥
सच्चा वीर इ छन् अतीव बलिया * पल्टन्हरू धेर छन् ।
जस्को रक्षण गर्नलाइ पुरमा * शंकर् सदा बस्तछन् ॥३॥
ऐले युद्ध हुनेछ भारि हय त्यो * तिन्ले हरेको भए ।
यस्तो बिन्ति सुनेर व्यूह झटपट् * शत्रुघ्नले ठीक् गरे ॥
यै बीचमा रण हेर्नको मन गरी * नारद् तहाँ पाल्नुभो ।
पजा नारदको गरेर खुशि भै * शत्रुघ्नले सोध्नुभो ॥४॥
देवर्षे ! रघुनाथको हय यहाँ * भेटिन्न खोज्दा पनि ।
कल्ले पक्रिलियो कहाँ छ कसरी * मिल्ला सबै त्यो गुनी
भन्नूहोस् म उपर् धरेर करुणा * दास् हूँ हजूरको म ता ।
यो प्रश्नै सुनि मन्महाँ क्यहि गमी * लीएर घोडा-पता ॥५॥
श्री राम्को भजनै गरेर ऋषिले * भन्नूभया यो अनि ।
हे शत्रुघ्न ! हरेछ अश्व अहिले * रुक्माङ्गद्ले वीर् बनी ॥
तेस्को वीरमणी छ बाबु बलवान् * साह्रै प्रतापी छ त्यो ।
तेस्का साथमहाँ बडा जतनले * लड्नू तिमीले पर्‍यो ॥६॥
चाँडै व्यूह तयार पार रिपुले * फोर्नै नसक्ने गरी ।
मर्नेछन् बहुतै शुरा विरहरू * यो घोर रणमा परी ॥
तिम्रै नै हुन जान्छ जीत बुझिल्यौ * आखीरका युद्धमा ।
राम्नाम्को बलले हुनन् रिपुहरू * वशमा तिनै लोकमा ॥७॥

येती बात कहेर देर नगरी * नारद्जि पाल्नूभयो ।
केलासदेखि फिरेर वीरमणिले * सेनापती डाकियो ॥
सेनाका पतिलाइ वीरमणिले * यो बात भन्छन् तहाँ ।
हे सेनापति सैन्य ठीक गर झट् * शत्रुघ्नको सामुमा ॥८॥
जानूपर्दछ लड्नलाइ अहिले * तैयार भै युद्धमा ।
यो आज्ञा नृपको सुनी झट गई * सेनापती पुर्महाँ ॥
भ्याली पिट्न लगाइ जल्दि सबले * सूनून् भनी जोरले ।
यो बात् भन्न पठाउँदो पनि भयो * सेनापती वीरले ॥९॥
शत्रुघ्नै सित लड्नुपर्दछ गई * रणमा बनी वीर खुप् ।
शत्रूलाइ जितेर वीरहरु हो ! * देखाउ आफ्नो त हुप् ॥
यस्तो उर्दि सुनेर वीर हरू सब् * अत्यन्त खूशी भई ।
निक्ले पैहि कवच् अनेक् तरहका * हात्मा धनुर्बाण् लिई ॥१०
रुक्माङ्गद् र शुभाङ्गदै नृपतिका * छोरा दुई वीर् पनि ।
चाँदीका रथमा चढेर निसके * वैरी जितौंला भनी ॥
फेरी भाइ ति वीरसिंह नृपको * सुन्को रथैमा चढी ।
निस्के वीरहरू लिईकन अनेक् * थर्क्यो जिमीन् थर्थरी ११
सेनाका पति रीपुवीर पनि फेर् * सेना तयारै गरी ।
बिन्ती पारिलिया प्रभो! फउज सब् * आएँ तयारै गरी ॥
फेरी वीरमणी मणीजड़ित एक् * सुन्दर् रथैमा बसी ॥
श्रीशङ्कर्कन ध्यान्गरी रणतरफ् * हींडे कमर् खुब् कसी ॥१२

जसै पल्टन् दौड्यो रणभुमि तरफ् लड्दछु भनी ।
बजे बाजाहेरू किसिम किसिमैले घनघनी ॥

सुनी बाजा कातर्हरु गिरन थाले रणमहाँ ।
जसै आयो पल्टन् प्रबल रिपुको देखि रणमा ॥१३॥
रघूनाथ्का सेना खलबल गरे आपुसमहाँ ।
जिमी सारा काँप्थिन् थरथर गरी तेस् बखतमा ॥
सबैलाई शान्तै गरिकन त शत्रुघ्न विरले ।
सबैलाई हुक्मै गरिदिनुभयो जाइ सबले ॥१४॥
जसोरी जित् हाम्रो हुन सकछ सोही रित गरी ।
रिपूको साथ् लड्नू सकल विरले बाण्हरु छरी ॥
यती आज्ञा पाई विरहरु सबै कम्मर कसी ।
गए लड्नैलाई रिपुहृदयमा बाण्हरु धसी ॥१५॥

तो वीर गै वीरमणी फउज्का ।
साथ् लड्न थाले दिइ खूब धक्का ॥
तर्वार बाण् खड्ग अनेक् प्रकार्ले ।
बर्साउँ दै सब्कन मार्न थाले ॥१६॥
हात्ती र घोडा विरहेरु धेर ।
मर्दामहाँ भल् रगतै बगेर ॥
खोलो ठुलो वीरमणी फउज्मा ।
खुब् बग्न थाल्यो भइ रक्त जम्मा ॥१७॥
यस्ता तवर्ले रिपु सैन्यलाई ।
सेना ति शत्रुघ्नजिको रिसाई ॥
लागे जसै छिन्न र भिन्न गर्न ।
भागे ति सेना नसकेर अड्न ॥१८॥

सुनेर आफ्नो सब सैन्य नाश ।
आए रणैमा हय चार खाश ॥
देखेर रुक्माङ्गदलाइ रण्मा ।
पुष्कल्जि आए चढि रथ्-उपर्मा ॥१९॥
साम्नेमहाँ पुष्कललाइ देखी ।
त्यो भन्न थाल्यो गरि घेर सेखी ॥
हे वीर ! पुष्कल् म सँगै लडेर ।
देख्छस् यमैको सहरै मरेर ॥२०॥
मेरा सँगै लड्न भनी समर्मा ।
आइस् फसी बालक काल-पाश्मा ॥
यै बीचमा पुष्कलजी रिसाई ।
छोडे अनेकन् शर छाति ताकी ॥२१॥
दश् बाण रुक्माङ्गदले समाई ।
छोड्यो म मार्छू भनि ताकि ताकी ॥
पुष्कल्जिले दश् शरलाइ छोडे ।
रथ् चूर्ण रुक्माङ्गदको गराए ॥२२॥
चार् वाणले चार् हयलाइ मारे ।
दुइ वाणले सारथि ध्वस्त पारे ॥
एक् वाण छोडेर ध्वजा गिराए ।
शर् एक रुक्माङ्गदलाइ हाने ॥२३॥
रथ् एक रुक्माङ्गदले मगाई ।
चढेर आयो रण गर्नलाई ॥

भन्छन् ति रुक्मांगद वीर फेर ।
पुष्कल्जिलाई गरि सेखि धेर ॥२४॥
हे वीर खुब् वीर म छू भनेर ।
ऐले नगम्के मनमित्र हेर ॥
बाण एक तिम्रो रथलाइ हानी ।
आकाशमा फ्याँकिदिनेछु तानी ॥२५॥
हौ वीर ता वीर बनेर बाल !
आफ्नू रथैलाइ तिमी समाल ॥
येती भनी भ्रामक अस्त्र वाण्मा ।
राखेर छोडे विर पुष्कलैमा ॥२६॥
त्यो अस्त्रले रथ्कन खुब् उड़ाई ।
लिएर आकाशमहाँ घुमाई ॥
छोडीदियो भूमिमहाँ पऱ्यो रथ् ।
फेर् घुम्न लाग्यो जिमिमा त हत्पत् ॥२७॥
पुष्कल्जिले रथ्कन ठाउँमाहाँ ।
ल्याए बलैले गरि यत्न ताहाँ ॥
फेरी ति पुष्कल् पनि खुप् रिसाई ।
भन्छन् ति रुक्मांगद वीरलाई ॥२८॥
क्याबात खूब बलवान तिमी रहेछौ ।
स्वर्गैविषे बसन योग्य बनी सकेछौ ॥
यस्ता बली विर भएर धरातलमा ।
बस्नू कदापि ठिक छैन परी विपत्मा ॥२९॥

यस्ता लडाकि चतुरा विर इन्द्रलाई ।
काम् लाग्दछन् बखतमा रिपु मार्नलाई ॥
तिम्रा धरातलमहाँ सब छन् अजोडी ।
देखी तिमीकन सबै जन मूख मोड़ी ॥३०॥
भाग्छन् म देख्तिनँ कुनै तिमिलाई जोड़ा ।
जोडा सुरेन्द्रपुर भित्र हुनन् ति थोड़ा ॥
श्रीइन्द्रका समितिमा झट गै महान ।
शोभा बढ़ाउ भइ वाक्‌पतिले समान ॥३१॥
जाऊ बनेर सुरसुन्दरिका वरेण्य ।
स्वर्गैंमहाँ रहनु हे विर अग्रगण्य !!
सब् श्रेष्ठ वस्तु सुरपूरमहाँ छ ठीक ।
वीर् एक् नभै हरबखत् छन इन्द्र दीक ॥३२॥
जाऊ तिमी गर पुरा अब त्यो अपूग ।
श्रीइन्द्रजीकन त खुशि गराउ खूप ॥
फेरी असह्य जिमिलाई भएर भार ।
डुब्छिन् कि क्या भनि म दुःखित छू अपार ॥३३॥
तेस् हेतुले म तिमिलाइ सुरेन्द्र पुर्मा ।
भेज्छू सहेर बस थीर भएर रथ्मा ॥
येती भनी धनुषमा शर एक चढाई ।
छोडे ति पुष्कलजिले अधिकै रिसाई ॥३४॥
त्यो बाण लागि रथ सारथि अश्व साथ्मा ।
रुक्माङ्गदै त रणबाट पुगे गगन्मा ॥

चन्द्रादि लोककन नाघि पुगे ति फेर ।
श्रीसूर्यलोक नगिचै पुगनै गएर ॥३५॥
श्रीसूर्यको किरणले रथ-सूत-घोडा ।
भस्मै भई फगत भस्म गिऱ्या नि थोडा ॥
रुक्मांगदै विर त आयु बचेर शेष ।
जल्दै फिरे रणमहाँ अति भै विशेष ॥३६॥
मूर्छा भए नृपकुमार परेर पीर ।
भागे डराइ जति थे तिनितर्फ वीर ॥
पुष्कल्जिले विजय आफ्नु गरेर धेर ।
रणमै थिए सबतिरै गरि हेरफेर ॥३७॥
मूर्छित् सुनेर सुतलाइ परेर पीर ।
आए ति वीरमणि वीर त युद्धतीर ॥
देखेर पुष्कलकनै जितनै त मुश्किल् ।
रणमा मरे बहुत शूर भएर दाखिल् ॥३८॥
आईकनै समरमा अधिकै रिसाई ।
डाके ति पुष्कलकनै रण गर्नलाई ॥
देखेर वीरमणिलाइ रणस्थलीमा ।
आए म लड्छु भनि फेर् हनुमान ताहाँ ॥३९॥
तिन्लाइ देखिकन पुष्कल वीर फेरि ।
भन्छन् कपीश विरका मुखतर्फ हेरी ॥
हे वानरेन्द्र ! किन लड् न भनी समरमा ।
पाल्नूभयो प्रतिनिधी म छँदै छु याहाँ ॥४०॥

सारा त्रिलोकभरमा जति शूर वीर् छन् ।
साम्नेमहाँ त जसको मुसुनै ति बन्छन् ॥
जस्ले त्रिलोकजयि रावणको तमाम ।
क्षणमा जलाइ पुर पारिदियो विकाम ॥४१॥
जस्ले अलीकति जडीबुटि चाहिंदामा ।
द्रोणाचलैकन उठाइ लियो भुजैमा ॥
गर्जन् सुनेर जसको रणभूमिमाहाँ ।
बन्छन् रिपुस्त्रिहरु धेर् विधवा घरैमा ॥४२॥
उस्ता प्रतापि रणशूर हजूर आज ।
रणमा अगाडि बढ्नू क्यहि छैन काज ॥
यो पाजि वीरमणिलाइ गराइ घाँजी ।
बाबाजिलाइ अहिल्यै म त पार्छु राजी ॥४३॥
रामको कृपाबल क्यही परदा अपार ।
संसार सागर तरेर मनुष्य पार ॥
पुग्छन् भने म त सदा रघुनाथलाई ।
राखेर यो हृदयमा प्रभुकै भलाइ ॥४४॥
चाहन्छु गर्न कसरी म रणाब्धिदेखि ।
पार् हुन सक्तिनँ भनूँ नगरेर सेखी ॥
शत्रुघ्नका नगिच जाइ तपाइँ ऐले ।
बस्नोस् समस्त रिपुलाइ त मार्छु मैले ॥४५॥
सारा रिपुस्त्रिहरुका बहि अश्रु-धारा ।
पार्ला रणस्थलकनै अहिल्यै गुजारा ॥

यो जोसिलो वचन पुष्कलको सुनेर ।
भन्छन् गुनेर हनुमान् विर बात धेर ॥४६॥
हे बाबु पुष्कल ! सुकोमल यो शरीर ।
तिम्रो नजर् गरि मलाइ बहूत पीर ॥
मन्भित्र पर्छ कसरी तिमिलाइ रणमा ।
एक्लै म छोडुँ लड लौ भनि वैरि सङ्मा ॥४७॥
छौ बालकै तिमि त वीरमणी बुढो छ ।
शस्त्रास्त्रका विषयमा उ अती निपुण् छ ॥
जस्ले भिडेर रणमा नभई हताश ।
पाऱ्यो पटक्-पटकमा रिपुको विनाश ॥४८॥
जस्ले रिझाइ शिवलाइ गरी वशैमा ।
राख्यो बनाइकन रक्षक आफ्नु पुर्मा ॥
उस्तो अतीव बलवान् नृप त्यो छ जान ।
तेस्को समीप लड्नू तिमि ख्याल् नठान ॥४९॥
तस्मात् तिमी अरु सँगै गइ लड्नु बाबू !
राजाकनै म त बनाउँछु आज काबू ॥
यस्तो सुनेर हनुमानजिका त बात ।
भन्छन् ति पुष्कलजि फेरि जुटाइ हात ॥५०॥
हे वायु-पुत्र ! म त शंकर आइ खाश ।
लड्छन् भने पनि म लड्छु महेशपास ॥
तस्मात् तपाइँ अरुका सँग लड्नुहोस ।
यसबाजि पाजिसित लड्न नरोक्नुहोस ॥५१॥

यस्तो सुनी वचन वायुकुमार फर्कें ।
पुष्कलजि वीरमणिका सँग लड्न पौंचे ॥
देखेर पुष्कलकनै रण गर्नलाई ।
साम्ने तयार भइ वीरमणी रिसाई ॥५२॥
भन्छन् अहो मसित लड्न भनेर-बच्चा ।
आयौ विचार नगरी भइ बुद्धि कच्चा ॥
हे बाबु फर्किकन जा घरमा अहीले ।
बालक् सँगै कसरि लड्नु हरे ! मईले ॥५३॥
मेरो सुपुत्रकन यै रणबीचमाहाँ ।
मूर्छा गरिस् तइपनी शिशुका उपर्मा ॥
राख्तीनँ रीस म त कत्ति भनेर बाल ।
जोगाउनू पनि पऱ्यो सब लोक-गाल ॥५४॥
यस्तो ति वीरमणिको सुनि बात सारा ।
भन्छन् ति पुष्कल तहाँ छरि बाण-धारा ॥
हे वीर ! क्षत्रिहरुमा त उमेर वृद्ध ।
मानिन्न वृद्ध कहिल्यै यहि नै छ सिद्ध ॥५५॥
जो जितछ शत्रुकन सोहि भनिन्छ वृद्ध ।
लाछी बुढोकन सधैं तिमि जान गिद्ध ॥
येती भनेर धनुमा बिस वाण् चढाई ।
हाने ति पुष्कलजिले पनि भूपलाई ॥५६॥
लागे जसै शरहरू सब छातिमाहाँ ।
क्यै बेर् सहेर नृपले तिन बाण ताहाँ ॥

छोडे ति पुष्कलकनै धनु खूब तानी ।
पुष्कल्जिले सकल काटिदिए नमानी ॥५७॥
फेरी ति पुष्कलजिले सय बाण ताहाँ ।
छोडे ति वीरमणिलाइ रणस्थलैमा ॥
ती बाण लागि नृपको रथ चूर्ण भैगो ।
कोच्वान् पनी हय सँगै यमपूर गैगो ॥५८॥
क्यै वाण लागि नृपको सब अङ्गद्वार ।
धारा छुट्यो रगतको बिझि वाण सारा ॥
अर्को चढेर रथमा नृपले त फेरि ।
भन्छन् त पुष्कलकनै मुखतर्फ हेरी ॥५९॥
ठूलो पराक्रम गरीकन बाबु ऐले ।
पाऱ्यौ मलाइ विरथी रणबीच तिम्ले ॥
यस्को म खिल्लत तिमीकन वीर जानी ।
दिन्छू ग्रहण् गर म वीर रहेंछु ठानी ॥६०॥
येती बकेर नृपले दश वाण छोडे ।
पुष्कल्जिले शर छरी सब चट्ट तोडे ॥
यै रीतले ति दुइको रणभूमिमाहाँ ।
संग्राम भो अति भयानक देख्नमाहाँ ॥६१॥
हात्ती र अश्व विरहेरु बहुत मर्दा ।
खोलो बग्यो रगतको भइ धेर गर्दा ॥
भूत् प्रेत् पिचाश अनि डाकिनिहेरु धेर ।
नाच्थे रणस्थलमहाँ रगतै पिएर ॥६२॥

ब्वाँसा शृगाल चितुवा अनि गिद्ध ताहाँ ।
खाएर मासु भइ मत्त फिरे समर्मा ॥
देखेर युद्ध घनघोर ति दुइ वीर्को ।
कातर्हरू गिरदथे सब छोडि शर्को ॥६३॥
यै बीच वीरमणिले शर छोड़ि धेर ।
बाणको बनाइ पिजरा त्यसभित्र फेर ॥
थूने ति पुष्कलकनै नृपले जसै ता ।
रामको स्मरण् गरि ति पुष्कलले तसै ता ॥६४॥
त्यो पिञ्जराकन टुटाइ नृपाललाई ।
थूने बनाइ अरको पिजरा रिसाई ॥
दिन्छन् ति पुष्कलजिले नृपलाइ हाँक ।
बूढो म छू भनि अघी गरथ्यौ नि धाक ॥६५॥
तीन् बाण छोड़िकन रणबिच तीमिलाई ।
मूर्छा गराउन सकीनँ भने मलाई ॥
लागोस पाप जुन काशिमहाँ गएर ।
गंगाजिमा गइ नन्वाइ सयल् गरेर ॥६६॥
फिदो हुने सकल पाप यती भनेर ।
एक् बाण पुष्कलजिले धनुमा धरेर ॥
छोडे जसै विरमणी पनि खूब् रिसाई ।
काटे छ बाण छरि पुष्कल-बाणलाई ॥६७॥
अर्को प्रहार शर पुष्कलले गरे झट् ।
त्यस्लाइ वीरमणिले पनि काट्दिए चट् ॥

आफ्ना दुई शर बिकाम् रिपुले गरेको ।
देखेर दिक्क भइ ध्यान सितापतीको ॥६८॥
क्यै बेर् गरीकन त पुष्कलले त फेरि !
तेस्रो शरैकन छरे नगरेर देरी ॥
त्यो बाणले नृपतिको हृदयै बिदार्‍यो ।
मूर्छा भई नृप गिरे सब छक्क पार्‍यो ॥६९॥
मूर्छित् भई जब गिरे रणमा नृपाल ।
भागे सबै नृपति-सैन्य तजेर ढाल ॥
पुष्कल्जिले जय भयो भनि शङ्ख फूके ।
दुःखित् नृपाल फउजे पुरतर्फ लम्के ॥७०॥

पुष्कल्देखि बिदा भएर हनुमान् * वीर् सिंहका साथ् गई ।
भन्छन् हे विरसिंह ! लड्न मसँगै * लौ आ अगाडी सरी ॥
यो बात् श्रीहनुमानका सुनिसकी * वीर्सिंह रथ्मा चढी ।
आए लड्न भनेर वायु-सुतका * साथ्मा अती रिस् गरी ॥७१॥
दश् वाण् श्रीहनुमानलाइ बलले * ठोकेर छातीमहाँ ।
गर्ज्यो खुप् म सरी लडाकि चतुरा * छैनन् भनी रण्महाँ ॥
त्यस्को गर्जनलाइ सूनि हनुमान् * वीर्ले मुठी खुप् कसी ।
ठोक्याथ्या जब वीरसिंह विर ता * मूर्छ्यौ जिमीन्मा खसी ॥७२॥
देखी मूर्छित वीरसिंहकन ता * रुक्माङ्गदै वीर पनि ।
आयो रीस गरेर वायुसुतका * साथ्मा म लड्छू भनी ॥
मूर्छा खुल्न गयो र पुष्कलकनै * साम्ने नदेखीकन ।
रुक्मांगद् विर वायुपुत्रसित नै * लाग्यो गई भीडन ॥७३॥

रुक्मांगद् र शुभांगदैकन अघी * देखी हनूमानले ।
पुच्छर्ले रथलाइ बेहि दुइको * तान्या बडा जोरले ॥
पट्क्या भूमिमहाँ जसै रथ दुई * घोड़ा सहित् चूर् भए ।
रुक्मांगद् र शुभांगदै दुइ जना * चोट् लागि मूर्छित् भए ७४

यै बीचमा असल एक चढी रथैमा ।
देखेर भक्तहरुलाइ दुखी रणैमा ॥
आफ्ना सबै गणहरूकन साथमा ली ।
पाल्नूभयो शिवजि सैन्य सबै समाली ॥७५॥
यस्तै प्रकारसँग वीरहरू भएर ।
भीडे सबै विजयको गरि आश धेर ॥
कान्तीमती-पति पनी विरभद्रलाई ।
देखी अगाडि रणमा उनितर्फ जाई ॥७६॥
हाने पचास शर खूब धनू खिंचेर ।
लागे ति वाण विरभद्रकनै गएर ॥
बीझे जसै शर अनेक शरीरमाहाँ ।
रिस्ले भएर चुर एक त्रिशूल हात्मा ॥७७॥
लीए जसै ति विरभद्रजिले रिसाई ।
पुष्कल्जिले छिनिदिए शर एक छोड़ी ॥
काटी त्रिशूलकन खूब गरेर सोर ।
गर्जे ति पुष्कलजि ता रणमा अधीर ॥७८॥
पुष्कल्जिको अति ठुलो गरजन् सुनेर ।
श्रीवीरभद्र विरले पनि रिस् गरेर ॥

रथ् चूर्ण पुष्कलजिको झटपट् गराइ ।
फेर्-बाहु युद्ध गरनाकन लागि जाई ॥७९॥
पुष्कल्जिले झट् रथलाइ त्यागी ।
मुड्की बजारे विरभद्रलाई ॥
यै रीतले ती दुइ वीर् रिसाई ।
खुप् भिड्न थाले जिमि डग्मगाई ॥८०॥
अन्योन्यमा मुड्कि दुई बजार्थे ।
कैले उठाईकन लात्ति हान्थे ॥
कैले घुँडाले बलले ति हान्थे ।
साह्रै रिसाईकन टोक्न थाल्थे ॥८१॥
यस्ता प्रकार्ले दिन चार रात ।
लड्थे ति पुष्कल् विरभद्रसाथ ॥
पाचौं दिनैमा विरभद्रजीले ।
पक्रेर पुष्कल्कन खूब जोर्ले ॥८२॥
आकाशमा पौंचि बडा चतुर् भै ।
ती लड्न लागे रिसले चरा झैं ॥
यै बीचमा पुष्कलले रिसाई ।
वीर्भद्रको घाँटिमहाँ समाई ॥८३॥
पट्के जसै भूमिमहाँ ति वीर-
भद्रैकनै पर्न गयो र पीर ॥
तिन्ले पनी पाउमहाँ समाई ।
पटके जिमीमा अधिकै रिसाई ॥८४॥

फेरी ति पुष्कल् विरको त शीर ।
काटे त्रिशूल्ले नगरेर देर ॥
त्यो पूर्णिमाका शशिले समान ।
उज्ज्वल् कीरीट् कुण्डलले महान ॥८५॥
गिऱ्यो जमीन्मा जब रम्य शीर्ष ।
वीर्भद्र गर्जन् भइ खुप् सहर्ष ॥
यस्तो भयानक् गरजन् सुनेर ।
काँप्यो रणस्थल् डरमा परेर ॥८६॥
पुष्कल् तरफ्का सब फौजमाहाँ ।
हाहा अवाज् खुब् हुनगो नि ताहाँ ॥
क्वै फौज शत्रुघ्नकहाँ गएर ।
विस्तार् बताए अति शोक् गरेर ॥८७॥
पुष्कल्जिको रणमहाँ विरभद्रद्वारा ।
सुन्दा मरण् नयनदेखि त अश्रुधारा ॥
शोकाकुलै भइ बढ्यो जिउमा अधीर ।
शत्रुघ्नलाइ हुनगो नि अतीव पीर ॥८८॥
शत्रुघ्नलाइ सुतनाश सुनेर खिन्न ।
शोकाकुलै शरिरमा पनि कान्तिहीन ॥
देखेर शोककन नाशन-कामनाले ।
छेड्छाडका वचन शङ्कर भन्न थाले ॥८९॥
शत्रुघ्नजी ! किन अहो ! तिमि शोक गर्छौ ।
व्यर्थैमहाँ किन रणोद्यमलाइ छोड्छौ ॥

रणमा मरण् हुनु त भाग्य ठुलो गनिन्छ ।
शोक् गर्नु रण बिचमहाँ अनुचित् कहिन्छ ॥६०॥
पुष्कल्जि धन्य बलवान अती रहेछन् ।
वीरभद्र सङ् जुन लडे दिन पाँचसम्मन् ॥
सायुज्य मुक्ति पदलाइ गरेर प्राप्त ।
देहै तजे गरनु शोक छ खालि व्यर्थ ॥६१॥
ती ता सदाकन बिदा लिइ यो अपार ।
संसार-सागरकनै त गरेर पार ॥
नाता छुटाइ सबदेखि पुगे ति धाम ।
रून् कराउनु म ठान्दछु है विकाम ॥६२॥
ताकत् छ ता मसँग लड्न भनेर आऊ ।
नाहीं भने हय तजेर फिरेर जाऊ ॥
लड्छौं भनेर घरदेखि दिएर हाँक ।
आयौ बनाउ सब आफनु सत्य धाक ॥६३॥
यस्ता कडा वचन शङ्करको सुनेर ।
त्यागेर शोककन कोप गरेर धेर ॥
शत्रुघ्नले जब छरे अनि बाण-धारा ।
ढाके ति बाणहरुले रणभूमि सारा ॥६४॥
फेरी सदाशिवजिले सब बाण काटी ।
छोडे अनेक शर मार्छु भनेर आँटी ॥
शत्रुघ्नको र शिवको दिन ग्यारसम्म ।
संग्राम् भयो शर छरी रण पारि टम्म ॥६५॥

एघार दिन्तक कुनै नभई हताश ।
लड्थे दुवै जन फउज्कन पारि नाश ॥
शत्रुघ्नको र शिवको रणको बयान ।
के गर्नु ! छैन उपमा यसले समान ॥९६॥
सारा जगत् प्रलयकारक धूर्जटीको ।
संग्राम् बयान गरनू छ अपार् मतीको ॥
एघार दीन पुगि बारह दीन लाग्यो ।
शत्रुघ्नको मनमहाँ रिस धेर जाग्यो ॥९७॥
शत्रुघ्नले रिस अतीव गरेर फेरि ।
मार्छू भनेर शिवको मुखतर्फ हेरी ॥
ब्रह्मास्त्र मन्त्र पढि धेर गरे प्रहार ।
त्यो देखि शङ्करजिले पनि त्यै प्रहार ॥९८॥
गर्नूभयो अनि गगन् बिचमा उडेर ।
ब्रह्मास्त्र छल्दिनुभयो अति वीर् बनेर ॥
ब्रह्मास्त्रको विफल देखि अतीव पक्क ।
शत्रुघ्नजी हुनुभयो मन भित्र दिक्क ॥९९॥
शत्रुघ्नको हृदयमा यहि बीचमाहाँ ।
छोड्नूभयो शिवजिले शर एक ताहाँ ॥
बज्र्यो जसै हृदयमा शर वज्र तुल्य ।
शत्रुघ्नजी गिरनुभो उड़ि होस् अमूल्य ॥८००॥
मूर्छा परेर जब गिर्नुभयो महान ।
हूँदो भयो समर-मण्डल कम्पमान ॥

राजा सुबाहु दमनादि अनेक सैन्य ।
मूर्छित् भए मनमहाँ लिइ फेर दैन्य ॥१॥
देखेर सैन्य सब मूर्छित युद्धमाहाँ ।
राखेर पुष्कलकनै रथका उपर्मा ॥
मार्छू भनेर शिवलाइ उठ्यो र रीस ।
आए कपीश विर लड्न धरेर खीश ॥२॥
आई सरासर महेशजिका अगाडि ।
थाले नि भन्न हनुमान् भयलाइ छाडी ॥
गौरीपते ! अघि थिएँ मइँले सुनेको ।
वर्णन् सितापतिविषे शिवभक्तिताको ॥३॥
शत्रुघ्न–पुष्कलकनै रणमा गिराई ।
त्यो बात् असत्य तिमिले त लियौ गराई ॥
भन्छन् तिमीकन सबै जन रामभक्त ।
देखी सदैव रघुनाथ—हित—प्रवृत्त ॥४॥
त्यो बातलाइ तिमिले नगरेर ख्याल ।
लाग्यौ रमेश हय रोकन तर्फ हाल ॥
श्रीरामचन्द्र प्रभुको अहितै प्रवृत्त ।
खाली स्वभक्त हित-खातिर दत्तचित्त ॥५॥
स्वस्वामिवञ्चक कृतघ्न अति प्रचण्ड ।
नीमक् हराम तिमिलाइ म दिन्छु दण्ड ॥
खाली तिमी भइदिंदा रणमा कृतघ्न ।
हाम्रा सबै विर भए समराब्धि मग्न ॥६॥

आफ्नू बचाउ गर राघवभक्ति हीन !
जस्तो गरेर सकियोस् रणमा अडीन ॥
येती भनीकन तयार भई समर्मा ।
ठोके ठुलो लिइ शिला रथका उपर्मा ॥७॥
बज्र्यो गई शिवजिको रथ खण्डखण्ड ।
हूँदो भयो अति प्रचण्ड मिलेर दण्ड ॥
यस्तो भयंकर ठुलो हनुमान-काज ।
देखेर दङ्ग हुनगो सुरको समाज ॥८॥
देखी सदाशिवकनै विरथी समर्मा ।
आए म बोक्छु भनि नन्दि त भीमकर्मा ॥
देखेर नन्दि त उपस्थित-शम्भुलाई ।
हाने कपीश विरले रुख एक् उठाई ॥६॥
खाएर चोट शिवले रुखको महान ।
लीनूभयो त्रिशुल एक् अनलै समान ॥
जाज्वल्यमान शिवमुक्त त्रिशूल देखी ।
भाँचीदिए तिल समान समाइ हेपी ॥१०॥
फेरी सदाशिवजिले लिइ एक शक्ति ।
छोडे कपीश उपरै तजि रामभक्ति ॥
लागेर शक्ति हनुमान भए ति मूर्छा ।
हूँदो भयो शिवजिको पनि पूर्ण इच्छा ॥११॥
मूर्छा खुल्यो जब त श्रीहनुमानजीले ।
ल्याएर एक रुख हाननुभो बलैले ॥

त्यो चोट् सहेर शिवले हनुमानलाई ।
भन्नूभयो मुसल एक् करले समाई ॥१२॥
संग्रामदेखि बचनै छ भने त आश ।
भागेर जाउ हनुमान्! रघुनाथ-पास ॥
हर्नेछ यो मुसलले तिमरो त प्राण ।
जानीलिनू मुसललाइ कृतान्त बाण ॥१३॥
लाएर यो शिवजिले मुखबाट धाक ।
छोडीदिए मुसल पाछु भनेर खाक ॥
विद्युत् समान् मुसललाइ अगाडि देखी ।
आकाशमा कुदि छले सब छोडि सेखी ॥१४॥
रोक्ने कुनै चिज नभैकन भूमि छेडी ।
पातालमा मुसल गो नगरेर देरी ॥
फेरी रिसाइ हनुमानजिले अनेकन् ।
गर्थे शिला रुखहरु शिवमाथि वर्षण् ॥१५॥
तिन्लाइ काटिकन फेर् दश बाण ताहाँ ।
छोड्नूभयो शिवजिले हनुमानमाहाँ ॥
ती बाणलाइ बिचमै पकडेर फेरि ।
भाँचे कपीश्वरजिले नगरेर देरी ॥१६॥
फेरी शिला रुख र पर्वतहेरु घेर ।
थाले गिराउन रणस्थलमा अडेर ॥
ठूलो ठुटो लिइ सदाशिवशीर्षमाहाँ ।
हान्दा जटाहरु गिरे सब भूमिमाहाँ ॥१७॥

पर्दा बहुत पिर त्यो शिर बीचमाहाँ ।
श्रीचन्द्रजी गिरिगए शिरबाट ताहाँ ॥
बेहेर नन्दिकन पुच्छरले त पट्ट ।
झट्ले शिला उपरमा बल सीत झट्ट ॥१८॥
यस्तो भयानक पराक्रम ती विरैको ।
देखेर दंग हुनगो मन शंकरैको ॥
संतुष्ट भै मनमहाँ अतिहर्ष-साथ ।
भन्नूभयो शिवजिले त उठाइ हात ॥१९॥
लौ हे कपीश ! पवनात्मज आञ्जनेय ।
यो घोर चाल त समाल भयो अजेय ॥
तिम्रो पराक्रम नजर् गरि आज तुष्ट ।
हूँदो भएँ अब म हुन्न कदापि रुष्ट ॥२०॥
मन् चाहिंदो वर तिमी अब माग कीश ।
तिम्रो उपर् छइन कत्ति मलाइ खीश ॥
यस्तो मधुर् सुनिसकी शिवको त बात ।
भन्छन् ति वीर हनुमान जुटाइ हात ॥२१॥
श्रीरामको अपरिमेय कृपा हुँदामा ।
सम्पूर्ण वस्तु छ तयार मलाइ याहाँ ॥
क्यै छैन माग्नु परने चिज आज मैले ।
संग्रामतुष्ट तिमिदेखि तथापि ऐले ॥२२॥
यौटा म माग्छु वरदान हजूबाट ।
इच्छा भए यदि दिने गरनोस आँट ॥

हाम्रा जती विर मरे बरु यीनितर्फ ।
दृष्टी दिनोस प्रभुले हित संझि सिर्फ ॥२३॥
ऐले म द्रोणगिरिमा गइ इन्द्रलाई ।
जीतेर धेर बुटिहेरु लिएर आई ॥
सब्लाइ त्यो बुटि सुँघाइ जियाइ शर्व !
तोडीदिनेछु सहसा रिपुवर्गगर्व ॥२४॥
द्रोणाद्रिबाट जडिबूटि लि आउँदामा ।
लाग्नेछ जो समय लौ उति बेर याहाँ ॥
हाम्रा सबै फउजमाथि लगाइ दृष्टि ।
रक्षा हओस् नगरि शंकर ! बाण-वृष्टि ॥२५॥
भूत् प्रेत् पिशाच अरु डाकिनि फेर् शृगाल ।
कुक्कूर, गिद्धहरुबाट जसोरि हाल ॥
हाम्रा इ सैन्यहरुको क्यहि अङ्गभङ्ग ।
हूँदैन त्यै गरिदिनोस् अब हे वृषाङ्क ॥२६॥
येती सुनीकन तहाँ हनुमान वाणी ।
रक्षा म गर्छु भनी भन्छन शूलपाणि ॥
जाऊ कपीश ! लिइ आउ बुटी हजारा ।
गर्नेछु रक्षण अवश्य म सैन्य सारा ॥२७॥
यो बात श्रीशिवजिको कपिले सुनेर ।
द्रोणाद्रिमा पुगिगए झटपट् कुदेर ॥
बेहेर द्रोणकन पुच्छरले बलैले ।
थाले उखेल्न हनुमान बडो जतन्ले ॥२८॥

लागे उखेल्न जब पुच्छरले समाई ।
काँप्यो समस्त गिरिमण्डल डग्मगाई ॥
देखेर पर्वतकनै अति कम्पमान ।
गन्धर्व–देवहरु ता सब छोडि गान ॥२९॥
के हो भनी अति डरायर देवताले ।
द्रोणाद्रिको हल्लिनु कारण खोज्न थाले ॥
क्वै एक वानर त लौ निजपुच्छमाहाँ ।
पर्वत् धरीकन तयार छ उड्नमाहाँ ॥३०॥
देखेर सब् मिलिजुली गरि रिस् अपार ।
हूँदा भए लडनमा सब ती तयार ॥
लौ मार मार भनि बाण गरेर वृष्टि ।
थाले ति लड्न हनुमान्तिर लाइ दृष्टि ॥३१॥
आफ्ना उपर् शर प्रहार तयार गर्न ।
देखेर देवहरुलाइ नलागि डर्न ॥
क्वैलाइ मुड्कि धसि कैकन लात हानी ।
मारे कुनैकन त पुच्छरबाट तानी ॥३२॥
नङ्ले चिथोरि कतिलाइ धसेर दाँत ।
मारे सबै फुटन गो सुरको जमात ॥
घायल् भए कति मरे कति थे बिहोश ।
भागे कती रिसमहाँ परि धेर कोश ॥३३॥
कै देव गैकन त इन्द्रजिका अगाडि ।
थाले इ बात कहनाकन खप्प कराई ॥

हे देवराज ! करुणार्णव ! हे दयालो !
हे वीरकेशरि ! सुराधिप ! हे कृपालो ! ॥३४॥
क्वै एक वानर अतीव बलिष्ठ आई ।
थालेछ द्रोणगिरि लान उमेद् बढाई ॥
हामीहरू सकल गैकन रोकदामा ।
मान्यो समस्त सुरलाइ लडी विहक्मा ॥३५॥
हाम्रो कुनै पनि प्रभो नचलेर जोर ।
आईपुग्यौं शरणमा दुख पाइ घोर ॥
यस्तो वचन् सुनिसकीकन इन्द्र ताहाँ ।
भन्छन् बृहस्पतिजिका गइ सामुमाहाँ ॥३६॥
आएर बानर कुनै गिरि द्रोणमाहाँ ।
पारेछ खलबल ठुलो सबलाइ ताहाँ ॥
कुन् हो गिरिन्द्रसित के त्यसको छ काम ।
यो बात बताउनुहओस् गुरुजी ! तमाम ॥३७॥
श्रीइन्द्रको वचन यो सुनि वाक्पतीले ।
भन्नुभयो गरि विचार याथमतीले ॥
ऐल्हे सितापतिजिले हयमेध गर्दा ।
त्यै अश्वका विषयमा रण गर्नुपर्दा ॥३८॥
बाबू ! रहेछ कपि त्यो सुन रामजीको ।
लंकेशको नगर-दाहक त्यै अघीको ॥
संग्राममा बहुत सैन्य मरीदिनाले ।
उन्कै बचावटकनै गिरि लान थाले ॥३९॥

द्रोणाद्रि-साथ यिनको क्यहि छैन काम ।
खाली जरीबुटि सँगै यिनको छ काम ॥
जाऊ गएर "अमृता बुटि" खोज्न लाई ।
दीनू बूटी सब कपीशमहाँ चढाई ॥४०॥
यस्तो वचन् गुरुजिको सुनि इन्द्र जाई ।
द्रोणाचलै उपरमा बुटि खोज्न लाई ॥
ल्याएर बूटी हनुमानमहाँ चढ़ाए ।
आफ्ना समस्त अपराध क्षमा गराए ॥४१॥
श्रीइन्द्रजी चलनुभो जब आफ्नु धाम ।
फर्के कपीश पनि सिद्ध गरेर काम ॥
आएर त्यो समरमा शिवबाट रक्षित् ।
देख्ता भए सकल सैन्यकनै अखण्डित् ॥४२॥
लीएर मन्त्रिकन साथमहाँ समर्मा ।
जाँदा भए अनि त पुष्कल सामुमाहाँ ॥
पुष्कल्‌जिको शरिर माथ दुवै जुटाई ।
भन्छन् ति वीर हनुमान बुटी सुँघाई ॥४३॥
सच्चा म हूँ यदि सितापतिको त भक्त ।
पुष्कल् जिउन् सब शरीर भई दुरुस्त ॥
यै बीचमा रिस अधीक गरेर पुष्कल् ।
उठ्दा भए समरमण्डल पारि खल्बल् ॥४४॥
ख्वै वीरभद्र धनु ख्वै छ कता गिरीश ।
भन्दै उठे समरमा धरि खूब रीस ॥

शत्रुघ्नलाइ र सुबाहु ति भूपलाई ।
फेरी समस्त दमनादिक सैन्यलाई ॥४५॥
सोही बुटीकन सुँघाइ लिए जियाई ।
रामतर्फको कहि मरेन बुटी त पाई ॥
शत्रुघ्नहेरु सब वीर् चढि रथ् उपर्मा ।
बोलाइ शत्रुकन हाँक दिए समर्मा ॥४६॥
देखी सुसज्जित सबै रिपुसैन्यलाई ।
तैयार् भए विरमणीहरु लड्नलाई ॥
बाजा बजे दुइतिरै घनघोर सारा ।
वर्षा भए अब दुवैतिर बाणधारा ॥४७॥
श्रीवीरभद्रसित पुष्कल वीर जाई ।
भिड्दा भए समरमा अधिकै रिसाई ॥
राजा कपिध्वज भिडे गइ चण्ड-सीत ।
नन्दीसँगै भिडिगए हनुमानजी त ॥४८॥
भिड्दा भए गइकनै ति सुबाहु खाश ।
भृङ्गी-सँगै रणमहाँ नभई हताश ॥
यस्तै प्रकारसित सैन्य-समूह जाई ।
भीड्यो गएर रिपुका सँगमा रिसाई ॥४९॥
लौ हे गिरीश ! अब झट्ट अगाडि आऊ ।
मेरा इ बाणहरुको अब चोट खाऊ ॥
शत्रुघ्नजी यति भनीकन युद्धमाहाँ ।
बढ्दा भए जब रिसाइ अगाडि ताहाँ ॥५०॥

तिन्लाइ देखिकन शङ्करलाइ रोकी ।
आए ति वीरमणि लड्न अतीव झोकी ॥
शत्रुघ्नजी र अनि वीरमणी नृपाल ।
लड्दा भए समरमा नगरेर जाल ॥५१॥
शत्रुघ्नका रथ गजाश्व पदातिलाई ।
मारे ति वीरमणिले तिल झैं गराई ॥
देखेर वैरिहरुबाट स्वसैन्यनाश ।
पाऊँ भनेर रिपुको यमपूरवास ॥५२॥
आग्नेय अस्त्रकन हातमहाँ लिएर ।
छोडे रिपूउपरमा नगरेर देर ॥
आग्नेय अस्त्रकन देखि रिपु-प्रयुक्त ।
छोड्दा भए वरुण अस्त्र नृपालले त ॥५३॥
त्यो अस्त्रले अधिक पानि गरेर वर्षण् ।
जोडो भएर सब काप्न गयो र पल्टन् ॥
शीतार्त देखिकन आफ्नु सैन्यलाई ।
शत्रुघ्नले पवन अस्त्र छरे रिसाई ॥५४॥
त्यो अस्त्रले अधिक वायु चलेर घोर ।
थाल्यो फउज्कन उडाउन पारि सोर ॥
वायू चलेर सब मेघ फटाइदीयो ।
रण्मा अनेक विरको पनि प्राण लीयो ॥५५॥
देखेर वायु चलि फौज्हरुको विनाश ।
छोडे ति वीरमणिले पनि पर्वतास्त्र ॥

त्यो अस्त्रले फउजमाथि पहाड् गिराई ।
लाग्यो निभाउन अनेक् विरहेरुलाई ॥५६॥
पर्वत् गिरेर हुनगो जब वायु बन्द ।
लाग्यो बहूत विरको हुनलाइ अन्ध ॥
देखेर वीरमणिबाट प्रयुक्त अस्त्र ।
त्यस्को शमन् गरनलाइ त वज्र शस्त्र ॥५७॥
शत्रुघ्नले जब छरे अधिकै रिसाई ।
पर्वत् गिराइकन चूर्ण दियो गराई ॥
वज्रास्त्रको शमन गर्न भनेर फेरि ।
ब्रह्मास्त्रलाई नृपले नगरेर देरी ॥५८॥
छोड़े जसै तब त योगिनिले दिएको ।
त्यो अस्त्र सम्भनुभयो अति तेज् भएको ॥
त्यो मोहनास्त्रकन झट्ट लिएर हात्मा ।
शत्रुघ्नले छरिदिए पढ़ि मन्त्र रणमा ॥५९॥
ब्रह्मास्त्रको शमन पारि नृपाललाई ।
मूर्छा गरीकन दियो रणमा गिराई ॥
राजा गिरेपछि अरू पनि फौज धेर ।
मूर्छित भईकन गिरे झट पाइ पीर ॥६०॥
ताहाँ पछी शिवजि ता गरि क्रोध धेर ।
आए रणस्थलमहाँ अति बाण छरेर ॥
शत्रुघ्नले र शिवले विर धेर मारी ।
गर्दा भए समर घोर अनर्थकारी ॥६१॥

शत्रुघ्नका र शिवका सब अस्त्र शस्त्र ।
रणमा उडे बिजुलिकैं सरि यत्रतत्र ॥
रामको र रावण दुई विरको समान ।
संग्राम् तहाँ पनि भयो अधिकै महान ॥६२॥
शत्रुघ्नजी पनि लडीकन केहि बेर ।
साह्रै विकल् हुनुभयो नचलेर जोर ॥
शत्रुघ्नले भइ अशक्त अतीव ताहाँ ।
श्रीरामचन्द्रकन संझनुभो सम्मर्मा ॥६३॥
हे लोकनाथ ! रघुनाथ ! कृपानिधान !
सीतापते ! रघुपते ! सबका महान ॥
शक्तीनँ जित्न रण यो लड़ि शम्भुसाथ ।
साहाय गर्न अब पालनुहोस नाथ ॥६४॥
यै बीचमा नयन सुन्दर चारुवक्त्र ।
पैह्री कटी-तटमहाँ मृगचर्म वस्त्र ॥
आई खडा समरमा रघुनाथलाई ।
शत्रुघ्न देखिकन दङ्ग भए रमाई ॥६५॥
शत्रुघ्न पुष्कल सुबाहु कपीश वीर ।
लक्ष्मीनिधि सुमद फेर् दमनानि धेर ॥
ओर्लेर झट्ट रथदेखि चरण् समाई ।
गर्दा भए प्रणति श्री रघुनाथलाई ॥६६॥
श्रीरामलाइ रणमा रथदेखि देखी ।
पत्री गए चरणमा शिव छोडि सेखी ॥

छोरा सहित् विरमणीकन ढोग्न लाइ ।
लागे डराइकन शंकर भन्नलाई ॥६७॥
सारा चराचर जगत् रचना गरेर ।
पालन् पनी गरिदिया दिनहूँ गरेर ॥
संहार आखिर भएपछि एक मात्र ।
बाँकी हुने पुरुषको यहि हो सुगात्र ॥६८॥
यस्तो परेछ प्रभुले पनि मर्त्य तुल्य ।
पातक् कटाउँछु भनी मख यो अमूल्य ॥
गर्न हरे !!! अजब हो गरुँ के बयान ।
के निम्ति दुःख सहनू मखको महान ॥६९॥
गंगा भइन् नि जसको चरणै पखाली ।
ती शुद्ध सम्झि शिरमा म त राख्छु खालि ॥
तेस्ता अहो ! भुवन-पालक निर्विकार ।
योगी हुनू खुद म ठान्दछु लोकचार ॥७०॥
मैले गरें हजुरको रघुनाथ ! हानि ।
त्यो माफ पाउँ निजभक्त भनेर ठानी ॥
क्यारुँ कबोल गरुँ सत्य भनेर आज ।
मद्दत् दिएँ नृपतिलाइ पचाइ लाज ॥७१॥
ई भूपले अघि त उज्ज्जयिनी पुरीमा ।
कष्टै सही तप गरे नि दिएर सीमा ॥
त्यो देखि त्यै स्थलमहाँ वर दीन पौंचें ।
राज्यै ठुली विरमणी नृपले त मागे ॥७२॥

मैले भनें तब त राज्य अखण्ड होला ।
तिम्रो त देवपुरमा बहुतै अमोला ॥
जब्तक् सितेश प्रभुको हय आउँदैन ।
तब्तक् म यो नगर-रक्षण छोडदैन ॥७३॥
यस्तो हुँदा कबुल तेहि पुरी गराई ।
रण्मा घुमें म नृपकै गरदो भलाइ ॥
यस्तो सुनेर शिवको सब नम्र बात ।
श्रीरामले कहनुभो अनि पक्रि हात ॥७४॥
मद्दत् गऱ्यौ जउन लागि स्वभक्ततर्फ ।
यो दोष हैन बुझ शर्व ! गुणै छ सिर्फ ॥
त्यस्ले म व्यर्थ किन आज रिसाउथें लौ ।
त्यो आज केहि बढता तिमि बोलिहाल्यौ ॥७५॥
क्वै छैन है फरक हामि दुई जनामा ।
सृष्टी क्रमैकन त खूब विचारदामा ॥
जो भक्त भेद तिमिमा र ममा गरोस ।
त्यो कुम्भिपाकतिर कल्पतलक् परोस ॥७६॥
येती सुनी वचन रामजिको त वेश ।
खूशी अती हनुभयो र तहाँ गिरीश ॥
घोडा बुझाउ भनि ती नृपलाइ ताहाँ ।
आज्ञा पनी दिनुभयो रणमध्यमाहाँ ॥७७॥
सोहीमुताबिक ति वीरमणी नृपैले ।
घोडा बुझाउँछु भनी बहुतै खुशीले ॥

ल्याएर दौलत अती परिवार-साथ ।
अर्पण् गरे सकल नम्र गरेर माथ ॥७८॥
त्यस्का पछाडि मणिको रथमा बसेर ।
अर्ती दिएर सब सेवकलाइ धेर ॥
अन्तर्हिते हुनुभयो रघुनाथ झट्ट ।
आश्चर्य पारिकन सेवकमा बिछट्ट ॥७९॥
जाऊ पछाडि हयका गर रामसेवा ।
सीतेशको भइ कृपा मिलनेछ मेवा ॥
सल्लाह त्यो विरमणीकन यै दिएर ।
पाल्नूभयो शिवजि अन्तरधान् भएर ॥८०॥
घोड़ा फुक्यो अधिक चञ्चल वेगवाला ।
दौड़े ति वीरहरु कत्ति नफेरि चाला ॥
यो रामको चरित जो भइ दत्तचित्त ।
सुन्छन् ति बन्दछन मुक्तिपथ-प्रवृत्त ॥८१॥
अनिपछि घुमदै त्यो हेमकुट् पर्वतैमा ।
हय पनि पहुँचीगो वेगले क्वै दिनैमा ॥
जुन गिरिबरमाहाँ थ्यो बघैंचा विचित्र ।
फलफुलहरु धेरै थे तयार् तेसभित्र ॥८२॥
कटहर खजुरी भो आँप अम्बा तमाल ।
बड़हर क्वइराली राजवृत्तै र साल ॥
मयनफल अनार् भो मौल्सरी बेल बल्ली ।
चिउरि कनक चम्पा फेरि चोभी चमेली ॥८३॥

अरु यहि किसिमैका फूलहेरू तमाम ।
उपवनबिच जो थे लेख्न सकिन्न नाम ॥
रुख-रुख बसि पत्तीहेरु बास्थे अनेकन् ।
भ्रमर फुलहरूमा गर्दथे रम्य गुञ्जन् ॥८४॥
जब उपवनमाहाँ वेगले अश्व घूस्यो ।
हल न चल भएरै देखियो ऊभिएको ॥
बलसित हयलाई जोरलै कुट्न थाले ।
सयसहरु रिसाई तै बडा कोरुवाले ॥८५॥
तइपनि सब उद्योग् आफ्नू व्यर्थ देखी ।
खबर नृपतिछेऊ गर्दिए छोडि सेखी ॥
तब तहिं पुगि झट्टै वीर शत्रुघ्न फेरि ।
अति दङ परिहाले अश्वको हाल हेरी ॥८६॥
पलटन सब आफ्नो पक्क देखेर फेरि ।
वरपरतिर हेरी क्यै नलाएर देरी ॥
हयकन दुइतर्फै पक्रि पारे जुरुक्क ।
तर पनि हय चल्दो भैन है त्यो सुरुक्क ॥८७॥
तब त अति रिसाई फेर् हनूमानजीले ।
फनफन दिइ फन्का पुच्छरैले बलैले ॥
जसतस गरि तान्दा कत्ति पत्ता नलागी ।
नगिच पहुँचि भन्छन् वीर शत्रुघ्नलाई ॥८८॥
नृपवर ! म हतोद्यम् भैगएँ क्यारुँ ! आज ।
गवड गरि विचार्दा मन्मनै हुन्छ लाज ॥

अर्जुन पुछ्रैले द्रोण पर्वत् उठाएँ ।
उहि म हय नडग्दा बल् गरी हार खाएँ ॥८९॥
यति सुनि सुमतीथ्यैं फेरि शत्रुघ्नजीले ।
मन गरनुपऱ्यो के यति सोधें करैले ॥
अनि तब सुमतीले भन्दछन् योग्य बात ।
नृपति सित खुशीले चट्ट जोडेर हात ॥९०॥
म त मन मन ठान्छू देशकै यो छ दोष ।
बरु अब त उपायै तेसको नै हओस ॥
यति भनि दुइ चारै सेवकै ली सँगैमा ।
सुमति त चलिहाले बेखबर् वन्वनैमा ॥९१॥
कहि मुनि त नमिल्दा खिन्नथे मन्त्रिवर्य ।
पुरव तरफ गाको दूत फर्क्यो सधैर्य ॥
कहि असल तहाँ थ्यो दिव्य आश्रम् बनेको ॥
विधि पशुहरूले जो हर्दमै सेविएको ॥९२॥
यति त सुमतिबाटै त्यो खबर् पाउँदामा ।
खुशिसित चलनूभो वीर शत्रुघ्न वन्मा ॥
तब जउन त आश्रम् थ्यो मुनी शौनकैको ।
तहिं खुरुक सवारी भो नि शत्रुघ्नजीको ॥९३॥
धरिकन अति श्रद्धा चट्ट शत्रुघ्नजीले ।
चरणतलमहाँ शिर् राखनूभो खुशीले ॥
मुनि पनि नृपलाई देखि छक्कै परेर ।
अरघहरु दिनूभो मान्य हुन् ई भनेर ॥९४॥

वन-बिच किन एले आगमन् भो हजूर्को ।
हुकुम हवस लौ त्या क्यै नमानेर झर्को ॥
यति सुनि मुनिको त्यो नम्र चाल्को सवाल ।
अरजि गरदछन् फेर् वीर शत्रुघ्न हाल ॥९५॥
मुनिवर ! सुनि बक्स्योस् रामको यज्ञ-घोड़ा ।
उपवम बिचमाहाँ आश्रमै दूर थोड़ा ॥
हल न चल भएरै रोकिएको हुनाले ।
बलसित हयलाई सैन्यले तान्न थाले ॥९६॥
तइपनि हयको ता कत्ति डेकै नचल्दा ।
सकल कटकमा नै फैलियो धेर हल्ला ॥
यहि विपति निवारण् गर्नलाई उपाय ।
कहि नमिलि म आएँ हाल ता पाउँ राय ॥९७॥
यति सुनि मुनिले ता केहि ध्यानै गरेर ।
अनुमति दिनुभो झट् नम्र भावै लिएर ॥
विनति सकल गर्छ येसको जो छ भूप ।
बरु अब सुनिबक्स्योस् चित्त दीएर खूप ॥९८॥
जउन वन छ काबेरी नदीका तिरैमा ।
हरकिसिम फुलैले शोभितै गौड देशमा ॥
तहिं बसि तप गर्थे विप्र सात्वीक नामा ।
सकल विषय त्यागी हर्दमै पुण्यधामा ॥९९॥
प्रथम दिन खुशीले खालि पानी पिएर !
अनि अब अरका दिन् वायु भोजन् गरेर ॥

अभ्फ पछि अरका दिन् भै निलाहारकारी ।
यहि रितसित गर्थे व्रत् तिनैले त भारी ॥६००॥
क्वहि दिन ति मुनिको काल आईपुगेर ।
मनुज तनु तजेरै स्वर्ग लोकै गएर ॥
लिइ अति रमणीया अप्सराहेरु धेर ।
शयल गरन थाले मेरु पर्वत् पुगेर ॥१॥
वर पर फइलेको जमुनाको रुखै थ्यो ।
रस चुहि गिरितट्मा जाम्बुनद् स्वर्ण बन्थ्यो ॥
त्यहिं रुख-मनि धेरै पुण्य भागी ऋषीले ।
कचहरि गरि आराम् गर्दछन् है खुशीले ॥२॥
युवतिहरु लिएरै ताहिं पौंचाइ यान ।
सयल गरन थाले मस्त भै छोडि मान ॥
यस रितसित सात्विक् नामवाला मुनीको ।
कुचलन हुन जाँदा कोप उठ्ता ननीको ॥३॥
मुनिहरु मिलि ताहाँ भन्नुभो आज तैंले ।
अनरित गरिहालिस् दुष्ट याहाँ खुशीले ॥
फल यस कुरितीको पौंचि भूलोकमाहाँ ।
अब त तँ भइ राक्षस् बस्न जालास काहाँ ॥४॥
सुनिकन मुनिको त्यो चट्ट शापै कराल ।
थर-थर गरि काँपी क्यै नभै दिल् बहाल ॥
तिनि मुनि कर जोरी माफ पाऊँ भनेर ।
ऋषिहरु सँग साहै रून थाले गएर ॥५॥

सुनिकन ति मुनीको धेर पश्चातताप ।
बढ़ि तब त गरेको दुःखपूर्णै विलाप ॥
मनबिच जमनाले क्यै दयांकूर हेरी ।
मुनिहरु भननूभो शापमोचन् त फेरि ॥६॥
जब त मिलि गरौला रामको अश्वलाई ।
हल न चल भएको जोरले नै समाई ॥
तब त रघुपतीका क्यै कथा ता सुनौला ।
उहि दिन तिमि संझै शाप शून्यै बनौला ॥७॥
यति मिलि मुनिको त्यो शाप नाश्को उपाय।
उनि मुनि तब राक्षस् भैगए बेसहाय ॥
अब त रघुपतीको नाम कीर्तन् मईले ।
सुनुँ भनि हय पक्र्यो राक्षसैले अहीले ॥८॥
यति सुनि मुनिको त्यो शाप वृत्तान्त फेरि ।
दिलबिच भइ शङ्का क्यै नलाएर देरी ॥
चकित म बनिहालें कर्मको यो विपाक ।
सुनिकन मनमाहाँ छैन है कत्ति धाक ॥९॥
अब त अरु हुकूमू होस् कर्मलाई लिएर ।
कुन-कुन जुनि मिल्छन् कर्म कस्तो गरेर ॥
विनय सहित यस्तो वीर शत्रुघ्नजीको ।
सुनि अरजि त आज्ञा भैगयो शौनकैको ॥१०॥
सुनतुहवस राजन् ! धन्यवाद् दिन्छु मैले ।
हजुरकन हजारौं हर्षका साथ ऐले ॥

भइकन पनि थाहा लोकको निम्ति याहाँ ।
अरजि हुन गयो जो भन्छु सारा म याहाँ ॥११॥
हरण गरछ जो धन् कामिनी आरकाको ।
बलसित नगरी ख्याल् केहि अन्यायमाको ॥
त्यसकन यमदूतले हालि तामिस्रमाहाँ ।
दिइ अति तकलीफै फेरि जन्मिन्छ याहाँ ॥१२॥
जुनि मिलि अनि नीचो शूकरैको भएर ।
पछि मनुज जुनीमा मिल्छ रोगी बनेर ॥
सबसित गरि द्रोहै आफ्नु जाहान पाल्ने ।
उसकन नृप संझे अन्धतामिस्र मिल्ने ॥१३॥
यहि रितसित तत्तत् पापको भोग् कहेर ।
अनि नरपतिजीको हुक्म फेरी भयो र ॥
अमुक गरदछन् जो पाप दुःखै मिलेर ।
अमुक चिनु लिएरै जन्मिइन्छन् भनेर ॥१४॥
अनिपछि सब पापको नाश फेर् गर्नलाई ।
रघुपति भजनै धेर् दान तीर्थै बताई ॥
गइकन हयलाई हाल मोचन् गराई ।
सफल गरनुहोस् लौ रामको यज्ञलाई ॥१५॥
यति मिलिकन आज्ञा वीर शत्रुघ्न फेरि ।
हयतिर हिडनूभो क्यै नलाएर देरी ॥
तहिं पुगि हनुमान्ले संमुखै त्यै हयैको ।
चरित कहिदिए रामचन्द्रको जो भएको ॥१६॥

तब त असल यौटा आइपूग्यो महान ।
मणिजड़ित भएको स्वर्गदेखी विमान ॥
अनिपछि तब निस्की दिव्यरूपी जनै त्यो ।
नृपसित भइ बीदा स्वर्गमा झट् चलीगो ॥१७॥
यहि रितसित घोड़ा यज्ञदेखी छुटेको ।
उस दिनतक मैना सात ता बित्न गैगो ॥
हय पनि अनि पौंच्यो अङ्गबङ्गादि देश ।
मिलदइ नृपदेखी मान सत्कार वेश ॥१८॥
अनिपछि हय कुण्डल् पुर्महाँ पौचनै गो ।
सुरथ नृपतिको ता राजधानी जउन् थ्यो ॥
जउन नगरमाहाँ रैतिहेरू तमाम ।
भजन गरिरहन्छन् खूशि भै रामनाम ॥१९॥
प्रतिदिन तुलसीको फेरि पूजन् पिपल्को ।
गरछन दुनियाँले भक्ति राखेर राम्को ॥
क्वहि छइन कुकर्मी चोर डाकू निठूरी ।
भरमुलुक दुनीयाँ पातकी फेर् कसूरी ॥२०॥
छन असलपुरीमा राममन्दिर् अनेक ।
गरछन सब पूजन् साधकै एक एक ॥
रघुपतिपद पूजन् नित्य गर्नें सुधीर ।
सुरथ नृपति थीए भूमिमा एक वीर ॥२१॥
अति असल हयै त्यो रामको देखि चट्ट ।
खबर पुगन गैगो सेवकैबाट झट्ट ॥

दरशन रघुनाथ्को पाउँला की भनेर ।
सुरथ नृपति भन्छन् खूब खुशी भएर ॥२२॥
अनुचर गइ मेरा त्यो हयै पक्रि ल्याई ।
गर दिल दिइ रक्षा आज लौ तेसलाई ॥
जबतक रघुनाथ्को दर्शनै पाइँदैन ।
तबतक हयलाई छोडने ता म छैन ॥२३॥
हुकुम सुनि नृपैको सेवकै घेर् गएर ।
बललित हय पक्री चट्ट ल्याए डटेर ॥
तब त सब दुनीयाँलाई लड्ना-निमित्त ।
हुकुम गरिदिए झट् भूप भै एकचित्त ॥२४॥
मुलुकभर सुरथ्का थे प्रजा रामभक्त ।
परधन परनारी-तर्फ थे सब् विरक्त ॥
हरदिन शुभ कर्मैतर्फ सारा प्रजा भै ।
यमपुर तिर उन्को रत्ति जाँदैन थ्यो क्वै ॥२५॥
तब यम मुनिको ली भेष क्वै दिन् सुरथ्को ।
कचहरिबिच आए बुझ्न मन् भूपतीको ॥
सुरथ तुलसि शीर्मा राखि राम्नाम् हमेशा ।
मखबिच सब गर्थे आफ्नू नित्य पेशा ॥२६॥
मुनिकन झट देखी अर्घ्यपाद्यादि साथ ।
सविनय गरि पूजन् नम्र पारेर माथ ॥
नरपति तब भन्छन् रामका क्वै चरित्र ।
कहि मल हरिदीनोस् हामरो जो छ मित्र ॥२७॥

यति सुनि नृपका बात् ती मुनी तालि ठोकी ।
ध्वनि गरिकन हाँसे भट्ट नैं मित्र बोकी ॥
तब त नरपतीले दङ्ग भई चित्तमाहाँ ।
मुनिसित यहि सोधे क्यै बढी सामुमाहाँ ॥२८॥
बुझ्न सकिनँ मैले कारणै हाँसनाको ।
जनि गरि भनिदीनोस् हे मुने ! जो भयाको ॥
यति सुनि मुनि भन्छन् भूपते ! एकचित्त ।
भइकन सुनिबक्स्योस् हाँसनाको निमित्त ॥२९॥
हुकुम जुन भएथ्यो रामका क्यै चरित्र ।
भन भनि यहि सुन्दा उठ्न गो हास्य मित्र ॥
अचर चर जती छन् बुझ्नु ब्राह्माण्डभर्मा ।
सकल छन वशैमा कर्मकै बेखबर्मा ॥३०॥
भजन गर्नु के काम् निम्ति सीतापतीको ।
असल करम गर्दा मानिए त्तिकै हो ॥
मिलछ नरक फेरी कर्मद्वारा छ स्वर्ग ।
शतमख गरनाले इन्द्रको त्यो छ गर्व ॥३१॥
फगत करमद्वारा सत्यलोक् पाइ ब्रह्मा ।
सकल मनुजलाई ठान्दछन् ती विकम्मा ॥
अरु पनि मरुदादी भूप छन् है तमाम ।
करम गरि बसेका पाउँदा उच्च ठाम ॥३२॥
नृपवर ! गर यज्ञै रामको नाम छोडी ।
अनि तब पुगनेछौ स्वर्गमा बन्ध तोडी ॥

यति सुनि तब भन्छन् ज्यास्ति साहै रिसाई ।
नयय मुख समेतै खूब लालै बनाई ॥३३॥
नगर तिमि कुरा लौ कर्मका आज हेर ।
नबस नगरमा नै हे मुने ! धेर बेर ॥
त्वयि फलद जउन् हो कर्मको नै बयान ।
गरि मसित तिमीले कर्मका धेर शान ॥३४॥
क्यहि समय पछाडी इन्द्र ब्रह्मा जती छन् ।
तखत सब चटक्कै छोडि गिर्नै पनी हुन् ॥
जुन रघुपतिका हुन् भक्त प्रह्लाद आदि ।
ध्रुव विभिषणजी छन् नित्य यिन्को छ गादी ॥३५॥
जउन त रघुनाथ्को गर्दछन् नित्य निन्दा ।
परछन नरकैमा येसमा छैन धन्दा ॥
द्विज भनि तिमिलाई मार्न ता ठीक भैन ।
अब तिमि चल बच्चू ! बस्न ता पाइँदैन ॥३६॥
यति सुनि नृपलाई क्रुद्ध देखेर फेरि ।
बदलिकन यमैले भेष मुखतर्फ हेरी ॥
सुरथ नृपतिलाई भन्दछन् माग तिम्ले ।
वर अभिलषितै लौ खूशिले दिन्छु मैले ॥३७॥
यति सुनि सुरथैले भन्दछन् हात जोडी ।
धन-जन विषयैको कामना चट्ट छोडी ॥
म उपर करुणा लौ हुन्छ ता धर्मराज !
खुशिसित वर माग्छू बक्सियोस् इष्ट आज ॥३८॥

जबतक रघुनाथ्को दर्शनै पाइँदैन ।
तबतक म त बुझ्नोस् मर्नु ता चाहँदैन ॥
यति सुनि यमराज्ले पुग्न जाला भनेर ।
झटपट चलनुभो बेखबर् नै भएर ॥३९॥
उहि नृप सुरथैले लड्नलाई तयारी ।
भइ, गरि सब ठीकै योग्य जो भारितारि
लिइ दशसुत आफ्ना चम्पकादी सुवीर ।
रणबिच पुगिहाले हर्षले भै सुधीर ॥४०॥
उसतिर रघुनाथ्को भाइ शत्रुघ्न चट्ट ।
अलिपछि तहिं पौंचे वेगले नै बिछट्ट ॥
भटहरुसँग सोधी त्यो सबै चाल पाई ।
कउन नृप छ ताहाँ भन्नुभो मन्त्रिलाई ॥४१॥
सुमति विनति गर्छन् हात जोडेर फेरि ।
सुरथ नृपतिको त्यो हाल मुख्तर्फ हेरी ॥
यहि नगर त कुण्डल् नामको हो सुरथ्को ।
सुकृतरत दुनीयाँ हेरुले सेविएको ॥४२॥
हरदम रघुनाथ्को पादसेवा प्रसक्त ।
यिनि नृप हनुमान् झैं खूब छन् रामभक्त ॥
छन भट यिनका है खूब शूरा महान ।
रण पनि अति होला धेर् गरूँ के बयान ॥४३॥
यति सुनि सुमतीथ्यैं भन्नुभो फेर् नृपैले !
भन-न अब गरौं के ! काम हामीहरूले ॥

तब त सुमति भन्छन् दूत लौ हाल नाथ ।
कहि अब बरु भेजौं बुद्धिमान् युक्तिसाथ ॥४४॥
यति सुनि सुमतीको बात योग्यै बुझेर ।
चर भइ तिमि जाऊ आज अङ्गद् ! भनेर ॥
हुकुम नरपतीको पाइ अङ्गद् सुधीर ।
सुरथ नरपतीको सैन्यतर्फै गएर ॥४५॥
सुरथ नृपतिलाई वीरको माझमाहाँ ।
बस धरि तुलसीको मालिका माथमाहाँ ॥
मुखबिच रघुनाथ्को कीर्ति गाएर नित्य ।
समरतिर तयारी देखि गर्छन् ति दौत्य ॥४६॥
बलसित हय पक्री सेवकैले हजूर्कै ।
बिथिति गरिदिनाले गर्दछू लौ उजूर् कै ॥
हय नचिनि हरेको हो त फिर्ता दिनोस ।
रघुपतिसित ऐले गर्नु ठीक् छैन जोस ॥४७॥
खुरुक अब लगेरै वीर शत्रुघ्नलाई ।
शरण छु भनि घोडा हाल दीनोस् बुझाई ॥
छ यदि मरणमा नै हर्ष ता क्यारुँ भूप !
रणतिर बरु आगे बढ्नुहोस् राखि हूप ॥४८॥
सुरथ नरपतीले अङ्गदैले भनेको ।
यति सुनि तब भन्छन् क्यै नमानेर नीको ॥
जुन वचन भन्यौ यो ठीक हो वालिपुत्र ।
गवड गरि लिंदामा हुन्छ क्यै यत्र तत्र ॥४९॥

तर रघुपतिको ता दर्शनै हामिलाई ।
मिलदइन जबैतक् तब् तलक् अश्वलाई ॥
हरकिसिम गरी ता छोडने लौ म हैन ।
डर त तिमिहरूको के गरूँ कत्ति छैन ॥५०॥
यति सुनि तब भन्छन् वीर अङ्गद् रिसाई ।
सकल विरहरूका सामुमा भूपलाई !
नगर ढिपि तिमीले हाल यो भूमिपाल ।
अनुचित जुन भैगो सो सुरुक्कै समाल ॥५१॥
बलसित लवणैको प्राणलाई जउन्ले ।
सहज हरिदिएथे हाल उन्लाइ तिम्ले ॥
कसरि ! म जितँला लौ भन्दछौ हे प्रजेश !
मति विकल भयो की खोज है वैद्य वेश ॥५२॥
नगर गवड़ राजन् ! जौन शत्रुघ्न-साथ ।
हरदम छन पुष्कल् त्यारि जोडेर हात ॥
जुन भरतकुमार्ले वीरभद्रादि वीर ।
जितिकन हय ल्याए रण्विषे छोडि तीर ॥५३॥
छन अभ्फ हनुमानै साथमा फेरि हाल ।
गरन भनि लडाईं भेष पारी कराल ॥
अघि जुन हनुमान्ले रावणैको कुमार ।
कतल गरिदिएथे लातको दी प्रहार ॥५४॥
छन अभ्फ विरहेरू सुग्रिवादी अनेक ।
हय विहक हऱ्यौ हैै मान्दछू मै उदेक ॥

रघुपतिबलरूपी यो महासागरैमा ।
तिमि बुझ मुसुना झैं देखिइन्छौ नजर्मा ॥५५॥
अब समरतिरैको छोडिद्यौ स्वामिलाष ।
बल नसमझि राम्को यो फउज् लौ नमास ॥
यति सुनि अनि फेरि भूपले धैर्यसाथ ।
गरदछन जवाफै केहि हल्लाइ माथ ॥५६॥
नगर तिमि बढाई वीरको यो बयान ।
भनि इनि बलिया छन् भन्न् यिनी पो महान ॥
म त यदि रघुनाथ्को भक्त नै हूँ भने या ।
यिनिहरु सबलाई ख्वाउँला खूब गोता ॥५७॥
दरशन रघुनाथ्को जब्तलक् पाइँदैन ।
तबतक बुझ तिम्ले अश्व यो छोडिदैन ॥
यहि खबर तिमीले वीरशत्रुघ्नलाई ।
गइ फरक नपारी भन्दिनू है बुझाई ॥५८॥
अनिपछि जब फर्की वीर शत्रुघ्नलाई ।
खबर कहिदिएथे दूतले सामु जाई ॥
तब त लडनमा नै खूब कम्मर् कसेर ।
रघुपति तरफैका सैन्य गैगो बढेर ॥५९॥
दश-सुत लिइ साथै सैन्य ठीकै गरेर ।
सुरथ नृपति आए ताहिं लड्नै भनेर ॥
घनघन गरि धेरै बज्न थाले र बाजा ।
भटहरु भिडिहाले टम्म पारी कलेजा ॥६०॥

तब दुइ तरफैका वीरहेरू भिडेर ।
अतिशय डरलाग्दो द्वन्द्वयुद्धै भयो र ॥
सुरथ नृपकुमारै चम्पकैलाइ फेरि ।
पुष्कल विर सोध्छन् सामने तर्फ हेरी ॥६१॥
भन-न तिमि कउन् हौ आज मेरो समीप ।
लडन भनि तयार् छौ खूब राखेर रूप ॥
यति सुनिकन फेरी वीर चम्पक् खुशीले ।
गरछन तब भक्ती राममा राखि मन्ले ॥६२॥
रघुपति जननी हुन् राम मेरा पिता हुन् ।
बुझ हुन रघुनाथै भाइ बन्धू जती हुन् ॥
सुन अझ तिमि नाऊँ रामदासै छ मेरो ।
भनुँ कति अब मैले धेर जोडेर फेरो ॥६३॥
तइपनि सुन अर्को नाउँ लोक्मा चलेको ।
दशम दिन हुँदा ती प्रोहितैले कहेको ॥
जननि विरवती हुन् फेर् सुरथ् हुन् पिताजी ।
भनदछु अब आफ्नू नाउँ नै बुझ्नुहोस् जी ॥६४॥
जुन फुल ढकमक्कै फुल्छ है चैत्रमाहाँ ।
सुनसरि भइ वर्णौं लिङ्ग झैं आकृतिमा ॥
भ्रमरहरु कदापी तेसको रस् लिदैनन् ।
स्वहि बुझनु हओस् है नाउँ मेरै त भन्छन् ॥६५॥
यति सुनिसकि पुष्कल् चट्ट साहै रिसाई ।
शर बहुतइ छोडे चम्पकै वीरलाई ॥

झटपट धनुमाहाँ बाण जोडेर फेरि ।
टुकटुक गरि चम्पक् क्यै नलीएर देरी ॥६६॥
अनिपछि शर धेरै वीर पुष्कल् उपरमा ।
वरषण गरिदीए कोपले तेस् बखत्मा ॥
तिनि शर पनि पुष्कल् वीरले तत्क्षणैमा ।
टुकटुक गरिदीए वेगले त्यै रणैमा ॥६७॥
यहि रितसित दुइको घोर संग्राम् भयो र ।
अनिपछि पुषकल्ले दिक्क साह्रै भएर ॥
बलसित जब ब्रह्मास्त्रै तहाँ छोड्दिनूभो ।
खलबल रिपुसैन्यैतर्फ ता फैलिनै गो ॥६८॥
धपधप गरि बल्दो शस्त्र सो चट्ट देखी ।
गरिकन तब चम्पक् वीरले खूब सेखी ॥
झटपट अनि ब्रह्मास्त्रै जसै छोडिदीए ।
ति दुइ समरमाहाँ वेगले साम्य भैगे ॥६९॥
विफल गरिदिए लौ शस्त्र मेरो भनेर ।
जब भरतकुमार्ले क्रुद्ध साह्रै भएर ॥
रिपुतिर शर वृष्टी गर्दिए चम्पकैले ।
प्रहरण तब रामास्त्रै गरे खुब् रिसैले ॥७०॥
अब दुइ टुक पार्छू शस्त्रलाई भनेर ।
तजबिज गरदै थे वीर पुष्कल् त धेर ॥
तइपनि जब लाग्यो शस्त्र मूर्छा परेर ।
लिइ निजरथमाहाँ चम्पकैले लगेर ॥७१॥

खलबल मचिगैगो वीर शत्रुघ्नतर्फ ।
भटहरु सब भागे रण्विषे छोडि वर्ग ॥
हडबड भइ भन्नूभो र शत्रुघ्नजीले ।
विरवर हनुमानैलाइ येती खुशीले ॥७२॥
रणबिच गइ पुष्कल्लाइ ल्याऊ कपीश !
जिति सहज इ चम्पक्लाइ राखेर खीश ॥
सुनि यति हनुमान्ले वीर शत्रुघ्नजीको ।
वचन लगिगए झट् रण्विषे भै ननीको ॥७३॥
समरतिर हनुमान्लाइ देखेर फेरि ।
खिस गरिकन चम्पक् वीरले सामु हेरी ॥
शरहरु हनुमान्का तर्फ ताकेर छोडे ।
सब शर हनुमान्ले हातले चट्ट तोडे ॥७४॥
अनिपछि शर लागी फेर् हनूमान वीर्ले ।
उखलिकन रुखै एक् फ्याँकिदीए रिसैले ॥
त्यहि पनि शर छोडी चूर्ण पारी दिएर ।
रिससित हनुमान्ले हात्ति फ्याँकी दिएर ॥७५॥
त्यहि पनि शर-जाल्ले काटि दींदा कपीश ।
मन मन विर चम्पक्माथि राखेर खीश ॥
पकडिकन बलैले हात तिन्को उडेर ।
गगनबिचमहाँ नै ती हनूमान् पुगेर ॥७६॥
बलसित ति दुवैको पर्न गो बाहुयुद्ध ।
जब अनि हनुमान्जी बन्न गै खूब क्रुद्ध ॥

पकडि दुवइ गोडा भूतलैमा पछारे ।
सुरमुनिहरुलाई कामले छक्क पारे ॥७७॥
अनि तब सुरथैको पुत्र क्यै राखि फिक्री ।
रिस गरि हनुमान्‌को पुच्छ चट्ट पक्री ॥
फनन फन रिगाँए फेरि आफ्ना त खीश ।
अनि तब रणमाहाँ दङ्ग भैगे कपीस ॥७८॥
बलसित हनुमान्‌ले पक्रि फेर् चम्पकैको ।
चरण दुइमहाँ नै फ्याँकदा चट्ट बज्र्यो ॥
अनि तब विर चम्पक् मूर्छित भै गिरेर ।
खुशिसित पुषकल् साथ् झट् हनुमान् फिरेर ॥७९॥
खलबल सुरथैको तर्फ खूबै मचीयो ।
फउज अधिक हर्षित् रामका तर्फ थीयो ॥
सुरथ नृपति शोक्‌ले दग्ध साहै भएर ।
रणभुमितिर आए लड्‌दछू मै भनेर ॥८०॥
तव कपिवरलाई हाँक दीएर फेरि ।
समरतिर हनूमान् फर्किगे चट्ट हेरी ॥
अनि कपिवरलाई भन्दछन् ताहिं भूप ।
गरिकन हनुमान्‌को योग्य तारीफ खूब ॥८१॥
अघि गइ तिमि लङ्का गर्दिंदा उच्च काम ।
त्रिभुवन बिचमाहाँ धन्य तिम्रो छ नाम ॥
तनय जउन मेरो चम्पकैलाइ तिम्ले ।
विचयन गरिदींदा हाजिरै छू म ऐले ॥८२॥

अब म त तिमिलाइ चट्ट पाता कसेर ।
फिरदछु स्वपुरैमा आज खूशी भएर ॥
यति सुनि नृपको बात् फेर् हनूमान वीर ।
गरजन अनि उत्तर् रण्महाँ मै सुधीर ॥८३॥
हुन त नृप तिमी हौ खाश रामूको त भक्त ।
तर म पनि उनैका काममा छू प्रसक्त ॥
गर सफल प्रतिज्ञा आज भूपाल ! हेर ।
शरण छु म उनैका के भनूँ हाल धेर ॥८४॥
यति सुनि सुरथैले वाण छोडेर फेरि ।
बलसित हनुमान्ले तीकनै क्यै नटेरी ॥
शर-सहित सुरथ्को त्यो धनू चट्ट खोशी ।
रिससित तब भाँचे आफनू हात मोसी ॥८५॥
यहि रित असि बाजा चाप काटीदिए र ।
रिससित सुरथैले शक्ति छोड्दा भए र ॥
खपिकन फिर यस्तो भूपको रथ् टिपेर ।
कपिवर गगनैमा झट्ट ऊडी गएर ॥८६॥
परिघ सुरथजीले छातिमा ताकि ताकी ।
कपिवरतिर धेरैबाजि दीएर ठोकी ॥
खपि नसकनु हूँदा फ्याँकिदीएर ताहाँ ।
रथ झुर भइ बज्र्यो सामने रण् भुमीमा ॥८७॥
अनिपछि अरको रथ् ल्याइ आएर भूप ।
फननफन लपेटी पुच्छरै आफ्नु खूप ॥

समर तरफ भट्की त्यो रथै चूर्ण भो र ।
अनि सुरथ त अर्को रथ्महाँ पाल्नुभो र ॥८८॥
त्यही पनि हनुमान्ले चट्ट भाँचीदिएर !
यहि रितसित एकाउन्न रथ् भाँचिएर ॥
रिससित हनुमानैलाइ भन्छन् नृपेन्द्र ।
म अब गरुँ बयान् के ! धन्य छौ वानरेन्द्र ॥८६॥
तिमि पनि अहिले लौ ह्वौ खड़ा हे कपीश ।
शर धनुबिच राखी फेरुँला है म खीश ॥
यति भनि सुरथैले छोडि पाशूपतास्त्र ।
निशिचर गण फैली वैरि पार्‍यो र त्रस्त ॥६०॥
कपिवर पनि ताहाँ अस्त्रले बाँधिएर ।
फउज-उपर हाहाकार मच्चीगयो र ॥
रघुपति चरणैको ध्यानमा मन् दिएर ।
झटपट हनुमान्जी पाशमुक्तै भएर ॥६१॥
साह्रै क्रुद्धै भइ नृपतिले ब्रह्म अस्त्रै समाती ।
छोडे ताहाँ कपिवरकनै सामुमा ताकि छाती ॥
देखी अस्त्रै निरभय भई फेर् हनूमानजीले ।
सूलुक्कै नै तहिं नलिदिए त्यो समर्मा खुशीले ॥६२॥
आफ्नो अस्त्रै विफल बनदा कोप साह्रै उठ्यो र ।
ध्यानै रामूको सुरथनृपले मन्मनै खूब् गरे र ॥
रामास्त्रैको जब गरिदिए तेहि रण्मा प्रहार ।
क्यारुन् बद्धै हुन कपि गए जोर् नभै खाइ हार ॥६३॥

भन्छन् ताहाँ कपिवर पनी भूपका तर्फ हेरी ।
राजन् ! तिम्रो सब छलिदिएँ अस्त्रहेरू नटेरी ॥
मेरा स्वामी रघुपतिजिको अस्त्र छोड्यौ र ऐले ।
बाधीएँ है विफल गरनू ठीक् नठानेर मैले ॥९४॥
बाँधीएको मकन तिमिले आफनू पूरिमाहाँ ।
लीई जाऊ अब खुशिसितै भूपते ! मन् छ जाहाँ ॥
होला जैले रघुपतिजिको यै पुरीमा सवारी ।
पाल्नूहोला अवधपुरमा यो सबै दुःख टारी ॥९५॥
यस्तो रीतले तब सुरथले बाँधिदीदा हनूमान् ।
पुष्कल् आए लडदछु भनी बन्न गै खूब् पहल्मान् ॥
देखी पुष्कल्कन नृपतिले वाण हाने अनेक ।
पुष्कल्जीले पनि टुकटुकै पार्दिए एक एक ॥९६॥
येही चालले ति दुइ विरका भो लडाईं अघोर ।
देखिन्थे है ति दुवइ जना बल्महाँ जोरतोर ॥
तिन्को बाण्ले गगन भरियो काहिं थीएन ठाम ।
दूवै वीर्को स्तुति गरदथे दर्शकै गाइ नाम ॥९७॥
एक् वाण् छोडे सुरथ नृपले पुष्कलैलाइ ताकी ।
टुक् टुक् पारे भरत-सुतले कै नराखेर बाँकी ॥
छोडे अर्को शर नृपतिले क्रुद्ध साह्रै भएर ।
मूर्छा पुष्कल् तब परिगए बाण धेरै गडेर ॥९८॥
त्यो हाल् पाई सुरथ नृपका साथ लड्छू भनेर ।
फेर् शत्रुघ्नै समर-बिचमा कोपले पाल्नुभो र ॥

भन्नूभो ए सुरथ ! तिमिले वीर मेरा लडाकी ।
मूर्छा पार्‍यौ मकन नगनी रणमहाँ छाति ताकी ॥९९॥
आएको छू समरबिचमा मै बने होशियार ।
जाला इज्जत् मसँग लडका दिल् दिई सो सह्यार ॥
यस्तो बातै सुनि सुरथजी राममा चित्त लाई ।
दिन्छन् उत्तर् समर-बिचमा वीर शत्रुघ्नलाई ॥१००॥
साँचै नै हो मसँग लडदा फुष्कलादी अनेक ।
मूर्छैमा छन् समर-बिचमा हट्न गै सब् विवेक ॥
थोरै बेर्‌मा तिमि पनि बुझ्यौ जाउला तेहि बाटो ।
सीतानाथ्‌को विनु दरशनै फुक्किने सुर् नआँटो ॥ १ ॥
यस्तो भन्दै जब नृपतिले छोड्दिए वाण-धारा ।
शत्रुघ्नैले झटपट गरी काट्नुभो तीर सारा ॥
आग्नेयास्त्रै समर जिमिमा देखि चल्दो सुरथ्ले ।
वारूणास्त्रै गरिकन प्रहार् त्यो समाले खुशीले ॥ २ ॥
शत्रुघ्नैले तब त रणमा योगिनीले दिएको ।
अस्त्रै छोडे निद अति दिई मोह पार्ने भएको ॥
देखी अस्त्रै सुरथ नृपले संझि सीतेश नाम ।
एकै शर्‌ले टुक-टुक गरी पारिहाले विकाम ॥ ३ ॥
यस्तो देखी खुब छक परी फेरि शत्रुघ्नजीले ।
वाण् लिनूभो अघि त लवणासुर् निभायो जउन्ले ॥
यस्तो देखी सुरथ नृप ता दुष्टमा लाग्छ यो ता ।
भन्दै थीए रघुपति चरणसेविमा दिन्न गोता ॥ ४ ॥

लाग्यो गै त्यो सुरथनृपका छातिमा बेगसाथ ।
मूर्छा भैगो नृप शिथिल भै आफनू सर्व गाथ ॥
केहीबेरै पछि नृप उठी वीरको सामु जाई ।
भन्छन् एक् चोट् सह्तु तिमि पनी वीर शत्रुघ्नलाई ॥५॥
येती बातै कहि नृपतिले बाण छोडे र आयो ।
ज्वाला धप् धप् बलि नजरले लेर्न मुश्किल् गरायो ॥
शत्रुघ्नैले शर प्यहि पनी काटनूभो तथापि ।
टुप्पो आई त्यहि गडन गै भो व्यथा देहव्यापी ॥६॥
मूर्छा भयास्सै जब परनुभो वीर शत्रुघ्न ताहाँ ।
हाहाकारै अति मचिगयो रामका तर्फमाहाँ ॥
छोरा जो थे सुरथ नृपका वीर दश् भाइ तिन्ले ।
मूर्छा पारे दश विरकनै क्यै नमानी बलैले ॥७॥
यो चाल् देखी रिस अति उठी फेरि सुग्रीव ताहाँ ।
पौंचे लड्ने समर–बिचमा भूपका सामुमाहाँ ॥
भन्छन् राजन् ! रणबिच अरे मूर्छित पारि धेर ।
काहाँ जान्छौ म पनि लडनै त्यारि छू हेर हेर ॥८॥
यस्तो भन्दै लिइकन रुखै एक सुग्रीवजीले ।
फ्याँकीदीए सुरथ उपरै मारिदीने सुरैले ॥
बृच्छैलाई तब नृपतिले वाण छोडी तमाम ।
टुक्रा टुक्रा गरिकन तहाँ पारिहाले विकाम ॥९॥
छाती ताकी कपिवरकनै भूपले वाण छोडे ।
सुग्रीवैले क्षणभरमहाँ ती शरै चट्ट तोडे ॥

सुग्रीव्जीले अनिपछि रुखै पर्वतै फेरि हात्ती ।
फ्याँक्तै नड्ले च्वकटि कहिले पुग्दफे हान्न लात्ती ॥१०॥
यस्ता सुग्रीव्कन पनि तहाँ भूपले क्यै नमानी ।
रामास्त्रैको गरिकन प्रहार् बाँधिहाले र तानी ॥
हाली रथमा सब विरकनै वाद्यहेरु बजाई ।
आफ्नू पुर्मा पनि सुरथजी हर्षले पुग्न पाई ॥११॥
भन्छन् ताहाँ नरपति पनी फेर् हनूमानलाई ।
हे वीर् तिम्ले गर भजन है रामको दिल् लगाई ॥
श्रीराम्भक्तै तिमि छउ अरे रामलाई बुलाऊ ।
बन्धन्बाटै फुरसद लिने यै उपायै जमाऊ ॥१२॥
तेस्तो तिन्को वचन सुनदा चित्त बूझयो र ताहाँ ।
राम्को चिन्तन् गरछन कपी भूपका सामुमाहाँ ॥
हे भक्तार्तिप्रशमक ! विभो दुःख पायौं अनन्त ।
दर्शन् दीए रघुवर ! सबै दुःख हूनेछ अन्त ॥१३॥
जस्तो पैले गजपतिकनै ग्राहको फन्ददेखि ।
छूट्यो गर्दा प्रभु हजुरले ग्राहको ध्वस्त सेखी ॥
यस्तै हर्दम् जब पिर पऱ्यो देवताहेरुलाई ।
राखी तिन्मा टिठ पिर सबै बक्सने झट् छुटाई ॥१४॥
छल्ले गर्दा दशमुख-महाकाल-पाशमा परेकी ।
हर्दम् आफ्नै भजन गरदै सत्यमाहाँ रहेकी ॥
सीतामाथी हुन गइ कृपा रावणैलाइ मारी ।
भको भारै पनि सहजमै फर्किबक्स्यो उतारी ॥१५॥

ऐले हामीकन सुरथले पाशले बाँधिहाले ।
पौरख् केही नचलि मइले कीर्तनै गर्न थालें ॥
एले दर्शन् दिइ हजुरले आफु नै आइ नाथ !
बन्धन् हाम्रो छिनिदिनुपऱ्यो झट्ट नीगाह-साथ ॥१६॥
यस्तो आर्तस्वर सुनिसकी झट् हनूमानजीको ।
पुष्पक्माथी चढि रघुपतीको सवारी चलीगो ॥
जस्सै देखे कपिवरजिले रामलाई विमान्मा ।
साथैमा लक्ष्मण भरत-मुनि वर्गलाई गगन्मा ॥१७॥
भन्छन् ताहाँ नरपतिकनै झट् हनूनानजीले ।
राजन् हेर्नोस् रघुवीरजिको भो सवारी अहीले ॥
यस्तो सुन्दा सुरथ नृपले देखि सीतेशलाई ।
पाऊमाहाँ प्रणमन गरे भक्तिभावै लगाई ॥१८॥
राजालाई रघुवरजिले अङ्कमालै गरेर ।
हर्षाश्रूको वरषण गरी भन्नुभो खुश् भएर ॥
राजन् ! तिम्रो बलकन म ता दिन्छु है धन्यवाद ।
जस्ले गर्दा विरहरु लडे रण्विषे छोडि याद ॥१९॥
मद्दत् दिन्थे बखत परदा वीर मारी अनेक ।
तेस्ता मेरा कपिवरकनै बाँधदा छू उदेक ॥
यस्तो तारीफ् सुरथनृपको प्रेमले नै गरेर ।
बन्धन् खूला कपिवरजिको गर्दिनूभो गएर ॥२०॥
मूर्छाग्रस्तै जति जन थिए दृष्टिले मात्र हेरी ।
संज्ञावाला गरिदिनुभयो क्यै नलाएर देरी ॥

निद्रादेखी जउन रितले उठ्तछन् सोहि ठीक ।
उठ्नै थाले सब विरहरू घाउको भोगि दीक ॥२१॥
उठ्ता देखी रघुवरकनै हर्ष साह्रै भएर ।
गर्नै थाले प्रणति सबले पाउमा नै परेर ॥
आरामीको खबर प्रभुले सोधनी राखदामा ।
बिन्ती पारे हुन गइ कृपा नाथकै छौं मजामा ॥२२॥
साह्रै हर्षै भइ सुरथले आफनू राज्य सारा ।
रामैलाई सकल सउँपे भक्ति राखी अपारा ॥
राजन् तिम्ले स्वकुलधरमै थामनैलाइ हाल ।
घोडा हर्दा अतिशय भयो चित्त मेरो बिहाल ॥२३॥
यस्तै यस्तैसित गरि तहाँ हर्षका साथ बात ।
श्रीराम्जीको हुन गइ हुकूम् ताहिं नै तीन रात ॥
फेरी सोही रितसित विमान्मा सवारी खुशीले ।
हुन्थ्यो जाहाँ मख अनि उहाँ पाल्नुभो श्रीपतीले ॥२४॥
चम्पक्लाई सुरथ नृपले आफन राज्यभार ।
दीई घोडासित चलिगए रामकै ली अधार ॥
जितबाजी भो भनिकन तहाँ वीर शत्रुघ्नजीले ।
भेरी शंखै पटह प्रभृती फुक्न लाए खुशीले ॥२५॥
घोडा छूट्यो पछि पछि सुरथ्लाइ लीएर फेरि ।
शत्रुघ्नैजी पति चलनुभो क्यै नलीएर देरी ॥
घोड़ा घुम्दै पहुचन गयो जाह्नवीका तिरमा ।
आश्रं जाहाँ विरचित थियो वाल्मिकीका वगलमा ॥२६॥

सीताजीका सुत लव पनी लीनलाई समीधा ।
जाँदै थीए वनतरफ नै साथिका साथ सीधा ॥
आफ्ना साथीसित भनदछन् हेर आएछ घोड़ा ।
कस्को होला छ अति छरितो भूमि छूँदो छ थोडा ॥२७॥
यस्तो बातै कहि नगिचमा पौंचि त्यो स्वर्णपत्र ।
बाँची लवले खुशिसित तहाँ मन्महाँ भै विचित्र ॥
भन्छन् साथीहरुकन तहाँ रामको यो रहेछ ।
यज्ञै गर्छू भनिकन बुझ्यौ अश्व यो छोड़दिएछ ॥२८॥
फेरी जो छन् भुवनतलमा खाश क्षेत्राणिपुत्र ।
उन्ले घोड़ा पकड़नु यही हो भनी यज्ञसूत्र ॥
क्षत्री जो छन् बल रहितका हूपहारा हरामी ।
शत्रुघ्नैको दिउन सबले लड्न छोडी सलामी ॥२९॥
यस्तो लेखा बनि अति बलि राम साहै बढेछ ।
मै छू सारा भुवनभरमा वीर भन्ने बुझेछ ॥
को हो त्यो राम् अति गरबिलो फेरि शत्रुघ्न को हो ।
मेरो साम्ने समरबिचमा कीट तुल्यै हुने हो ॥३०॥
जस्की आमा जनकतनया कूशवीरै प्रभू हुन् ।
उस्ता हामीकन त नगनी राम बढ्दो भयो झन् ॥
सच्चा क्षत्रीसुत यदि भए वीर शत्रुघ्न ऐले ।
घोड़ा खोसोस् तब विर भनी मानुँला हार मैले ॥३१॥
की ता मेरा अतिशय तिखा वाणको खाइ धारा ।
संग्रामभूँमा थिलथिल भई आफनू देह सारा ॥

येती बातैं कहि जब ताहा, अश्व लव् ले समाते। त्यो चाल् देखि मुनि सुत हरु, डर् भई विघ्न काँपै ॥

सेवा हर्दं कुशाचरणको गर्न मञ्जूर् गरेर ।
लेला बीदा नहिं त कसरी भागला उम्किएर ॥३२॥
येती बातै कहि जब तहाँ अश्व लवले समाते ।
त्यो चाल् देखी मुनिसुतहरू डर् भई विघ्न काँपे ॥
पौंची लवका नगिच डरले फेर् मुनीका कुमार ।
संझाउँछन् लवकन तहाँ आफनू संझि यार ॥३३॥
भन्छन् ऐले अवधपुरमा भूप छन् रामनाम ।
तिन्को पौरख् अतिशय ठुलो गान गर्छन् तमाम ॥
उन्को घोड़ा पकड़नमहाँ इन्द्रको छैन जोर ।
लड्कैयाँ मै हय किन हन्यौ के मगज् बिग्रिगो र ? ॥३४॥
यस्ता तिन्को सुनिकन वचन् भन्दछन् फेरि लवले ।
आफ्ना साथीहरुकन तहाँ नीतिका नै विचार्ले ॥
जान्दैनौ हे तिमिहरु त क्यै क्षेत्रिको हूँ म बच्चा ।
हूँदा ब्राह्मण् बुझन सबको बुद्धि साह्रै छ कच्चा ॥३५॥
संग्राममैमा अधिक निपुणै हुन्छ क्षेत्री सदैव ।
भोजन् पाए द्विज खुशि हुने तेही संझी सुदैव ॥
तस्मात् जाओ तिमिहरु सबै आफना आश्रमैमा ।
भान्से होलिन् सबकि जननी भात खाओ मजामा ॥३६॥
यस्तो तिन्को सुनिकन वचन् ती सबै चापचूप ।
लागी दूरै गइकन बसे विस्मयै साथ खूप ॥
यत्तीकैमा उस तरफका वीरहेरू अनेक ।
आई देखे हय नगिचमा बालकै मात्र एक ॥३७॥

सोधछन् बच्चू ! हय धरिलिने कौन हो के छ नाउँ ।
देखेका छौ यदि तिमि भने त्यो यथावत् बताऊ ॥
कस्को माथी कुपित बनिगै खूब नै धर्मराज ।
जस्ले राम्को हय हरि अहा ! बाँच्न मन् गर्छ आज ॥३८॥
यस्तो तिन्को सुनिकन वचन् खूब जागी रिसैले ।
सेवक्हेरूसँग निडर भै भन्न थाले लवैले ॥
घोड़ा हर्ने विर त मइ हुँ दाजु मेरा कुशै छन् ।
जस्को साम्ने खुद यम पनी जोर् नभै पाउ पर्छन् ॥३९॥
यस्तो तिन्को सुनिककन वचन् बाल हो यो भनेर ।
त्यत्ती केही नगनि झपपट् दूतहेरू गएर ॥
घोड़ा लाने सुर जब गरे झट् लवैले रिसाई ।
बाणको वर्षा गरि ति सबका हात दीए खसाई ॥४०॥
ती वीर्हेरू अनि सकस भै वीर शत्रुघ्न-पास ।
पौंची हालन् सब कहिदिए आफनू भै उदास ॥
शेष्जी देखी यति सुनिसकी फेरि वात्स्यायनैले ।
शङ्का मन्मा हुन गइ तहाँ सोधनूभो खुशीले ॥४१॥
पैले आज्ञा म उपर हुँदा शेष ! राम्चन्द्रजीले ।
वन्मा सीताकन त्यजनुभो धोबिका दुर्वचन्ले ॥
यत्ती सूनी अनि जनकजा पौंचिइ कौन ठाउँ ।
काहाँ जन्मे लवकुश दुवै त्यो सबै सुन्न पाऊँ ॥४२॥
वात्स्यायन्को सुनि यति सवाल् शेषले प्रेमसाथ ।
फेरी वर्णन गरदछु भनी स्वस्थ पारेर गाथ ॥

ब्रह्मर्षे ! श्रीरघुपति पनी रावणलाइ मारी ।
खुश् भै राज्यै अवध पुरमा गर्दथे भै तयारी ॥४३॥
यै मौकामा जनकतनया गर्भिणी झट् हुनूभो ।
पाँच् मैनाको गरभ जब भो रामले सोधनूभो ॥
सीते ! तिम्रो कुन विषयमा मन्सुबा हुन्छ हाल ।
त्यस्को पूर्णै म गरिदिउँला सो कहू भै बहाल ॥४४॥
यस्तो राम्को सुनिसकि वचन् जानकी लाज मानी ।
भन्छिन् ताहीं रघुवर सँगै घूमटो केहि तानी ॥
जस्को स्वामी त्रिभुवनपती होइबक्सिन्छ आफै ।
हुन्थ्यो कुन्चीज मकन न अहो भोगमा बाँकि बाँकै ॥४५॥
यस्तो हो लौ तइपनि विभो ! भन्दछू हर्षसाथ ।
दोहद् मन्को अब दिल दिई सूनिबक्स्योस नाथ !
लोपामुद्रा प्रभृति मुनिका पत्निहेरू अनेक ।
तिन्को दर्शन् गरन फगतै दोहदै हुन्छ एक ॥४६॥
पैलेदेखी दरशनविषे मन्सुबा मन्महाँ थ्यो ।
मैले भन्नै नसकि बहुतै काल है बित्न गैगो ॥
ताहाँ पौंची रङ्गबिरङ्का वस्त्र भूषण् दिएर ।
सीताको यो सुनिकन कुरा भन्दछन् राघवेश ॥४७॥
आशीर्वादै लिइ अनि यहाँ फर्कुँला खुश् भएर ।
सीते ! तिम्ले जुन वर लियौ त्यो त हो खूब वेश ॥
वन्मा पौंची मुनि गृहिणिको दर्शनैको निमित्त ।
भोलीपल्टै तिमि पुगउली खूब भै दत्तचित्त ॥४८॥

येती सीताकन जुन दिनै रामले भन्दिनभो ।
तेसै रात्मा नगरबिचमा घेर चर् भेजनूभो ॥
हर्दिन् चर्ले रघुवर-गुणै गान मात्रै सुनेर ।
राम्का छेऊ विनति गरथे दीलमा खुश् भएर ॥४६॥
तेस् रात्मा ती चरहरु पनी घर्महाँ क्वै धनीका ।
पौंची चेवा गरन डटिगै बन्नगै खूब नीका ॥
बत्ती बल्थ्यो बसि पलङ्मा हर्षितै भै नताङ्गी ।
दूधै ख्वाउँदै सुतकन तहाँ भन्दथिन् पारि भङ्गी ॥५०॥
बाबू ! दूध् पान् गर दिल दिई फेरि ता पाइँदैन ।
राम्को रैती भइ मनुजको जूनि मिल्ने त छैन ॥
राम्को खाली भजन गरदा जन्मनू मेटिइन्छ ।
राम्को रैती बुझ तिमिकनै मुक्ति ता हातमै छ ॥५१॥
यस्तो कीर्ती सुनि चरहरू पौंचि फेर् धेर् घरैमा ।
राम्को कीर्ती सुनि खुशि भई हिंड्दथे खूब् चयन्मा ॥
छैटौं गुप्तीपुलिस जुन हो धोबिटोल्मा पुगेर ।
हल्ला सुन्दा दबिकन तहाँ सुन्न थाल्यो बसेर ॥५२॥
क्वै धोबीले अति कुपित भै केशमा चट्ट पक्री ।
कुट्थ्यो भार्याकन पयरले क्यै नलीएर फिक्री ॥
दिन्भर् बस्थिस् पर-गृहमहाँ बात नाघेर मेरो ।
निक्ली जा लौ अब घर नबस् मुख् म हेर्दीनँ तेरो ॥५३॥
यस्तो देखी तब त बुढिया धोबिको जो छ माता ।
थाली भन्नै कसुर नभई क्यान कुट्छस् विधाता ॥

बस्ता अन्तै दिनभर उसै क्यै नदेखी कुचाल ।
त्याग्नू होला जुनरित बुझिस् लौ सह्यार् बाबु हाल ॥५४॥
आमाको यो सुनिकन वचन् फेरि तेस्को त पुत्र ।
रिस्ले पूर्णै भइकन तहाँ बक्छ त्यो यत्रतत्र ॥
आएकी लौ परगृह बसी राखदा येसलाई ।
राम्मा मैमा फरक कुन भो भन्दिनूहोस्-न माई ॥५५॥
लङ्कामाहाँ वरषदिनतक् रावणैले लगेकी ।
लीयो सीताकन पनि अहो ! छन् भनी खूब चोखी ॥
त्यो राजाले जुन जुन कुरा गर्छ त्यै नीति ठानी ।
चल्ने मेरो मनसुब कसै हुन्न यस्तै छ बानी ॥५६॥
दोहोऱ्याई यहि वचन ता भन्न थाले र त्यस्ले ।
खड्गै हातमा चर पुरुष ता ली बढ्यो खूब रिस्ले ॥
संझी रामको अनि वचन ता मानु योग्यै नठानी ।
फर्क्यो त्यो चर् सँगिहरु जहाँ थे तहीं दिक्क मानी ॥५७॥
सून्यो के के कहु भनि तहाँ सोधि पाँचै जनाले ।
कीर्ती रामको जुन जुन सुने त्यो सबै भन्न थाले ॥
छैटौंचाहीं चर जउन थ्यो लामु श्वासै लिएर ।
आफ्नू हालत् सब कहिदियो दुःखितै धेर् बनेर ॥५८॥
सूनी त्यो हाल् सब चरहरू दैत्य लिएर धेर ।
भन्छन् रामको पुगि हजुरमा दुष्टको बात् सुनेर ॥
वर्णन् गर्नू अनुचित अती पर्छ लौ निश्चयैले ।
प्रातःकाल्मा सब चरहरू पौंचिहाले क्रमैले ॥५९॥

श्रीराम्‌जीले गरिसकि सबै आफ्नू नित्यकर्म ।
पाल्नूभो है कचहरिविषे निर्णयै गर्न धर्म ॥
देखी ताहाँ रचहरुकनै डाकि एकान्तमाहाँ ।
भन्नूभो यो तिमिहरु पुग्यौ आजको रात काहाँ ॥६०॥
कस्तो भन्छन्‌ मकन चर हो ! ई प्रजाहेरु हाल ।
कत्ती केहि नगरि फरकै लौ बताओ हवाल ॥
मर्जी यस्तो सुनिकन तहाँ पाँच चर्‌ले क्रमैले ।
अर्जी गर्छन्‌ मधुर स्वरले जो थियो खुशि मन्ले ॥६१॥
हे नाथ्‌ ! कीर्ती नगर-भरमा गान गर्छन्‌ सबैले ।
नीती माफिक्‌ अवधपुरको राज्य गर्दा हजूर्ले ॥
यस्तो कीर्ती सगरप्रभृती भूपको फैलिएन ।
जस्तो निर्मल्‌ हजुर प्रभुको बढ्नगै बाँकि छैन ॥६२॥
जस्को सारा नगर-भरमा रैतिहेरु तमाम ।
रोगादीका नपरि वशमा गर्दछन्‌ आफ्नु काम ॥
बूढो घर्मा छदइ शिशुको प्राण नाश्‌ हुन्न कैले ।
पूरा आयू नपुगि मरणै हुन्न है जैले तैले ॥६३॥
योगीश्वर्‌ले भजन गरदा हृतकमल्‌भित्र जस्तो ।
साक्षातकारै गरछन हरे !! रामको मूर्ति यस्तो ॥
भाग्यै हाम्रो असल हुनगै मिल्छ लौ हेर हर्दम्‌ ।
कस्तै तारीफ्‌ गरिकन हटे ता सबै क्यै नभै कम्‌ ॥६४॥
छैटौं चर्‌को वदन मलिनै देखदा रामजीले ।
भन्नूभो लौ भन तिमि पनी लौ यथावत्‌ क्रमैले ॥

यस्तो रामको सुनिकन वचन् दुष्टका साथ फेरि ।
धोबीको त्यो खबर त कह्यो रामकै तर्फ हेरी ॥६५॥
यस्तो त्यस्को सुनि दुरपवाद् खड्ग हातमा लिएर ।
मार्नैलाई ठिक भइ म ता चट्ट क्यै घोरिएर ॥
संम्भी नाथको हुकुम झटपट् थामिएँ त्यै बखत्मा ।
हुकूम् पाए दुइ टुक गरी फिर्दछू एक बात्मा ॥६६॥
यस्तो त्यस्को सुनिकन वचन् व्रजकै चोट माफिक् ।
मूर्छा सीतापति परनुभो ताहिं नै बन्न गै दिक् ॥
यो चाल् देखी तिनि चरहरू फूर्तिका साथ फेरि ।
हाँके पङ्खाहरु पनि यहाँ क्यै नलीएर देरी ॥६७॥
केही कालैपछि जब खुल्यो होश सीतापतीको ।
भन्नूभो ती चरहरुकनै बात झट् आफ्नु मन्को ॥
चर् हो ! फुर्तीसँग भरतका घर्महाँ पौंचिएर ।
डाकी ल्याओ हुकुम हुन गो रामको नै भनेर ॥६८॥
यस्तो मर्जी मिलि चरहरू ताहिं चाँडै गएर ।
ल्याए डाकी भरतकन ती सोहि संचार् कहेर ॥
देखी रामको मलिन वदनै सोधनूभो भरत्ले ।
के भो यस्तो किन लिनुपऱ्यो फिक्रि बेकाम् हजूर्ले ॥६९॥
यस्तो अर्जी सुनि भरतको आँसुहेरू पुछेर ।
विश्वास् ठूलो लिइकन तहाँ भन्नुभो दिक् भएर ॥
बाबू ! तिम्ले सुन अब सबै दुःखको मूल हाल ।
आज्ञा मेरो लिइकन बुझयौ दुःख चाँडै समाल ॥७०॥

कीर्ती जस्को भुवनतलमा जीवितै तेसकै छ ।
होला जस्का अपयश यहाँ जीवितै होस् मृतै छ ॥
इक्ष्वाकूको असल कुल यो आज मैले बिगारें ।
मैले गर्दा मनुकुल हरे ! भ्रष्ट भो चाल पाएँ ॥७१॥
देख्यौ बाबू ! यसरि अपवाद् धोबिले आज लायो ।
तेही सुन्दा हृदय बिचमा खेद जागेर आयो ॥
सीतालाई गरछु कि त त्याग् प्राण त्याग् गर्छु मेरो ।
येती बातै गरि रघुपती लड्नुभो लाइ घेरो ॥७२॥
मूर्छा सीतापतिकन तहाँ देखि फेरी भरतले ।
ब्यूँझाए झट् जलहरु छिटी खूब नै कोशिशैले ॥
भन्छन् फेरी भरतजि पनी एक नीचो जनैले ।
अप्टिक् लायो भनिकन उसै अत्तिने लौ हजूर्ले ॥७३॥
साम्ने सबका जनकतनया वह्निशुद्धै भएर ।
ब्रह्मादीको लिइ अनुमती आफुले खुश् बनेर ॥
ल्याई बक्स्यो अघि त प्रभुले हाल यो क्षुद्र बात ।
सुन्दा यस्तो पिर लिनु प्रभो ! योग्य देखिन्न यो त ॥७४॥
गंगाजीको जलबिचमहाँ केहि मैला परेर ।
होला के जल् अशुचि नृपते ! पर्न गो यो भनेर ॥
तेस्तै ब्रह्मा प्रभृति सुरले गाइएको हजूर्की ।
कीर्ती होलिन् कसरि भगवन् ? बेकसूर्मा त उल्टी ॥७५॥
यस्ता रीत्को सुनि भरतको बात श्रीरामजीले ।
भन्नूभो तै सुन भरत ! है ठीक् भन्यौ बात तिम्ले ॥

चोखी सीता छन भनि बुझ्यौ जान्दछू खाश मैले ।
तेस्तो होला तइपनि कुयश् सुन्न शक्तीनँ ऐले ॥७६॥
सूनी यस्तो कसरि मइले घोर लोकापवाद ।
राखूँ सीताकन अब म के भाइ लेऊ न याद ॥
की ता वन्मा लगि जनकजालाइ छोडेर आऊ ।
हत्या गर्छू कि त अति तिखा धारको खड्ग ल्याऊ ॥७७॥
यस्तो सुन्दा अतिशय कडा रामजीको हुकूम ।
लोटे मूर्छा परि भरतजी हून जाँदा जुलूम ॥
वात्स्यायन्ले सुनि यति कुरा शेषजीबाट ताहाँ ।
सोध्नूभो यो खुशिसित सवाल् जो थियो चित्तमाहाँ ॥७८॥
यस्ती साध्वी जनकतनयालाइ यस्तो कलङ्क ।
व्यर्थै लायो किन रजकले बन्न गै खूब चङ्ग ॥
वात्स्यायन्को सुनि सब कुरा भन्दछन् शेष फेरि ।
पैलेदेखिन् सुन अब भनी सामनेतर्फ हेरी ॥७९॥
थीए राजा जनक कहिने क्यै मिथीलापुरीमा ।
साहै दानी भुवनतलका साधुका एक सीमा ॥
रैतीले ता ति नरपतिका जोतदामा अकस्मात् ।
भेटी ल्यायो जनक नृपथ्यैं बालिकालाइ तस्मात् ॥८०॥
भेट्ने फाली हुनगइतहाँ तेसकै नाम् लिएर ।
सीता नामै धरि जनकले पाल्नुभो दिल् दिएर ॥
सीताजी हुन् अति रुपवती शील लावण्यावाली ।
देख्तैमा तीकन जनकको दील हुन्थ्यो बहाली ॥८१॥

एक् दिन् सीता टहलन भनी बागमा पौंचिएकी ।
देखिन् कोही सुघिनिकन ता स्वामिसाथै हिंडेकी ॥
तेस्ले सोद्धा खुशिसित तहाँ भन्न थाले सुघाले ।
आफ्नी प्यारीकन खुशि गरी खूब नै हर्षताले ॥८२॥
होलान् सारा भुवनभरमा एक भूपाल राम ।
तिन्की सीता महिषि बननिन् खूद जो लक्ष्मिधाम ॥
सीतासाथै रघुपतिजिले वर्ष धेरै हजाराँ ।
गर्दैं राज्यै रिपुकुलकनै ध्वस्त पारेर सारा ॥८३॥
आखीरैमा लय पनि हुनन् आफनै धाममाहाँ ।
तिन्को होला अतिशय ठुलो नित्य नै कीर्ति याहाँ ॥
यस्तो सुन्दा तब जनकजा खूशि भै जोडिलाई ।
छोपौं भन्ने हुकुम दिनुभो केटिलाई समाई ॥८४॥
आज्ञा यस्तो मिलि सखिहरू फूर्तिसाथै गएर ।
पक्री ल्याए दुइ शुककनै ताहिं नै खुश् भएर ॥
भन्छिन् सीता निडर बन हे हाल हे पक्षिराज ।
को हौ काहाँ तिमि बसदछौ गर्दछौ कौन काज ॥८५॥
सीतारामको कसरि तिमिले चाल पायौ चरित्र ।
सुन्दा ऐले मकन हुनगो हर्ष साहै विचित्र ॥
मेरा साम्ने गर अब बयान् हाल श्रीरामजीको ।
खूशी साथै शुकवर ! सबै आफनू ज्ञान् जतीको ॥८६॥
यस्तो आज्ञा सुनिकन तहाँ केहि बेर् घोरिएर ।
भन्नै थाल्यो शुक पनि तहाँ हर्षितै खुब् बनेर ॥

राम्को कीर्तन् गरिकन बुझ्यौ कोहि सक्तैन सारा ।
संक्षेपैले गरदछु म ता दीइ खाली इशारा ॥८७॥
छन् क्यै ज्ञानी मुनिहरुमहाँ श्रेष्ठ वाल्मीकि नाम ।
वन्मा तिन्को बहुत छ असल् आश्रमै पुन्यधाम ॥
त्यै आश्रम्का रुखबिचमहाँ आफनू गुँड् बनाई ।
बस्थ्यौं हामी दुइ शुक शुकी ताहिं साह्रै रमाई ॥८८॥
वाल्मीकीले निशिदिन तहाँ भावि रामायणैको ।
शिष्यैद्वारा किरतन पनी गर्दथे मानि नीको ॥
सोही हाम्ले सुनिकन यहाँ गर्दछौं त्यै बयान ।
सूनी हामीकन नथुन हे कन्यके ! देउ जान ॥८९॥
राजा छन् हे दशरथ ठुला खास् अयोध्या पुरीमा ।
उन्का छोरा त्रिभुवन धनी राम छन् वीरसीमा ॥
विश्वामित्रैसित रघुपती भाइसाथै लिएर ।
आई याहाँ सब नृपतिका सामनेमा डटेर ॥९०॥
भाँची बल्ले जनक नृपको त्यो धनू क्यै नटेरी ।
जीती पण्मा गरनन बिहा श्रीसितालाइ फेरि ॥
सीतासाथै रघुपितिजले वर्षहेरू हजारौं ।
राज्यै गर्नन् कसरि चरितै हाल सब् बिन्ति पारौं ॥९१॥
को हौ कन्ये ! तिमि किन अहा !! रामको यो चरित्र ।
सुन्दा साह्रै खुशि हुन गयौ मान्दछू यो विचित्र ॥
सूँघाको यो सुनिकन वचन् केहि हाँसेर फेरि ।
भन्छिन् ताहाँ जनकतनया पक्षिका तर्फ हेरी ॥९२॥

सीता भन्ने मकन तिमिले जान हे पक्षिराज !
सुन्दा राम्को चरित मकनै हर्ष भो भारि आज ॥
जैले मेरो रघुपतिसँगै हुन जाला विवाह ।
छोडीद्यूँला जब तिमिकनै जाउला बेप्रवाह ॥९३॥
तब्तक् याहाँ खुशि भइ अती रामकै नै सुवृत्त ।
गाना गाऊ मधुर स्वरले बन्न गै एकचित्त ॥
सीताको यो सुनिकन वचन् काँपि ठूलो डरैले ।
बिन्ती केही गरछिन शुकी चट्ट गन्‌गन् स्वरैले ॥९४॥
वन्मा हर्दम् घुमि घुमि चरी आफ्नू पेट भर्ने ।
आफ्नू मन्का चिजहरु टिपी खाइ खुप् मस्त पर्ने ॥
यस्ता हामी वनचरहरू राजदर्बारमाहाँ ।
सीते ! हुन्थ्यौं गर खुब गबड् जालमा बस्न काहाँ ॥९५॥
फेरी अर्को गर तिमि दया गर्भिणी छू म हाल ।
एकान्तैमा प्रसव गरने हामरो यो छ चाल ॥
तस्मात् देऊ अब तिमि बिदा हामिलाई खुशीले ।
बच्चा हुर्कैपछि बरु यहाँ आउँला शुद्धशीले ? ॥९६॥
पोथीको यो सुनि सब कुरा तै नटेर्दा सिताले ।
भालेचाहीं शुक पनि उहीं भन्न थाल्यो पिरैले ॥
सीता ! यस्तो नगर निठुरी काम यो साहसैले ।
मेरी भार्याकन त फुरसद् देउ है भन्छु मैले ॥९७॥
बच्चा पारी अति जतनले पालना वेश् गरेर ।
एकान्तैमा पछि म फिरुँला साथमा ई लिएर ॥

यस्तो तेस्को सुनिकन कुरा भन्दछिन् जानकीले ।
केही हाँसी शुककन तहाँ टारने संमतीले ॥९८॥
जाऊ जाने मन यदि भए मन्सुवा हुन्छ जाहाँ ।
पोथीलाई सकदिन बिदा गर्न है राख्छु याहाँ ॥
यस्तो तिन्को सुनिकन कुरा प्राणप्यारी-वियोग ।
खप्नै चाहीं मदरछु बरू छोडि संसार-भोग ॥९९॥
यस्तो सुन्दा वचन पतिको क्रोध साह्रै उठेर ।
भन्छे सीताकन सुघिनिले सामुमा खुद् डटेर ॥
जस्तो रीतले मकन तिमिले पारिहाल्यौ वियुक्त ।
देख्ता-देख्तै क्यहि नलि विवेक् गर्भिणीलाइ व्यक्त ॥११००
तेस्तै जैले तिमि पनि बुझ्यौ गर्भिणी नै बनौली ।
रामजी देखिन् हुन गइ वियोग् एकली भै बसौली ॥
येती स्रापै दिइकन शुको प्राण त्यागै गरेर ।
सबका साम्ने चढिकन विमान् स्वर्ग नै पौंचि हेर ॥ १ ॥
यो चाल् देखी शुक पनि यिनैलाइ दुर्वाच्य बोली ।
छुट्टयाऊनै सकुँ भनि डुब्यो जलमहाँ क्यै नबोली ॥
सीताजीको यहि त अपमान् हुनगै फेर् रिसैले ।
पायो नीचो जनम यसरी धोबिको त्यो शुकैले ॥ २ ॥
येही हेतू हुन गइ तहाँ जानकीलाइ हेर ।
त्यो धोबीले नबुझि विहकै दोष दीयो नि धेर ॥
शङ्का तिम्रो जुन मनविषे थ्यो परेको मईले ।
सिद्धयाएँ त्यो सब वरणनै साबिकै भन्छु ऐले ॥ ३ ॥

देखी मूर्छित् भरतकन ता चट्ट श्रीरामजीले ।
शत्रुघ्नैको सँग गइ अनी भन्नुभो दिक्क मन्ले ॥
पौंची दौडी चरहरु पनी चट्ट शत्रुघ्न काहाँ ।
गर्दा बिन्ती गवड गरि शत्रुघ्न आएर ताहाँ ॥ ४ ॥
पाऊमा श्रीरघुपतिजिका पस्रि देखी हवाल ।
सोध्या के भो भरत किन छन् मूर्छितै के छ चाल ॥
भाईको यो सुनिकन सवाल् आफई रामजीले ।
धोबीको त्यो खबर कहनूभो अती खिन्नताले ॥ ५ ॥
बाबू ! यस्तो सहनु अपवाद् चाहिं सीताजिलाई ।
त्यागै गर्छू कि त बुझ तिमी छोड्दछू प्राणलाई ॥
यस्तो सुन्दा अधिक पिरले वीर शत्रुघ्न फेरि ।
मूर्च्छामाहाँ परि पनि गए क्यै नलोएर देरी ॥ ६ ॥
खुल्यो मूर्छा जब त अलिबेर् बाद शत्रुघ्नजीको ।
भन्छन् साह्रै विनय रितले सामने रामजीको ॥
हे नाथ् ? जे जे अधमहरुले भन्दछन् सोहि हाल ।
पत्यार् गर्नू कसरि ? प्रभुले लीनुभो कौन चाल ॥ ७ ॥
गङ्गाजीको जल सरि सफा कीर्ति ऐले तमाम ।
तीन् लोकैमा भरिपुर छ है जानकीको विकाम ॥
धोबीले जो गरछ बदनाम् हुन्छ के ? हानि हाम्रो ।
हूँदा सूर्योदक उलुकले देख्छ हर्दम् अँध्यारो ॥ ८ ॥
येती सुन्दा भरतकन जो बात आज्ञा भएथ्यो ।
शत्रुघ्नैको सँग पनि त्यही रामको मर्जि भैगो ॥

सुन्दा त्यो सब् रघुपतिजिको बात शत्रुघ्न चट्ट ।
मूर्छा भैगे हृदय बिचमा पीर पर्दा बिछट्ट ॥ ९ ॥
मूर्छित् देखी रघुपतिजिले चट्ट शत्रुघ्नलाई ।
लक्ष्मण्काहाँ चरहरु पनी भेजनूभो अहाई ॥
लक्ष्मण्जीका सँग कहि खबर् ती सबै फर्कि आए ।
आफ्ना साथ्मै झटपट गरी लक्ष्मणैलाइ ल्याए ॥१०॥
देखी मूर्छित् भरत र अनी वीर शत्रुघ्नलाई ।
भन्छन् लक्ष्मण् रघुपतिसितै के भयो आज दाई ?
लक्ष्मण्को यो सुनिकन सवाल् चट्ट श्रीरामजीले ।
धोबीको नै सब सहनुभो हाल त्यो बेखुशीले ॥११॥
लक्ष्मण्जीले सुनिसकि सबै बात साहै बढेर ।
मुस्केरा हालि केही कहिकन त्यहि नै बस्नुभो दिक् भएर ॥
देखी लक्ष्मण्कन पनि अती दुःख शोकातिखिन्न ।
साहै दिक्कै भइ रघुपती लाग्नुभो फेरि भन्न ॥१२॥
पैले हाम्रो मनुकुलमहाँ भूपहेरू प्रतापी ।
जन्मी छोडे पृथिवितल यो कीर्ती तिन्को तथापि ॥
ढाकी सारा भुवनभरमा देखिइन्छन् तमाम ।
उस्तो उज्ज्वल् कुलकन गरें आज मैले विकाम ॥१३॥
क्यारूँ ! ऐले मकन परदा शोक यस्तो अघोर ।
अक्कल्बन्दै सब भइसक्यो बुद्धिको छैन जोर ॥
आज्ञाकारी अघि सब थियौ भाइहेरू सदैव ।
शिक्षा गर्नें खुद बनिगयौ आज बन्दा कुदैव ॥१४॥

श्रीराम्चन्द्रजिको सुनेर इ वचन् * लक्ष्मण् पनी नम्र भै ।
गर्छन् बिन्ति सितेशका हजुरमा * आफ्ना मनैको त क्यै ॥
डाकी धोबिकनै म सोध्छु रघुनाथ ! * के भन्छ तेस्ले कुरा ।
यस्को निर्णय छोडि क्यान यसरी * ली बक्सियो शोक् पुरा १५
यस्तो लक्ष्मणको सवाल् सुनिसकी * श्रीरामजीले पनि ।
भन्नूभो दिलको कुरा जुन थियो * अत्यन्त दुःखित् बनी ॥
हे भाई ! सुन कीर्तिका निमतिमा * चोखी सिताजीकन ।
ऐले त्यागनमा तयार छु म ता * सुन्दीनँ यो गन्थन ॥१६॥
कीर्ती नष्ट हुने भयो यदि भने * तेस्का निमित्तै भनी ।
राज्यै त्यागन तयार बन्दछु म ता * सर्वस्व त्याग्छू अनि ॥
सीता त्याग् गरनू भयो कठिन के * तिम्लाइ त्यागने म छु ।
यस्मा उत्तर क्यै नदेउ तिमिले * सुन्दीनँ केही कछु ॥१७॥
धोबीलाइ बुझाइ आज तिमिले * हप्काइ सोद्धामहाँ ।
त्यस्ले हैन भनोस् तथापि मइले * स्वीकार गर्थें कहाँ ॥
तस्मात् छोड सबै कुरा अब तिमी * वन्मा सिताजीकन ।
छोडी आउ कि खड्गले अति तिखो * मैलाई टुक्र्याउन ॥१८॥
यस्तो श्रीरघुनाथको सुनि कुरा * लक्ष्मण्जिले मन्महाँ ।
दुःखी भैकन बोल्न केहि नहुँदा * गर्छन् गवड् क्यै तहाँ ॥
मारे खास जननीकनै लिइ हुकूम् * आफ्ना पिताको पनि ।
भन्छन् है अघि जामदग्न्य-मुनिले * आज्ञा गुरुको भनी ॥१९॥
क्यारूँ ! आज परें म सङ्कटमहाँ * यो काम गर्छू भनी ।
लक्ष्मणले रघुनाथको हजुरमा * बिन्ती चढाए अनि ॥

हे रामचन्द्र ! अयोग्य हो तइपनी * हुकुम् हुनाले गरी ।
सीताजीकन छोड्दछु वनविषे * आज्ञा शिरोपर् धरी॥२०॥
यस्तो लक्ष्मणको सुनेर विनति * श्रीरामजीले पनि ।
भन्नूभो तिमिबाट यो दिल बुझयो * खूशी भयो है भनी ॥
दर्शन् तापसिको म गर्दछु भनी * भन्थिन् सितैले पनि ।
लैजाऊ तिमिले त्यहीं छल गरी * हुकुम् भयो है भनी ॥२१॥
आज्ञा श्री रघुनाथको यति लिई * सुस्वयार हालीकन ।
आँसूको भल नै बगाइ घरमा * पौंच्या अनी लक्ष्मण ॥
डाकी चट्ट सुमन्त्रलाइ झटपट् * रथमा सवारी गरी ।
सीताको दरबारमा अनिपछी * लक्ष्मण् पुगे सर्सरी ॥२२॥
सीते ! आज हुकूम् भयो मकन ता * सिताजिलाई लिई ।
वन्मा तापसिहेरुको खुशिसितै * दर्शन् गराई दिई ॥
यिन्को मन्सुब पूर्ण पार तिमिले * भन्ने रघूनाथको ।
आज्ञा तेहि शिरोपरै धरि यहाँ * हाजिर् भएकै छु यो ॥२३॥
यस्तो लक्ष्मणको सुनेर विनती * खुश् भै सिताजी पनि ।
नाना वस्त्र विभूषणादि लिनुभो * दीनेछु ताहाँ भनी ॥
दासीको पकडेर हात खुशिले * ढोकामहाँ निस्कँदी ।
लोटिन् चट्ट सिता सङ्गरतटमा * अल्भेर ठक्कर् दिई ॥२४॥
यस्को केहि विचार् नराखि खुशिले * बाहीर निस्कीकन ।
लक्ष्मणका सँग रथ्महाँ चढनुभो * जान्छू भनी झट् वन ॥
घोडा हाँक सुमन्त्र फूर्तिसित लौ * भन्ने हुकूम् यो सुनी ।
हाँक्दामा हय कत्ति डेर् नचलदा * भन्छन् सुमन्त्रै गुनी ॥२५॥

हे लक्ष्मणजि ! कसेर कम्मर अती * चूटें इ घोड़ाकन ।
क्यारूँ ! तैपनि हिड्दईनन इ ता * कारण् पऱ्यो लौ कुन ॥
यस्तो अर्जि सुमन्त्रको सुनिसकी * लक्ष्मणजिको मर्जि भो ।
धैर्यै लीकन जोरले कुटि रथै * तिम्ले चलाऊ छिटो २६
यस्तो लक्ष्मणको मिली अनुमती * ठोकेर घोड़ाकन ।
सो रथलाइ सुमन्त्रले बल गरी * थाले र दौडाउन ॥
लाग्यो दक्षिण नेत्र जानकिजिको * फुर्नै बडा जोरले ।
बायाँ तर्फ भएर पक्षिहरु ती * घुम्थे ठुलो सोरले ॥२७॥
यो देखीकन भन्दछिन् जनकजा * लक्ष्मणजि ! के चाल हो ।
दर्शन् तापसिको म गर्न हिंडदा * देख्छू शकून् नीच यो ॥
कल्याण् होस् रघुनाथलाइ उनका * भाई प्रजालाइ नै ।
कोही कष्ट नहोस् सदा सुखि रहून् * दुःखी नहोस् लौ कुनै २८
सीताका इ कुरा सुनेर मनमा * साह्रै ठुलो पीर् परी ।
लक्ष्मणको स्वर बन्द भैकन तहाँ * आँशू गिऱ्यो खर्खरी ॥
बाटामा मृगलाइ देखि वनका * बयाँ तिरै कूद्ने ।
सीताले तब भन्दछिन् शकुनको * बूझेर त्यो दोष् दिने॥२९॥
ठीकै हो रघुनाथलाइ अहिले * छोडेर हिंड्दामहाँ ।
देखिन्छन् यसरी ! अहो अपशकुन् * मेरो अकस्मात् यहाँ ॥
स्त्रीको स्वामि सरी ठुलो अरु कुनै * हूँदैन द्यौता भनी ।
भन्छन् वेद पुराणहेरु हरदम् * छोडें म ता तैपनि ॥३०॥
यस्तै तर्क वितर्कका सब कुरा * सीताजि गर्दै थिइन् ।
पापको निर्मल गर्नलाई चतुरी * गङ्गा तहाँ देखिइन् ॥

सीताको तब बाहु पक्रि बललें * हीफाजतै खुब् गरी ।
लक्ष्मण्ले रथबाट झारनुभयो * संझेर माता सरी ॥३१॥
डूँगाबाट झरेर जाह्नविकनै * पक्रेर हातैमहाँ ।
सीतालाइ लिएर लक्ष्मण पनी * पौंचे र जङ्गल्महाँ ॥
काँढा बिझन गएर ठक्कर समेत् * लागेर दुःखित् भई ।
साह्रै तक्लिफ भो र जानकि तहाँ * मुस्क्यार हाल्दै रुँदी ३२
थीयो त्यो घनघोर जङ्गल अती * देख्तामहाँ हर्दम ।
बोहोरी र बबुर् चिरौंजि र खयर् * इत्यादि थीए टम ॥
टोड्काबाट उँचो गराइकन शीर् * फुंकार गर्ने ठुला ।
थीए सर्पहरू भयङ्कर अती * काला र कोही निला॥३३॥
थीए स्याल र सिंह फेरि चितुवा * गैंडा र ब्वाँसाहरू ।
त्यस्तो भीषण जङ्गलैकन यहाँ * वर्णन् कसोरी गरूँ ॥
देखी त्यो वनलाइ जानकि पनी * दुःखित् बहुतै हुँदै ।
शङ्का पर्न गएर लक्ष्मणकनै * भन्छिन् बलैले रुँदै ॥३४॥
ऐले लक्ष्मण ! देख्तछू म त ठुलो * जङ्गल् अती दारुण ।
उल्टा देख्छु शकुन् पनी हुन गयो * बत्लाउ कुन् कारण ॥
आश्रम् ता कहिं देखिदैनन मुखै * तिम्रो मलिन् देख्तछु ।
त्याग्नूभो कि ! मलाइ राघवजिले * भन्ने म ता ठान्दछु ॥३५॥
यस्तो जानकिको सुनीकन वचन् * लक्ष्मण्जि ता क्यै पनि ।
बोलेनन् स्वर रुद्ध भैकन तहाँ * यो यो कुरा हो भनी ॥
केही दूरतलक् हिंडेर अनि ता * फेर् जानकीले तहाँ ।
सोध्नूभो कुन कारणै हुन गयो * लीएर जान्छौ कहाँ ॥३६॥

यस्तो जानकिले ढिपो गरि अती * सोधिन् र लक्ष्मणजिले ।
धोबीको सब हाल वर्णन गरे * साम्नेमहाँ दुःखले ॥
त्यो सुन्दा तब जानकी गिरिगइन् * जस्तो ठुलो आँधिले ।
गिर्छन् वृक्षहरु उहि ठिक गरी * अत्यन्त नै शोकले ॥३७॥
ब्यूँभी जानकि भन्दछिन् अधिक नै * दिग्दार मन्मा लिई ।
आँसूको भल नै बगाइ हरदम् * सुस्केर धेरै दिई ॥
मेरा खातिर सेतुबन्धन गरी * राक्षस् कुलैको पनि ।
जस्ले नाश् गरनूभयो मकन ती * त्यागनू भयो के भनी॥३८॥
शुद्धै यो छ भनेर जानि मकनै * एक् धोबिका बातले ।
त्यागनू यो रघुनाथको छइन काम् * मेरो खराब् भाग्यले ॥
पाऱ्यो येहि तहाँ विलाप गरदा * मूर्छा परिन् शोकले ।
यो देखीकन वीर लक्ष्मण पनी * रोए ठुलो पीरले ॥३९॥
मूर्छा खुल्न गयो र जानकि पनी * भन्छिन् तहाँ दिक्क भै ।
श्रीराम्चन्द्रजिलाइ अर्जि रुपले * सन्देह भन्छू म क्यै ॥
हे राम्चन्द्र ! मलाइ शुद्ध छ भनी * थाहा हुँदैमा पनि ।
ऐले त्यागनुभो हरे ! किन उसै * बेदोषमा के भनी ॥४०॥
तन्मन्ले भजनै गरी चरणको * दासी बसेकी थिएँ ।
ऐले त्यागनुभो अकारथमहाँ * त्यस्तो विराम् के गरें ॥
मन्मा गर्दछु प्रार्थना म त प्रभो ! * मेरो हरेक् जन्ममा ।
दासी हुन मिलोस् मलाइ भगवान् ! * यै भारतै वर्षमा ॥४१॥
सासूहेरु सबैमहाँ छ दिनदिन् * मेरो प्रणाम् भन्दिनू ।
लक्ष्मणजी ! तिमिले पनी मकन ता * मन्मा सधैं संभनू ॥

येती बात सुनेर गर्दछु खबर् * श्रीरामका सामुमा ।
जान्छू लौ म यहीं छ वाल्मिकिजिको * आश्रम् यही वन्महाँ॥४२॥
यस्तो बात कहेर आँसु पुछ्दै * लक्ष्मण् हिंडेथ्थे जब ।
ठट्टा हो कि भनेर जानकि तहाँ * खुब् हेर्न लागिन् तब ॥
नाऊमा बसि जाह्नवीकन तरी * देवर् गए लौ भनी ।
साँचै त्याग गरे मलाइ त भनी * सीता रुनूभो अनि ॥४३॥
ठूलो घोर विलाप् गरेर जब ता * मूर्छा हुनूभो सिता ।
वनूजन्तू पनि दङ् अती हुन गए * त्यो चाल झट् देखदा ॥
आफ्ना प्वाँख भिजाइ हाँसहरुले * ल्याएर पानीकन ।
सीताको शिरमाथि प्रेमसित नै * तो गर्दथे सेचन ॥४४॥
हात्तीले पनि सूँडबाट खुशिले * ल्याएर धेरै जल ।
सीताजीकन सेचनै गरदथे * ठूलो गरी खलबल ॥
फूले वृक्षहरू बिना समयले * हावा चल्यो खुप् चिसो ।
मूर्छा खुल्न गयो र जानकिजिको * ताहाँ बहुतै छिटो ॥४५॥
गर्दै धेर विलाप मूर्छित पनी * हूँदै वनैमा जब ।
थालिन् रून तहाँ विदेह तनया * आए अकस्मात तब ॥
आफ्ना शिष्यहरू लिएर डुलदै * वाल्मीकि नामा मुनि ।
सोही ठाउँमहाँ ठूलो स्वर गरी * को रुन्छ याहाँ भनी॥४६॥
देखी जानकिले मुनीकन तहाँ * झट्टै प्रणामै गरी ।
विह्वल् भैकन रोदनै शुरु गरिन् * छाती चिरीए सरि ॥
आशीर्वाद् मुनिले पनी दिनुभयो * साथमा पतीको रही ।
धेरैसम्म जिऊ सुपुत्र दुइटा * पैदा गरे यो कही ॥४७॥

सोध्नूभो मुनिले तिनी कउन हौ * छोडी सबै मङ्गल ।
आयौ हाल पतिव्रते ! भन सबै * के काम यो जङ्गल ॥
यस्ता ती मुनिका सुनीकन सवाल् * श्रीजानकीले पनि ।
भन्नूभो म फलानि हूँ यसरि लौ * छोडे मलाई भनी ॥४८॥
यो सुन्दा मुनिले पनी भननुभो * सीते ! नमानी पिर ।
मेरो आश्रममा खुशीसित तिमी * ऐले तुरुन्तै फिर ॥
मेरो वाल्मिकि नाम हो म गुरु हूँ * तिम्रो पिताको पनि ।
तिम्ले आज मलाइ ठान सुभगे ! * मेरै पिता हुन् भनी ॥४६॥
त्याग् गर्दा तिमिलाइ बेकसुरमा * श्रीरामदेखी पनि ।
क्रुद्धै आज मलाइ जान नगरे * यो काम् अयोग्यै भनी ॥
येती बात कहेर वाल्मिकि मुनी * लौ जौं कुटीमा भनी ।
जानूभो र पछाडि पालनुभयो * श्रीजानकीजी पनि ॥५०॥
पौंची आश्रममा अनी मुनिजिले * शिष्यै खटाईकन ।
सीताका निमती बनाइदिनुभो * कूटी अती शोभन ॥
भन्नूभो सब तापसीकन पनी * वाल्मीकिले ई कुरा ।
ई हुन् जानकि रामजीकि महिषी * हेर्चाह गर्नू पुरा ॥५१॥
सीताजी पनि रामनाम मुखले * जप्तै कुटीमा बसी ।
सेवा वाल्मिकिको गरी हरदिनै * फल् खान कम्मर् कसी ॥
बस्तै थिन् दश मास पूर्ण जब भो * पैदा भए बालक ।
दूई सुन्दर नेत्रहर्षक हुँदा * आए अती दर्शक ॥५२॥
कुश्को खण्ड लिएर वाल्मिकिजिले * सब् कर्म गर्दामहाँ ।
जम्ल्याहा दुइ पुत्रको कुश लवै * नाम् राखनुभो तहाँ ॥

ती दूवै सुत शुक्लपक्ष शशि मैं * बढ्दै गएथे जब ।
खुशी भै व्रतबन्ध गर्दिनुभयो * श्रीवाल्मिकीले तब ॥५३॥
ठीक्को फेरि धनू र बाण कवचै * तर्वार ढालैहरू ।
दूवै भाइकनै तहाँ दिनुभयो * वर्णन् कहाँ तक् गरूँ ॥
फेरी वाल्मिकिले पढाउनुभयो * सारा धनुर्वेद् पनि ।
सारा भूतलमा यिनी दुइकनै * दुर्जेय पार्छू भनी ॥५४॥
हात्मा बाण धनू लिएर फिरने * ती पुत्र देखीकन ।
सीताको मनको ठुलो पिर पनी * घट्तै गयो दिन्दिन ॥
उत्पत्ती कुशको र फेरि लवको * मैले बताएँ सब ।
पैलेको सुननूहओस् शुभ कथा * सारा कहन्छू अब ॥५५॥
देखी ती भटको हबीगत सबै * शत्रुघ्नले रिस् गरी ।
भन्छन् ती विरहेरुका विषयमा * दाहा किटी कर्करी ॥
श्रीराम्चन्द्रजिको नजानि बल यो * ऐले बनी निर्भय ।
को हो त्यो बदमाश के सुर गरी * लग्दो भयो त्यो हय॥५६॥
श्री शत्रुघ्नजिको सुनीकन सवाल् * ती भट्हरूले पनि ।
बिन्ती गर्छन रामकै सकलको * बालक् छ यौटा भनी ॥
बिन्ती हो भटहेरुको सुनिलिए * शत्रुघ्नजीले जब ।
सेनानायक कालजित्कन तहाँ * मन्दा भए यो तब॥५७॥
हे सेनापति ! व्यूहको गर तिमी * तैयार चाँडो गरी ।
यो बालक् बुझ हैन खाश शिव हुन् * की निश्चयै हुन् हरि ॥
संग्राम् आज ठुलो हुनेछ सबको * त्यो बालकै साथमा ।
हाम्रा वीरहरू खटाइ तिमिले * लौ भेज रणभूमिमा॥५८॥

यो शत्रुघ्नजिको मिलेर हुकुमै * त्यो कालजित् वीर् पनि ।
फूर्तीसाथ चुनेर वीरकन ता * मै लड्छु ऐले भनी ॥
आफू लागि अगाडि फौजकन ता * आफ्ना पछाडी लिई ।
हिंड्दा भू प्रचलायमान हुन गो * साह्रै ठुलो भार् भई ॥५९॥
देखी ती लवको सुकोमल शरीर् * ती कालजित्ले पनि ।
भन्छन् बालक ! छोड यो हय उसै * राम्को हऱ्यौ के भनी ॥
मेरो नाम छ कालजित् बुझ तिमी * झल्को रघूनाथको ।
तिम्रो देखि दया उठ्यो र मइले * भन्दो भएँ बात यो ॥६०॥
होला बाँचन मुश्किलै नहिं भने * मेरो सँगैमा लड़ी ।
यस्तो बात सूनी तहाँ लव पनी * भन्छन् समाई कड़ी ॥
जाऊ फुर्सद दिन्छु लौ तिमिकनै * राम्कै सँगैमा भने ।
चाहन्छौ तिमिले भने उहिं बसे * यो जिन्दगी राखने ॥६१॥
कोटीको गणना म गर्दिनँ बुझ्यौ * तीमी सरीका विर ।
बत्तीमा पुतली परे सरि यहाँ * खाग् बन्दछन् आखिर ॥
तिम्रो नाम अनर्थ ठान्दछु म ता * काम् त्यो मुताबिक् नभै ।
जीती काल सरी मलाइ तिमिले * सार्थक् बनाऊन है ॥६२॥
यस्तो यो लवको सुनीकन कुरा * सारा ति सेनापति ।
गर्छन् उत्तर योग्य तेस् बखतमा * लीएर कोपै अति ॥
तिम्रो नाम कऊन हो कुल पनी * देश् फेरि तिम्रो कुन ।
पैदल् छौ तिमि ता म छू रथमहाँ * लड्नू कसोरी भन ?॥६३
यो सेनापतिको सुनीकन सवाल् * अत्यन्त कोपै गरी ।
उत्तर् गर्छन योग्य फेरि लवले * लडनै अगाडी सरी ॥

कुल्को केहि जरूर छैन अहिले * नाऊँ त लव् मन्दछन् ।
पैदल् ता बनि हाल्दछौ तिमि पनी * धीरज् धरे एकछिन्॥६४॥
येती बात कहेर फेरि लवले * टङ्कार् धनूको गरी ।
सीता वाल्मिकि फेरि कुश्कन पनी * मनूले नमस्कार गरी ॥
बाण् वर्षा रिपुसैन्यमा गरिदिए * आकाश ढाकीकन ।
ती काटीकन कालजीत विरले * शर्को गरे वर्षण ॥६५॥
ती बाण् टुक् टुक पारि आठ शरले * बीरथ् गराए जब ।
मत्ता हात्तिमहाँ चढेर ति पनी * आएर रण्मा तब ॥
ठूलो रण् लवको र कालजितको * हूँदो भयो दारुण ।
हानाहान पऱ्यो तहाँ दुवइको * देख्तामहाँ भीषण ॥६६॥
आखीर्मा तरवारले ति लवले * त्यो हात्तिको शूँढ ता ।
काटी त्यो गजको चढेर पिठमा * पौंचे सिता-पुत्र ता ॥
सेना-नायकको समाति शिरमा * भैंमा लछारीकन ।
फेरी ती दुइको जमीनतलमै * संग्राम भो दारुण ॥६७॥
बाहू युद्ध गरेर फेरि लवले * कालाग्नि जस्तो तहाँ ।
हात्मा खड्ग लिएर कालजितको * ठोकेर गर्दन्महाँ ॥
दो टुक् पारिदिएर फौजहरु ता * मार्नै सुरैले गरी ।
साम्नेमा लवको सबै पुगिगए * बाण् छोडदै सर्सरी ॥६८॥
ती सैन्येकन बाण वर्षण गरी * सारा गिराईदिए ।
त्यो रण् मा गजको फुटेश शिर ती * मोती अती थुप्रिए ॥
ठूलो बग्न गयो नदी रणमहाँ * हात्ती र घोडा पनि ।
पौडन्थे कछुवा सरी परिपरी * मान् नदी हो भनी॥६९॥

यस्ता रीतसित ध्वस्त पारि लवले * संहार रिपूको गरी ।
आऊलान् कि अरू भनेर लव ता * थीए परीक्षा गरी ॥
उब्रेको क्वहि वीरहेरु पहुँची * शत्रुघ्नका साथमा ।
पारे बिन्ति पराक्रमै जुन गरे * लव्ले समर् मध्यमा ७०
बालकले विर कालजित्कन अहो * मारीदियो लौ भनी ।
यो शत्रुघ्नजिले सुनेर मनमा * आश्चर्य मानी अनि ॥
टोकी ओठ गरेर क्रोध बहुतै * शत्रुघ्नजीले तहाँ ।
फेरी सोधनि गर्दछन् भटकनै * शङ्का हुँदा मन्महाँ ॥७१॥
भ्रम् हो की तिमिहेरुलाइ अथवा * मायावि त्यो बाल हो ।
होला है कसरी ! मरण् मन सबै * त्यो कालजित् वीरको ॥
यो शत्रुघ्नजिको सुनीकन हुकूम् * ती वीर्हरूले तहाँ ।
हात् जोडीकन बिन्ति गर्छन अनी * शत्रुघ्नका सामुमा ॥७२॥
हे नाथ ! भ्रम् क्यहि छैन हामिहरुमा * माया पनी छैन क्यै ।
सेना नायकलाइ आज लवले * मारीदिया निश्चयै ॥
फौजै मारिदियो समस्त अहिले * बालक् न हो यो भनी ।
खेल्चारी लिनु योग्य छैन मनमा * याहाँ हजूर्ले पनि ॥७३॥
यस्तो बात सुनेर वीरहरुको * शत्रुघ्नजीले पनि ।
सोध्नूभो नि सुमन्त्रलाइ कहु लौ * कर्तव्य केही भनी ॥
यस्तो मर्जि सुनेर मन्त्रिजि पनी * शत्रुघ्नका साथमा ।
अर्जी गर्छन नम्र माथ गरि नै * जो फुर्न गो बुद्धिमा ॥७४॥
वाल्मीकी मुनिको यहाँ छ बुझ्नोस् * शत्रुघ्नजी आश्रम ।
क्षत्रीहेरु यहाँ त छैनन भनी * यो निश्चयै गर्छु म ॥

होलान् इन्द्र यि भन्दछू कि त हुनन् * साक्षात् सदाशिव बरु ।
होला ती सँग लड्नलाइ अहिले * आऊन् इ पुष्कलहरु ७५
यो शत्रुघ्नजिले सुनेर अनि ता * सारा फऊजैकन ।
हुकूम् बक्सनुभो तयार बन है * ठूलो गराई मन ॥
पाई झट्ट चलीगयो हुकुम यो * सारा फऊजै तहाँ ।
घुम्थे सिंह सरी भएर रणमा * सीता कुमारै जहाँ॥७६॥
बीचैमा लवलाइ पारि खुशिले * सात्बाजि घेरा दिई ।
त्यो फौज्ले जब पक्रने मन गऱ्यो * जित्ने सुरैले गरी ॥
त्यो हुट्टाकन बाण वर्षण गरी * बादल् हटाईकन ।
निक्लेका रवि झैं तहाँ लव भए * अत्यन्त नै शोभन॥७७॥
देखी यो अवशिष्ट फौजहरुले * भाग्ने गरे सुर् जब ।
बालक्का सँगमा म लड्दछु भनी * पुष्कल् पुगे झट् तब ॥
भन्छन् हे लवजी ! म दिन्छु रथ एक् * यस्मा सवारी गरी ॥
मेरो साथ लडनोस यस् बखतमा * जित्ने इरादा धरी ॥७८॥
यस्तो पुष्कलको सुनिसकि वचन् * खुब् धैर्य मन्मा लिई ।
भन्छन् योग्य वचन् तहाँ लवजिले * केही मसाला दिई ॥
भन्नूभो जुन बात सो ठिक थियो * राजपुत्र ! ब्राह्मण भए ।
लीनेथें तर क्यारुँ ! क्षत्रिय हुँदा * शङ्कित् म हूँदो भएँ॥७९
मेरो धर्म त दान दीनु छ सधैं * सक्तैन है लीनु ता ।
सक्नाहै बरु दिन्छु योग्य खुशिले * राजपुत्र ! ऐले म ता ॥
पैदल् यो छ रथी म लडनु कसरी ! * भन्ने भए चित्तमा ।
पार्नेछू विरथी तपाइँकन ता * रजपुत्र ! क्षणभर्महाँ ८०

यस्तो वाक्य सुनेर पुष्कलजिले * हात्मा लिएथे धनु ।
टुक्रा पारिदिए तहाँ लवजिले * येती छिटो के भनुँ ॥
पुष्कल्ले अरको लिएर धनुमा * ताँदो त तान्दै थिए ।
त्यै वेला लवले छरेर अति वाण् * रथ् चूर्ण नै पार्दिए ॥८१॥
पुष्कल्जी भइ पैदले भिडिगए * साम्ने लवैका जब ।
ठूलो युद्ध तहाँ भयो ति दुइको * आश्चर्यकारी तब ॥
भन्छन् झट् लवलाल पुष्कलजिले * वीराग्रय धन्यै छउ ।
तिम्रो माथ गिराउनेछु मइले * ई बाणका चोट् सहू ८२
येती बात कहेर पुष्कलजिले * बाणको गरी वर्षण ।
फुर्तीले शर पञ्जरै रचि तहाँ * लवको गरे बन्धन ॥
भन्छन् त्यै शर मध्यबाट लवले * हे वीर पुष्कल् अब ।
मूर्छा पारिदिनेछु हेर तिमिले * ताकत् लगाऊ सब ॥८३॥
यस्तो बात कहेर चट्ट लवल * काटेर शर्पञ्जर ।
पुष्कल्माथि प्रहार झट् गरिदिए * अत्यन्त उज्ज्वल् शर ॥
छाती फोड्न तयार त्यो शरकनै * पुष्कल्जिले बाणले ।
टुक् टुक् पारिदिए रणस्थल्महाँ * अत्यन्त नै क्रोधले ॥८४॥
निष्फल् बाण गरीदिए र लवजी * चौपट्ट क्रुद्धै भई ।
पुष्कल्माथि प्रहार पो गरिदिए * शर् एक् भयङ्कर् लिई ॥
त्यो बाण् घुस्न गयो र छाति बिचमा * पुष्कल्जिको वेगले ।
मूर्छा भैकन धर्तिमा गरिदिए * हाहा गर्‍यो सैन्यले ॥८५॥
त्यो देखी हनुमानले तिनिकनै * बोकेर शत्रुघ्नको ।
जिम्मा लाइदिए समरबिचमहाँ * बातचित गरी दैन्यको ॥

देखी पुष्कललाइ मूर्छित तहाँ * शत्रुघ्नजीले पनि ।
क्रुद्ध भैकन भन्नुभो नि हनुमान् ! * लौ जाउ लड्नै भनी ॥८६
पौंचे शाल्मिकिको लिएर रुख एक् * संग्राममा मारुति ।
ठोके झट् लवलाइ तेहि रुखले * ताकत् भएभर् जति ॥
काटे बाण प्रहार् गरेर लवले * यै रीतले जे जति ।
फ्याँके मारुतिले सबै लवजिले * काटे भनूँ सो कति ॥८७॥
त्यो देखीकन क्रुद्ध भै तब अती * फेरी हनूमान्‌जिले ।
पुच्छर्ले लवलाइ बेहि रणमा * तान्दा भए कोपले ॥
मन्मा केहि गवड् गरेर लवले * मुड्की उठाईकन ।
ठोके पुच्छरमा र खुब् रिस गरी * खुल्दो भयो बन्धन ॥८८॥
थाले बाण प्रहार गर्न लवले * फेरी अती रुष्ट भै ।
सारा अङ्ग छिया छिया हुन गयो * थीएन है बाँकि क्वै ॥
साह्रै पीर भयो र बाँचनुपर्‍यो * छल् छाम केही गरी ।
भन्ने येहि विचारले त हनुमान् * मूर्छा परे त्यै घरी ॥८९॥
छल्ले मूर्छित मारुतीकन तहाँ * थाहा नपाईकन ।
हाहाकार् सब सैन्यले गरिदिए * ठूलो गरी क्रन्दन ॥
यो शत्रुघ्नजिले सुनेर मनमा * अत्यन्त क्रोधै गरी ।
आफै लड्छु भनेर पालनुभयो * रणमा अगाडी सरी ॥९०
देखी राम सरी ति बालककनै * शत्रुघ्नजीले पनि ।
गर्नूभो मनमा गवड् कउन हो * रामका स्वरूपको भनी ॥
फेरी निश्चय गर्नुभो सुत त हो * पक्का सिताको भनी ।
ऐले जित्न सकिन्न यसकन यसै * हामीहरूले त नि ॥९१

यस्तो चटट विचार् गरेर मनमा * शत्रुघ्नजीले पनि ।
सोध्नुभो लवलाइ क्यान तिमिले * यो सैन्य मान्यौ भनी ॥
माता तिम्रि कऊन जानकिजि हुन् * की नाम हो फेर् कुन ।
सो सुन्नै अभिलाष गर्छु मइले * तिम्ले यथार्थै भन ॥९२॥
यस्तो बात सुनेर फेरि लवले * भन्छन् अगाड़ी सरी ।
आमा बाबु कुलै समेत तिमिले * के सोद्छौ यो घरी ॥
ताकत् बाहुमहाँ भए हुँदि यहाँ * मेरा सँगैमा लड ।
सक्तैनौ ! गिरनू पऱ्यो नि लवको * पाऊमहाँतु ड्बुड़॥९३॥
मै हूँ वीर भनेर सेखि छ त लौ * मेरा अगाडी सरी ।
युद्धैमा विजयी बनेर हय यो * फर्काउ लौ यो घरी ॥
येती बात कहेर चाप कसमा * लीएर बाण वर्षण ।
झट् शत्रुघ्न उपर् गरेर लवले * ठूलो गरे गर्जन॥९४॥
ती बाणले रविमण्डलैकन पनी * ढाकेर त्यो देखदा ।
श्रीशत्रुघ्नजिले धनु लिनुभयो * जो थ्यो सदा सर्वदा ॥
ती वाण् टुकटुक पारि काटनुभयो * शत्रुघ्नजीले पनि ।
त्यो देखी अति क्रुद्ध नै लव भए *काट्यो सबै बाण् भनी॥९५
वाण्को वर्षणबाट चटट लवले * शत्रुघ्नजीले धनु ।
पारे दो टुक पक्कनै ठिक थिए * शत्रुघ्न अर्को धनु ॥
तेत्तीमा रथ चूर्ण पारि करको * ट्वाक्कै गिराए धनु ।
देख्नेले अधिकै गरे नि लवको * तारीफ सो के भनूँ॥९६॥
फेर् अर्को रथमा चढेर रणमा * शत्रुघ्न आए जब ।
मानू फुल्ल पलाश पो बनिगए * वाण लागनाले जब ॥

दश् वाण् क्रुद्ध भएर छोडनु भयो * शत्रुघ्नजीले पानि ।
टुक् टुक् पारिदिए तहाँ लवजिले * साम्नेमहाँ छन्छनि॥९७॥
आखिर्मा लवले लिएर शर एक् * ठिक् अर्धचन्द्रै सरी ।
श्रीशत्रुघ्नजिका त छातिबिचमा * छाडीदिए बल् गरी ॥
त्यो वाण् झट्हृदयैमहाँ घुसिदिदा * शत्रुघ्न ता मूर्छित ।
ह्नूभो र फऊज भागि कुदिगो * आफ्नू चिताई हित ॥९८॥
त्यो देखी सुरथादि भूपहरु ता * दाखिल् भएथे जब ।
इ सबको सँग लड्नलाइ लव ता * तैयार भैगे तब ॥
नाना अस्त्र प्रहार गर्न सबले * लवमाथि थाले अनि ।
दश् दश् वाण लवले सबैकन तहाँ * छोडे म जित्छू भनी ॥९९
ती वाण्ले कहि मूर्छितै हुन गए * भागे कुनै बेपता ।
श्रीशत्रुघ्नजिको पनी खुल्तिगयो * मूर्छा तुरुन्तै यता ॥
फर्की श्रीलवका पुगेर नगिचै * शत्रुघ्नजीले पनि ।
मूर्छा पारिदियौ मलाइ तिमिले * क्या धन्य वीर् छौ भनी १२००
एक्बाजी तिमिले पनी गर सहन् * बाण् एक मेरो अब ।
यो शत्रुघ्नजिले कहेर भयभर् * ताकत् लगाई सब ॥
कालानल् सरि बाण छोडनुभयो * लवका उपर्मा जब ।
त्यो देखीकन संम्झदा पनि भए * कुशलाइ लवले तब॥१॥
त्यो बाण् बज्रन गो र छाति-बिचमा * मूर्छा भए जब् लव ।
तिन्का साथिहरु डराइकन ता * गर्दा गए खल्बल ॥
मूर्छित् तब् लवलाइ राखि रथमा * शत्रुघ्न खुशी भई ।
फर्के सैन्य जहाँ थियो हय लिई * ठूलो विजेता बनी ॥२॥

साथी जो लवका थिए उनिहरू * पौंचेर सीताकहाँ ।
हालत् सब् लवको गरे वरणनै * जो जो भएथ्यो तहाँ ॥
त्यो सुन्दा मनमा परी पिर अति * श्री जानकीजी पनि ।
रोदन् गर्नु भयो ठुलो स्वर गरी * के हुन्छ ऐले भनी ॥३॥
भन्नू हुन्छ तहाँ रहेछ नृपती * कस्तो अधर्मी कुन ।
बालक् साथ लडेर शर्म नलिई * गर्दो भयो यो खुन ॥
बाबू लव् तिमिले पनी हय हन्यौ * तेस्ता अधंको किन ।
तेस्तो ख्याल नाराखि क्यान रणमा * तेसै गयौ हुम्मिन ॥४॥
बालक्छौ तिमि ता उनी युवक छन् * एक्ला तिमी घेर् उनी ।
रथ्हीन् छौ तिमि ता रथी उनिहरू * यत्रो फरक्मा पनि ॥
यस्तो भूप रहेछ कौन अधमै * यो बालकै साथमा ।
देखी देखि लडेछ आज यसरी * कीर्ती गरी बेकमा ॥५॥
रामले त्यागनु भो तथापि म रहे * तिम्रो गरी आश्रय ।
ऐले छोडि कहाँ गयौ मकन लौ * बाबू ! बनी निर्दय ॥
देऊ झट्ट मलाइ दर्शन यहाँ * छोडेर संग्राम्कन ।
जाओस् त्यो नृपती पनी खुशि भई * त्यस्लाइ रोक्नू किन ॥६॥
ऐले पासमहाँ भए हृदि यहाँ * तिम्रै त दाज्यू कुश ।
दुश्मन्लाइ जितेर क्षणभरमहाँ * मैलाइ गर्थे खुश ॥
क्यारूँ ! उज्जइनी पुगेर ति पनी * पूजी महाकाल्कन ।
फर्कैनन् अझतक् कसो हुन गयो * कारण पर्‍यो लौ कुन॥७॥
सीताजी यसरी विलाप गरदै * रूँदै थिइन् पो जहाँ ।
आए झट् कुशजी पनी गरिसकी * कर्तव्य आफ्नु तहाँ ॥

देखी जानकिलाइ विह्वल तहाँ * सोधे कुशैले पनि ।
मेरो ज्यान खड़ा छँदै हजुरमा * शोक् पर्न गो कुन् भनी ८
यस्तो बात सुनेर फेरि कुशको * श्रीजानकीले पनि ।
भन्नूभो सुन बाबु ! कोहि नृपती * आएछ साह्रै खुनी ॥
आफ्ना साथिहरू लिएर लव ता * खेल्दै थियो रे उहाँ ।
छोडेको त्यहि भूपले हय पनी * आएछ घुम्दै तहाँ ॥९॥
त्यस्को बाँचि ललाटपट्ट लवले * पक्रेछ घोड़ा जब ।
घोडा रक्षकहेरुका सँग ठुलो * संग्राम् भयो रे तब ॥
सैन्यैलाइ जित्यो भनेर लवले * आएछ राजा बली ।
त्यस्ले मूर्च्छित पारि त्यो लवकनै * रथमा लग्यो रे छली॥१०॥
बाबू ! येहि सुनेर दुःखित म छू * आयौ तिमी वक्तमा ।
वैरीलाइ जितेर भाइकन लौ * लीएर आउ यहाँ ॥
सीताको वचनै सुनीकन तहाँ * भन्छन् कुशैले पनि ।
हे मातर् ! अब जान्नुहोस् लवकनै * ल्यायो कुशैले भनी॥११॥
चाहे रणबिच खाश शङ्कर हऊन् * कोही हऊन् तापनि ।
जीती भाइ सँगै लिएर फिरुँला * ठूलो लडाकी बनी ॥
भाईलाइ लिएर फिर्छु म त लौ * शस्त्रास्त्रहेरु सब ।
सौंपी आज मलाइ बक्सनुहओस् * मातर्!शुभाशीष् अब १२
अर्जी यो कुशको सुनीकन तहाँ * श्रीजानकीले पनि ।
दीई शस्त्रहरू भए सुविजयी * भन्नूभयो यो पनि ॥
आमालाइ गरी प्रमाण कुश ता * पौंचे लवै थ्या जहाँ ।
देखी अन्तक तुल्य तीकन सबै * सैन्यै डरायो तहाँ ॥१३॥

आए दाजु भनी खुपै हरषले * रणबाट उम्कीकन ।
दाजू साथ गए तहाँ लव पनी * पाएर आश्वासन ॥
वाणको वृष्टि गरे दुवै जब मिली * शत्रुघ्नका सैन्यमा ।
हाहाकार भयो र भिड्न दुइको * आएन कै सामुमा ॥१४॥
यो देखीकन युक्ति केहि नचली * शत्रुघ्न रणमा बसी ।
आफै जानुभयो जहाँ कुश थिए * तैयार कम्मर् कसी ॥
देखी ती कुशलाइ राम सरिका * आकार शीलमा पनि ।
झट् शत्रुघ्नजिले सुध्यानुभयो * बाबू! कउन् हौ भनी ॥१५॥
देख्छू है लवको सरी म अनुहार् * तिम्रा कउन् हुन् पिता ।
आमा फेरि कऊन हुन् भन सबै * चाहन्छु सुन्नै म ता ॥
यो शत्रुघ्नजिको सुनीकन वचन् * भन्छन् ति कुशले पनि ।
आमालाइ म जान्दछू फगत है * नाऊँ सिता हो भनी ॥१६॥
हाम्रो जन्म भयो तपोवनमहाँ * श्री वाल्मिकीकै नृप !
बाल्मीकी मुनिका कृपा बसदछौं * आनन्द मानी खुप ॥
हाम्रो लव् कुश नाम राखि मुनिले * सारा धनुर्वेद् पनि ।
शिक्षा गर्नुभयो बनून् भुवनमा * दुर्जेय बालक् भनी ॥१७॥
को हौ हे विर अश्व क्यान यसरी * छोड्यौ कहाँ हो घर ।
बर्कत् पुग्छ भने ठुलो मन गरी * रणमा अगाडी सर ॥
यस्तो बात सुनेर ती दुइकनै * रामका कुमार् हुन् भनी ।
जानो हातमहाँ धनू लिनुभयो * शत्रुघ्नजीले पनि ॥१८॥
छोडे वाण अनगिन्ति कुश् उपरमा * शत्रुघ्नजीले जब ।
टुक्टुक् पारिदिए तहाँ क्षणमहाँ * फेरी कुशैले तब ॥

जो जो अस्त्र प्रहार् गरे कुशजिले ✽ त्यस्को विरोधी अनि ।
छोडे अस्त्र ठूलो गरी गवडले ✽ शत्रुघ्नजीले पनि ॥१९॥
आखीरमा कुशले अती रिस गरी ✽ नारायणास्त्रै जब ।
छोडे तै तकलीफ् दिएन उसले ✽ शत्रुघ्नलाई तब ॥
क्याबात् वीर भनेर तारिफ गरी ✽ भन्छन् सिता-पुत्रले ।
श्रीशत्रुघ्नजिलाइ त्यो समरमा ✽ जागेर नै कोपले ॥२०॥
मूर्छित् तीन् शरले तिमीकन यहाँ ✽ पारीनँ मैले भने ।
ठूलो पातकिको त जौन छ गती ✽ सोही छु मैले लिने ॥
यस्तो बात कहेर चट्ट कुशले ✽ छोडे भयङ्कर् शर ।
त्यो शत्रुघ्नजिले त काटनुभयो ✽ केही नमानी डर ॥२१॥
अर्को बाण प्रहार् गरे कुशजिले ✽ कालानलै-माफिक ।
त्यस्लाई पनि रामकै गरि स्मरण् ✽ पारीदिए टुक्टुक ॥
फेरी क्रुद्ध अती भएर कुशले ✽ तेस्रो शरै हातमा ।
लीई मातृचरण् स्मरण् गरि तहाँ ✽ छोडीदिए वैरिमा ॥२२॥
त्यस्लाई पनि काटनै सुर गरी ✽ शत्रुघ्न लड्दै थिए ।
लाग्यो त्यो शर छातिमा र सबका ✽ साम्ने बिहोश् भै लडे ॥
त्यो देखीकन लड्नलाइ कुशका ✽ साम्नु सुरथ्जी गए ।
मूर्छा खुल्न गयो र पुष्कल पनी ✽ सब्कै अगाडी परे ॥२३॥
पर्दो भो कुशको सुरथ्सित तहाँ ✽ संग्राम ठूलो अति ।
छोडे अस्त्र अनेक् दुवै ति विरले ✽ नाउँ म लेखूँ कति ॥
देखी दुर्जय ती सुरथ् नृपकनै ✽ कुशले गवड क्यै गरी ।
कालो सर्प समान एक् शर तहाँ ✽ छाडीदिए तेस घरि ॥२४॥

त्यो बाण्लाइ गिराउनाकन ठुलो * गर्दैं सुरथ्ले सुर ।
लाग्यो बाण र मूर्छित भइ लडे * राजा सुरथ् बेसुर ॥
यो देखी हनुमान तत्पर भए * देखी हनूमानन्कन ।
हाँसे दिल्लगि संभि भट्ट कुशजी * थाले नि हाँकै दिन॥ २५
यो सुन्दा रघुनाथका इ सुत हुन् * भन्ने गरी निश्चय ।
दौडे हात विषे लिएर रुख एक् * लड्नै गरेरै जय ॥
त्यो देखी शर तीन छोड़ि कुशले * लाईदिएथे जब ।
ठोके फेर् हनुमानले त रुखले * कुश्का उपर्मा तब॥ २६॥
त्यस्को चोट सहेर फेरि कुशले * संहार गर्छू भनी ।
संहारास्त्र प्रहार भट् गरिदिए * देखी हनूमान् पनि ॥
ध्यानै श्रीरघुनाथकै मनमहाँ * गर्दैं थिए तत्क्षण ।
अस्त्रै वज्रन गो र छातिबिचमा * मूर्छा परे भीषण ॥ २७॥
त्यो देखी सब सैन्यलाइ कुशले * हाहा गराए अनि ।
सुग्रीव्जी तब लड्न हाजिर भए * जीतेर छोड्छू भनी ॥
आएका रुख हातमा लिइ तहाँ * देखेर सुग्रीव्कन ।
त्यो रूख टुक्टुक पार्दिए कुशजिले * शर्को गरी वर्षण॥ २८॥
साह्रै क्रुद्ध भएर सुग्रिवजिले * पाडाड ली हातमा ।
धेरै तोड गरी प्रहार् गरिदिए * कुश्कै तहाँ माथमा ॥
त्यो देखी कुशले पनी शर छरी * खर्चेर सब् बर्कत ।
धूलो भैं तब चूर्ण पो गरिदिए * सम्पूर्ण त्यो पर्वत॥ २९॥
सुग्रीव्जी पनि क्रुद्ध भैकन तहाँ * पक्रेर अर्को रुख ।
आएथे कुशको अगाडि जब ता * देखाउँदै पौरुष ॥

त्यो देखी करमा लिएर कुशले * एक् वारुणास्त्रै कन ।
छोडेथे जब सुग्रीवैकन तहाँ * बाँधीदिया फन्फन ॥३०

बाँधीए अब सुग्रिवै पनि भनी * शत्रुघ्नको फौज ता ।
जोगाऊँ बरु जिन्दगी भनि तहाँ * हूँदो भयो बेपता ॥
पुष्कल् अङ्गद आदि वीरकन ता * जीतेर फेरी लव ।
आए खूब प्रसन्न चित्त गरदै * कुशका नगीचै तब ॥३१

दाज्यू ! जितें सहजमै रिपुवर्ग सारा ।
हूँदामहाँ हजुरकै त प्रताप-धारा ॥
भैगो विफल् सकल यो रिपुको प्रयत्न ।
झीकेर ल्याउँ कि ! गई नृपका सुरत्न ॥३२॥

यस्तो सुनेर विनती लवको कुशैले ।
आज्ञा दिए गर भनी तब ता खुशीले ॥
श्रीपेचमा जड़ित जो नृपका तमाम ।
चीनो झिके लवजिले खुब राख्न नाम ॥३३॥

पक्रेर वायु-सुतको पुछरै लवैले ।
दाजैज्यु ! लान्छु यसलाइ त आज मैले ॥
जम्मा भएर मुनिको सुतका सँगैमा ।
खेलाउँला म यसलाइ बडो मगन्मा ॥३४॥

यस्तो सुनेर लवको कुशले सवाल ।
भन्दा भए दिल पनी गरदै बहाल ॥
लै जान्छु मै पनि त लौ यसलाइ फेरि ।
यस्तो भनी तब त सुग्रिवलाइ हेरी ॥३५॥

कुशले पनी पुछर सुग्रिवको समाती ।
आश्रम् तरफ् चलि गएर बढाइ छाती ॥
भन्छन् नि सुग्रिव सँगै हनुमान वीर ।
बाटैमहाँ वचन केहि बनेर धीर ॥३६॥
हे वानरेन्द्र ! इ दुवै रघुनाथपुत्र ।
हून् है गरे रणविषे पनि यत्र-तत्र ॥
येती गरेर पनि मन् नबुझेर फेरि ।
छन् है तयार घर लान नलाइ देरी ॥३७॥
लङ्कामहाँ गइ गरैं पुरुषार्थ धेर ।
थाहा छ जानकिकनै उहि हो भनेर ॥
देखेर यो मकन बालक-पाश-बद्ध ।
हाँस्निन् सिता जब त खुब् भइ रद्द-रद्द ॥३८॥
बाँच्नू कसोरि ! मइले त्यहि औसरैमा ।
यै बातको फिकिर लागदछ है मनैमा ॥
येती सुनेर हनुमानजिको विचार ।
सुग्रीव भन्छन दिईकन अश्रुधार ॥३९॥
मेरो थियो मनविषे जुन बात हेर ।
हे अञ्जनेय ! तिमिले पनि त्यौ कह्यौ र ॥
शोकाग्निको प्रबल ताप बढ्यो अहीले ।
प्राण् त्यागनै उचित ठान्दछु यो मईले ॥४०॥
गर्दैं थिए ति दुइ वानर एहि बात ।
आश्रममहाँ पुगि गएर बिदेहजा त ॥

गर्नुभयो लवकुशैकन अङ्कमाल ।
जितबाजिको सुनि खुशी भइ बेश हाल ॥४१॥
सीताजिले ति दुइ वानरलाइ देखी ।
खेलाउना सरि तहाँ सब छोडि सेखी ॥
आफू लुकेर सुतलाइ बोलाउनुभो ।
बाबू भए अनुचित् कयहि आज सूनो ॥४२॥
ई वानरेन्द्र विरलाई अकार्यमाहाँ ।
ल्यायौ अहो! किन उसै तिमिहेल याहाँ ॥
देखे भने यदि तिनीहरूले मलाई ।
गर्नन् अवश्य बुझ अर्पण प्राणलाई ॥४३॥
वीरेन्द्र! हुन् यिनि उनै हनुमान वीर ।
सुग्रीव हुन् यिनि उनै रणकर्म धीर ॥
कुन् कारणै परन गो र समाति ल्यायौ ।
हे बाबु हो! सकल बात बताइद्यौ लौ ॥४४॥
येती सुनेर लव भन्छन हात जोड़ी ।
सीताजिको सँग तहाँ सब बात फोरी ॥
मूमा रहेछ कहि एक नृपाल राम ।
त्यस्ले बढाउँछु भनीकन आफ्नु नाम ॥४५॥
यज्ञै म गर्दछु भनीकन अश्वलाई ।
छोडोदिएछ पछि हिड्न खटाइ भाई ॥
त्यो अश्वको शिर उपर् जुन स्वर्णपत्र ।
थीयो म हेर्दछु भनीकन भै विचित्र ॥४६॥

बाँचेर त्यो त्यसमहाँ ज्युन बात तेही।
मातर् म भन्छु सुनि बक्सनुपर्छ सोही॥
"क्षौ चत्रिया सुत कही गर खूप हूप।
नाहीं भने पर शरण् भइ चापचूप ॥४७॥
देखेर यो मकन उठ्न गयो र रीस।
पक्के हयैकन पनी लिइ घेर खीश॥
जीतीलिए सकल वीरकनै कुशैले।
जित्नै सकेन उनिलाइ तहाँ कसैले ॥४८॥
शत्रुघ्नको र अनि पुष्कल वीरको यो।
ल्यएँ म ता खुशि भई मुकुटै दुवैको॥
दाजैज्युलाइ भनि अश्व समाति ल्याएँ।
खेलवाड गर्न भनि बन्दर ल्याइहालें ॥४९॥
यस्तो सुनीकन ति पुत्रकनै सिताले।
भन्नुभयो वचन यो अति खिन्नताले॥
हे बाबुहो! अनुचितै हुन गो अहीले।
के देख्नुपर्दछ र हो अफसम्म मैले ॥५०॥
मारीदियौ विर उसै रणमा अगिन्ती।
ई बाबुकै हुन भनी पकडेर ल्यायौ॥
यो यज्ञको हय पनी नलिएर गिन्ती।
ल्याएर वानरकनै अफ लाज पऱ्यौ ॥५१॥
घोडा र वानरकनै लगि सौंपिएर।
शत्रुघ्नका पर शरण् विनयी बनेर॥

यो चालको जननिको सुनि चट्ट मर्जी ।
जोडेर हात गरछन् सुतहेरु अर्जी ॥५२॥
यो क्षत्रिको धरम हो गुरुले कहेको ।
हुन् लौ पिते छइन तैपनि बिग्रिएको ॥
छोरा र बाबु गुरु शिष्य पनी सममर्मा ।
लड्छन् स्वधर्म सममझीकन बेखबर्मा ॥५३॥
तस्मात् हुँदा हुकुम यो अहिले हजूर्को ।
फिर्ता सबै गरदछौं नलिएर झर्को ॥
सीताजिका हजुरमा यति बिन्ति पारी ।
फर्के रणस्थलमहाँ भइ खुब् तयारी ॥५४॥
सीताजिले तब चरण रघुनाथजीको ।
संझेर मण्डल त हेर्नुभयो रवीको ॥
श्रीरामकै सतमहाँ म रहेकि छू ता ।
हे सूर्यदेव ! अहिले त पुगोस या ता ॥५५॥
संग्राममा जति जती लवकुश्हरूले ।
श्रीरामको फउज नाश गरे अहीले ॥
जो फेरि मूर्छित हुनन् तिनिहेरु हाल ।
ब्यूँझी उठून् दिल पनी गरदै बहाल ॥५६॥
यो प्रार्थना जब त गर्नुभयो सिताले ।
शत्रुघ्न सैन्यहरू-साथ उठे मजाले ॥
देखेर अश्वकन चट्ट रणाङ्गणैमा ।
त्यो सैन्यलाइ पनि जीवित तत्क्षणैमा ॥५७॥
भन्नूभभो सुमतिका मुखतर्फ हेरी ।

शत्रुघ्नले पनि तहाँ नगरेर देरी ॥
त्यो बालले त हय यो मखपूर्तिलाई ।
छोडीदिएछ र त हर्ष भयो मलाई ॥५८॥
घोड़ा लिई अब त फर्कनुपर्छ ताहाँ ।
पर्खेर हामिकन राम्र हुनुहुन्छ जाहाँ ॥
येती भनेर रथमा भइ झट् सवारी ।
शत्रुघ्न फर्कनुभयो लिइ भारितारी ॥५९॥
भागीरथीकन तरी अघिबाट घोड़ा ।
लाई हिड्यो फउज त्यो बनि एक जोड़ा ॥
शत्रुघ्नजी सुरथ पुष्कल आदि साथ ।
चल्नूभयो रथमहाँ गरि उच्च माथ ॥६०॥
शत्रुघ्नको खबर यो सुनि रामजीले ।
लक्ष्मणजिलाइ लिन भेजनुभो खुशीले ॥
शत्रुघ्नले पनि त लक्ष्मण वीरलाई ।
गर्नू भयो प्रणति माथ अती झुकाई ॥६१॥
शत्रुघ्नले कुशल प्रश्न गरेर धेर ।
श्रीरामका चरणमा तनमन् दिएर ॥
पौंचे जसै सरयुका तटमा खुशीले ।
देख्ता भए मख तहाँ सब फौज्हरूले ॥६२॥
काहीं त मण्डपमहाँ बसि विप्र धेर ।
वेदाध्ययन् गरदथे तन मन् दिएर ॥
काहीं त क्षत्रियहरू पनि मण्डपैमा ।
टङ्कार धेर धनुको गरथे मगन्मा ॥६३॥

ब्राह्मणहरु पनि त भोजन ताहिं गर्थे ।
देखी अनेक् तरहको चिज छक्क पर्थे ॥
त्यो चन्द्रबिम्ब सरि पयासलाइ देखी ।
बोल्थे कहि द्विजहरु खुब राखि सेखी ॥६४॥
ई चन्द्र हुन् कि तमको लिइ त्रास आए ।
यो हैन अम्रित, अजम्मरि पो त खाए ॥
यस्तो सुनेर अरको द्विज बोल्छ फेरि ।
पारेर लाल नयनै मुखतर्फ हेरी ॥६५॥
एक्ला ति चन्द्र हुँद हुन् त सहस्र विप्र ।
पात्रादिमा कसरि पाइँद हुन् विचित्र ॥
यो त्योर कन्दरसपक्क-कमल् तसर्थ ।
होला तिमीहरु बुझे यहि गूढ अर्थ ॥६६॥
क्वै भन्दथे सफल जन्म छ त्तत्रियैको ।
जो भोजनै गरदछन् यहि दिन्दिनैको ॥
यो भाग दानहरु धेर गरेर मात्र ।
पाइन्छ मुश्किल छ है अरुबाट नत्र ॥६७॥
काहीं थियो अधिक तान दिई बजान ।
थीयो कहीं त स्वर सात विचार गान ॥
त्यो चालको तब त मण्डप-मण्डलैमा ।
शत्रुघ्न पौंचनुभयो लिइ हर्ष मन्मा ॥६८॥
शत्रुघ्नलाइ रघुनाथजिले सहर्ष ।
आलिङ्गनै दिनुभयो गरि अश्रुवर्ष ॥
शत्रुघ्नका चरणपङ्कजमा परेर ।

गर्दा भए प्रणति खूब खुशी भएर ॥६९॥
जो जो थिए नृपहरू रघुनाथजीले ।
आलिङ्गनै गरनुभो र अती खुशीले ॥
आई सुमन्त्र प्रणती गरि फेर् उठेर ।
भैगे खडा हुकुम हुन्छ कि क्यै भनेर ॥७०॥
श्रीरामको हुकुम भो सुमते बताऊ ।
को को इ भूपहरु हुन् कुन कुन् छ नाउँ ॥
काहाँ कता पुगन गो हय वेगवाला ।
हूँदा भए कसरि भूपहरू इ हाला ॥७१॥
यो रामचन्द्र प्रभुको सुनि झट् सवाल ।
बिन्ती सुमन्त्र गरछन् गरि दिल् बहाल ॥
थाहा छँदै छ प्रभुलाइ तथापि आज ।
बिन्ती चढाउँ छु सबै म त छोडि लाज ॥७२॥
हूँदा प्रताप प्रभुको हय जौन ठाउँ ।
पर्थें शरण् नृपतिहेरु पढेर नाउँ ॥
घुम्दै पुग्यो हय जसै अहिच्छेत्रमाहाँ ।
आए शरण् परनलाइ सुमद्जि ताहाँ ॥७३॥
कामाक्षिका परमभक्त उनै नृपाल ।
गर्छन् प्रणाम प्रभुको खुशिसाथ हाल ॥
दी बक्सियोस प्रभुले शुभ दृष्टिपात ।
बन्नन् कृतार्थ नृपती पनि आज नाथ ! ॥७४॥
घोड़ा पुग्यो अनि सुबाहु नृपेन्द्रकाहाँ ।
हूँदो भयो सुमदका सँग युद्ध ताहाँ ॥

पुष्कल्जिले सुमदलाइ विहोश् गराई ।
थीए खडा तब सुबाहु भिडेर आई ॥७५॥
तिन्लाइ लात हनुमानजिका मिल्यो र ।
आपान्त भैकन त होश खुलीगयो र ॥
सर्वस्व सौंपि हयरक्षक नै बनेर ।
आए खडा छन प्रणाम् गरछू भनेर ॥७६॥
तहाँपछी हय छुटी अति वेग् लिएर ।
रेवा नदी-बिच डुब्या गजबै गरेर ॥
शत्रुघ्नले त स्वहि योगिनिका कृपाले ।
संमोहनास्त्र तहि हात लगाइहाले ॥७७॥
त्यो अश्व देवपुरमा अनि पौंचदो भो ।
थाहै छ त्यो प्रभुकनै हुनगो तहाँ जो ॥
विद्युत्तमालि वध भो त्यसका पछाडि ।
फेर् सत्यवान नृप आइ मिले अगाडि ॥७८॥
घोडा पुग्यो अनि त कुण्डलपूरमाहाँ ।
राजा सुरथ्सित ठुलो रण भो र ताहाँ ॥
यो युद्ध याद छ सबै प्रभुलाइ हाल ।
बिन्ती म के गरुँ विकाम बिताइ काल ॥७९॥
त्यो देशबाट अनि अश्व छुट्यो र फेरि ।
घुम्दो भयो बहुत देशविषे नटेरी ॥
आश्रम्विषे जब पुग्यो हय वाल्मिकीको ।
आएर बालक कुनै बहुतै ननीको ॥८०॥
त्यो बालको सकल ठीक हजूरकै थ्यो ।

त्यस्को उमेर पनि सोडष वर्षकै थ्यो ॥
पक्र्यो र सोहि विरले हयलाइ चट्ट ।
ती कालजित् विर मरे नि लडी बिझट्ट ॥८१॥
फेर् पुष्कलादि विरहेरु अनेकलाई ।
त्यस् वीरले सहजमै त दियो गिराई ॥
शत्रुघ्नलाइ पनि मूर्छित पारिदियो ।
त्यो बालले हुरमतै सबको त लीयो ॥८२॥
शत्रुघ्नले समरमा जब होश पाए ।
त्यस् वीरलाइ इख राखि जसै गिराई ॥
अर्को उही सकलको विर आइहाल्यो ।
त्यस्ले सबैकन त मूर्छित पारिहाल्यो ॥८३॥
शत्रुघ्न आदि विरका गहना र अस्त्र ।
जो जो थिए चुनिलिएर अमूल्य वस्त्र ॥
सुग्रीव फेरि हनुमान् दुइ वीरलाई ।
आश्रम्महाँ लिइ गए पुछरै समाई ॥८४॥
फर्केर फेरि करुणा धरि फौजलाई ।
ती बालले सहजमै त दिए जिलाई ॥
दोटै ति बन्दर र अश्व समेतलाई ।
ताहाँ रणस्थलविषे त दिए फुकाई ॥८५॥
छुट्कार ती दुवइ बालकबाट पाई ।
आयौं प्रभो नगरि देर हयै समाई ॥
यस्तो क्रमैसित तहाँ वरणन् गरेर ।
ताहाँ सुमन्त्र पनि चूप भई गएर ॥८६॥

श्रीरामले यति सुनी दुइ बाललाई।
मेरै ति हुन् सुत भनी मनमा ठमाई॥
श्रीवाल्मिकीसित त सोधनुभो इ बाल।
को हुन् मुने ! अब त होस्-न सबै हवाल ॥८७॥

यो रामचन्द्र प्रभुको सुनदा सवाल।
वाल्मीकिले भननुभो गरि दिल् बहाल॥
हे नाथ ! याद प्रभुलाइ सबै छ बात।
मर्जी हुँदा गरदछू बरणन् यहाँ त ॥८८॥

हे राम ! खाश प्रभुका सुत हुन् इ वीर।
छन् है दुवै समय-मध्यमहाँ सुवीर॥
जन्मे बढे कसरि यो पनि हर्षसाथ।
सुन्नूपऱ्यो गरछु वर्णन आज नाथ ! ॥८९॥

सौमित्रिले जनकजाकन घोर वन्मा।
छोडे जबै हुकुम लो प्रभुकै निदान्मा॥
रूँदी विदेहतनयाकन झट्ट मैले।
आश्रमविषे लिइगएँ र प्रभो ! दयैले ॥९०॥

देखेर गर्भिणि कुटी रचना गराई।
सीता बसून् तहिं भनेर दिएँ खटाई॥
जन्मे दुवै सुत तहाँ र विदेहजाका।
तेजस्विरूप बल युक्त अती मजाका ॥९१॥

नाउँ त कुश लव भनीकन भन्दिहालें।
फेर् कन्दमूलहरूले यिनिलाइ पालें॥
हुँदा बखत् उपनयन्हरु कर्म सारा।

मैले गरें लिइ श्रुतीहरूकै सहारा ॥९२॥
फेरी षडङ्ग सहितै सब चार वेद ।
शिक्षा गरें नि मइले नलिएर खेद ॥
गन्धर्ववेद–धनुवेदहरू समस्त ।
तिन्ले पढे शस्त्ररहस्य पनी खुलस्त ॥९३॥
मैले अनी सकल शस्त्रहरू दिएर ।
"दुर्जेय लौ वन भनी जब भन्दिएँ र ॥
गङ्गाजिका तटमहाँ धनुवाण लीई ।
फिर्थे सिताजिकन हर्ष अतीव दीई ॥९४॥
उस्ताद गान र बजानमहाँ हुनाले ।
ती दूइले मधुर गान त गर्न थाले ॥
रामायणै पढि हुने सब ज्ञानद्वारा ।
मैले रचें सरल छन्दमहाँ र सारा ॥९५॥
रामायणै जब ति बाल दुवै मिलेर ।
गाऊँदथे स्वर र तान विवेक् गरेर ॥
तेस्मा विमुग्ध भइ पक्षि मृगादि धेर ।
सुन्थे नि चल्न पनि छोडि विवश् भएर ॥९६॥
त्यो हाल् सुनी वरुणले दुइ भाइलाई ।
गाना म सुन्दछु भनेर लगे खुशाई ॥
तिन्को सुधा टपकने सुनि गानतान ।
तृप्ती नभै वरुणले नदिएर जान ॥९७॥
ढीलो गरे किन भनेर म फेरि ताहाँ ।
पौंचें र पूजन गरें र सभक्ति वाहाँ ॥

सोधे अनी वरुणले दुइ भाइलाई ।
को हुन् मुने ! सकल मन्दिनुहोस् मलाई ॥९८॥
यो प्रश्न ती वरुणको सुनि झट्ट मैले ।
जन्मादि वर्णन गरें नि सबै क्रमैले ॥
सीताजिका सुत इ हून भनेर जानी ।
दौलथ् दिएँ खुब ति गायकलाई मानी ॥९९॥
भन्दा भए अनि सिताकन रामजीले ।
त्याग् गर्नु भो किन अनाहक बेसमझले ॥
यस्ती पतिव्रत परायण वीरमाता ।
सीताजिलाइ अवगाल दियौ विधाता ॥१३००॥
छन् शुद्ध जानकि अवश्य भनेर जानी ।
त्यै धोबिकै वचन आदरणीय ठानी ॥
हे रामचन्द्र ! किन त्यागनु पत्निलाई ।
आएन की ? क्यहि विचार हजूरलाई ॥ १ ॥
जस्का चरणकमल ध्यान गरेर मात्र ।
बन्छन् नि पातकिहरु पनि शुद्ध गात्र ॥
तेस्ती विदेहतनयाकन नीच बात ।
पत्त्याइ त्यागन भएन कि ! वज्रपात ॥ २ ॥
हे राघवेन्द्र ! निज प्राणपियारिलाई ।
त्याग्नू हुँदैन अब राखनुपर्छ ल्याई ॥
सारा चराचर जगज्जननी सिताका ।
निन्दकहरू हुन ति भाजन मूर्खताका ॥ ३ ॥
हुँ लोकपाल म पनी सबको नियन्ता ।

सीताजि ग्राह्य छन भन्छु बुझी यियत्ता ॥
सन्देश येति मुनिवर्य ! मतर्फबाट ।
भन्नू भने वरुणले पनि पारि छाँट ॥ ४ ॥
एवं रितीसित अनेक सुरासुरैले ।
गाना सुने इ दुइको अति खुशि मन्ले ॥
प्रीती गरेर सुरले पनि द्रव्य दिन्थे ।
ब्रह्मर्षिबाट वर इष्ट पनी इ लिन्थे ॥ ५ ॥
हे रामचन्द्र ! प्रभुको यहि एक रूप ।
हुँदो भयो नित विकास भएन खूप ॥
गर्छन् प्रजाहरु स्तुति प्रभुको तमाम ।
वैदेहित्याग छ यहाँ अहिले कुनाम ॥ ६ ॥
मेरो वचन् गरि पत्यार ति पुत्र-साथ ।
सीताजिलाइ त झिकाउनुपर्छ नाथ ! ॥
वैदेहि शुद्ध छन भन्दछ लोक सारा ।
शङ्कामहाँ कुन भयो बलवान् सहारा ॥ ७ ॥
यो वाल्मिकी मुनिजिको वचनै सुनेर ।
श्रीराघवेन्द्र प्रभुको मन बुझ्न गो र ॥
लक्ष्मण्‌जिलाइ तब वाल्मिकिको समीप ।
डाकी हुकूम दिनुभो खुब लाइ सीप ॥ ८ ॥
जाऊ सुमन्त्रसित आश्रममा मुनीको ।
भाई ! बताउ सब बात बनेर नीको ॥
ल्यायौ भने हरकिसिम्‌सित पुत्र-साथ ।
वैदेहिलाइ म हुनेछु नि उच्च साथ ॥ ९ ॥

यस्तो सुनेर रघुनाथजिको त म मर्जी ।
लक्ष्मणजिले पनि गरे तब सानु अर्जी ॥
हे नाथ ! जान्छु तर जानकि ता मद्वारा ।
छन् पो कि ! रुष्ट अधिकै गमि दोष सारा ॥१०॥
येती कही दुइ मुनी र अनी सुमन्त्र ।
सङ्मा लिएर रथमा चढि भै स्वतन्त्र ॥
लक्ष्मणजि आश्रमविषे पुगि ओर्लिएर ।
सीताजिका चरणमा तब पर्निएर ॥११॥
वैदेहिले झट उठाइ सुध्याउनूभो ।
हे बाबु लक्ष्मण ! नरोउ बताउ के भो ॥
के कामले यसरि वन्बिच आज आयौ ?
त्या सुन्नलाइ अति उत्सुक पारिहाल्यौ ॥१२॥
श्रीरामचन्द्र प्रभुको तिमि तन्दुरुस्ती ।
बाबू ! बताउ अब झट्ट हटाउ सुस्ती ॥
कीर्ती सुरक्षित छ की ! अहिले उहाँको ।
मैलाइ जे निमति हो नि बिदा मिलेको ॥१३॥
यै रीतले सकल सासु र बन्धुलाई ।
सोध्नूभयो नि तब जानकिले किट्याई ॥
लक्ष्मणजिले पनि कुशल् रघुनाथजीको ।
पैले भने अनि कहेर सवाल् जतीको ॥१४॥
श्रीराघवेन्द्र प्रभुले त हजूरलाई ।
लीएर आउ भनि भेजनुभो मलाई ॥
भन्नूभयो सब चराचरको नियन्ता ।

खाली अदृष्टि बुझ नाश्य छ भोगद्वारा ॥१५॥
सीते ! तसर्थ तिमि जान उही अदृष्ट ।
हूँदा बली यसरि ! भोग्नुपर्‍यो नि कष्ट ॥
खाली अदृष्ट बुझ नाशतछ भोगद्वारा ।
तिम्ले गर्‍या तब त नाश खपेर सारा ॥१६॥
तस्मात् मलाइ क्यहि दोष नलाइ आज ।
छोरा लिएर तिमि आउ नमान लाज ॥
यस्तो भनेर गहना कपडा अमोल ।
दीएर दासिहरु भेजनुभो अमोल ॥१७॥
सीते ! तसर्थ रथमाथि सबारि होस ।
बस्छू पछाडि म पनी सब राखि होश ॥
हात्तीमहाँ इ दुइ बाल सहर्ष बस्नन् ।
द्रव्यादि लुट्न भनि दुःखि तयार बन्नन् ॥१८॥
यस् छाँटको जब त लक्ष्मणको जिगीर ।
सुन्नूभयो नि तब केहि लिएर पीर ॥
जावैन है म दरबारमहाँ त हेर ।
श्रीरामको भजन गर्छु यहाँ बसेर ॥१९॥
श्रीरामको असल कीर्ती विकाम मैले ।
ताहाँ गई कसरि दूषित पारुँ ऐले ॥
बाबू ! तसर्थ दुइ पुत्र लिएर जाऊ ।
मेरा पनी सकल बात उहाँ सुनाऊ ॥२०॥
सासूहरू सित बताउ गएर मेरो ।
बाबू ! प्रणाम छ भनेर लगाइ फेरो ॥

भन्नूभयो लव कुशैकन जाउ हेर ।
खूशी गराउ रघुनाथजिलाइ धेर ॥२१॥
सीताजिको यति सुनेर हुकूम ताहाँ ।
गर्दैनथे मन ति बालक जान वाहाँ ॥
वाल्मीकिको वचन लङ्घनदेखि त्रास ।
हूँदा गए ति दुइ बालक यज्ञपास ॥२२॥
वाल्मीकिको चरणपङ्कजमा परेर ।
झट् दण्डवत् प्रणति बालकले गरेर ॥
लक्ष्मणजिले पनि प्रणाम गरेर ताहाँ ।
पौंचे सबैकन लिएर अनी सभामा ॥२३॥
ढोगेर रामकन जानकिको त बात ।
लक्ष्मणजिले जब कहेर जुटाइ हात ॥
मूर्छा परेर रघुनाथजि लोटनूभो ।
ब्यूँझेर तत्क्षणमहाँ अनि फेर् हुकूम् भो ॥२४॥
हे भाइ लक्ष्मण ! तिमी अझ फेरि जाऊ ।
सीताजिलाइ पनि बात इनै सुनाऊ ॥
"सीते ! बसेर वनमा तिमि गर्दछयौ के ।
तिम्रो उपास्य मइँ हूँ यसमा भयो के ॥२५॥
वन्मा म जान्छु भनि खूशि सँगै गएकी ।
लौ आजसम्म तिमि क्यान उहीं रहेकी ॥
पूजा गरेर सब तापसिको यदृच्छा ।
आऊ प्रिये ! बनिसक्यौ तिमि पूर्णितेच्छा ॥२६॥
जस्तोसुकै पति हस्रोस उही छ मान्य ।

स्त्री जातिको छइन देव कदापि अन्य ॥
तीर्थादि-योग-उपवास-जपादि-दान ।
स्त्रीको पती खुशि भए भइगो नि जान ॥२७॥
तस्मात् खुशी गर मलाइ खुरुक्क आई ।
सन्देश येहि भन जानकि देविलाई ॥
यो रामको हुकुमलाइ लिएर फेरि ।
सौमित्र झट् चलिगए नगरेर देरी ॥२८॥
वाल्मीकिको लव कुशैकन त्यै सभामा ।
रामायणै गरन गान खटन् हुँदामा ॥
वीणा बजाइ दुइले जब गान गाए ।
सारा सभासदहरूकन छक्क पारे ॥२९॥
त्यो गानको भुवनभर् फिजियो र तान ।
किन्नर्हरू दङ परे सुनि तेहि गान ॥
देखेर कौशल अती रघुनाजीले ।
लाख्लाख् असर्फि दिनुभो र तहाँ खुशीले ॥३०॥
त्यो देखि वाल्मिकिजिको मुखतर्फ हेरी ।
हाँसी भने ति कुशले नगरेर देरी ॥
हाम्रो मुने! इइन धर्म त दान लीने ।
ऐले इ ठान्छन कि हामिकनै उतार्ने ॥३१॥
हाम्रो निगाह भइ राज्य गरेर भूप ।
लोभ्याउँछन् किन यसोरि! बढेर खूब ॥
येती सुनेर तिनि बालकनै मुनीले ।
भन्नूभयो हुन पिता इ भनी खुशीले ॥३२॥

येती सुनी चरणपङ्कजमा सहर्ष ।
पस्रे र राघवजिको तब अश्रुवर्ष ॥
हुँदा भए र लिइ काखविषे अनूप ।
आनन्द भो रघुपतीकन चट्ट खूप ॥३३॥
लक्ष्मण् पनी पुगि सितासँग धैर्यसाथ ।
विस्तार् गरे खबर त्यो गरि नम्र माथ ॥
लक्ष्मण्जिले अभ्र जिगीर गरेर धेर ।
श्रीजानकी रथमहाँ चढिबक्सियो र ॥३४॥
लीएर लक्ष्मण पुगे जब यज्ञमाहाँ ।
ओर्लेर जानकि पनी खुशिसाथ ताहाँ ॥
श्रीरामका चरणपङ्कजमा परेर ।
वाल्मीकिलाइ त नमस्कृति नै गरेर ॥३५॥
सासू कहाँ पनि गएर हरेकलाई ।
फेर् दण्डवत् गरनुभो नि शिरै झुकाई ॥
लीएर आशिष सबैसित खूब ताहाँ ।
श्रीजानकी परनुभो अति हर्षमाहाँ ॥३६॥
आइन् इ जानकि भनेर अगस्त्यजीले ।
फ्याँक्दीनुभो कनकको प्रतिमा खुशीले ॥
सीता समेत रघुनन्दनलाइ ताहाँ ।
देखेर मग्न परिगे सब हर्षमाहाँ ॥३७॥
श्रीरामले तब वशिष्ठजिलाइ फेरि ।
सोध्नुभयो उस खखत् मुखतर्फ हेरी ॥
गर्नपर्‍यो अब गुरो ! कुन काम मैले ।

आज्ञा हवस् गरि निगाह यहाँ हजूलें ॥३८॥
येती सुनेर अब ब्राह्मणको पुजा नै ।
गर्नूपर्‍यो हजुरले दिइ धेर दानै ॥
आज्ञा वशिष्ठ मुनिको सुनि रामजीले ।
पैले पुजा गरि अगस्त्यजिको खुशीले ॥३९॥
रत्नादि दान दिइ धेर खुशी तुल्याई ।
यस्तै पुजा गरनुभो अरु विप्रलाई ॥
फेर् भूयसी सकल ब्राह्मणलाइ दान ।
लाख् लाख् असर्फि दिनुभो नगरेर मान ॥४०॥
दुःखी दरिद्र जति थे उनिलाइ धेर ।
द्रव्यै दिएर अति खुस गरनूभयो र ॥
फेरी अगस्त्य ऋषिले रघुनाथलाई ।
यो उर्दि पो झट तहाँ दिनुभो सुनाई ॥४१॥
चौसट्ठि भूप गइ सन्निक सर्जुमाहाँ ।
ली स्वर्णपात्र जल ल्याउनुहोस याहाँ ॥
त्यस्ले गराइ भिषेक् हयलाइ फेर ।
सिद्ध्याउनू छ विधिले हवनै गरेर ॥४२॥
येती सुनेर लिइ जानकिलाइ साथ ।
श्रीराम पौंचनुभयो निहुराइ माथ ॥
यस्तै किसिम्सित नृपालहरू अनेक ।
भार्या घटै लिइ पुगे तहिं एक एक ॥४३॥
पौंची वशिष्ठ गुरुले जल मन्त्रनूभो ।
भनौंस स्वर्ण-घटमा अब भन्दिनूभो ॥

ल्याएर तेहि जलले पढि मन्त्र घेर ।
त्यो स्नान् गराउनु भयो र अगस्तिले र ॥४४॥
श्रीरामले तब त हात जुटाइ फेरि ।
घेर् प्रार्थना गरनुभो नगरेर देरी ॥
"हे अश्व ! पातक छुटाइ समस्त हाल ।
यो यज्ञको सकल भार तिमी समाल" ॥४५॥
येती भनेर रघुनाथ सिता दुईले ।
त्यो अश्वलाइ त मुसार्नुभयो खुशीले ॥
मन्त्रेर खड्ग अनि एक अगस्त्यजीले ।
श्रीरामलाइ दिनुभो र उही रितीले ॥४६॥
राम्चन्द्र मारन तयार उसै हुनूभो ।
वर्णन् म गर्दछु अचम्म तहाँ जउन् भो ॥
त्यो अश्व दिव्य धरि रूप थियो अगाडि ।
वीमानमा भइ सवारि जमीन छाडी ॥४७॥
देखेर त्यो सकल विस्मित थ्यो समाज ।
पत्यार केहि यिनलाइ दिलाउँ आज ॥
भन्ने विचार गरि याद हुँदै प्रभूले ।
त्यो दिव्यरूपिकन सोधनुभो खुशीले ॥४८॥
को हौ तिमी कसरि ! यो हय भै रहेथ्यौ ।
ऐले त जान कुनतर्फ तयार नै छौ ॥
यो रामचन्द्र प्रभुको सुनदा सवाल ।
वर्णन् गऱ्यो नि उसले निजको हवाल ॥४९॥
हे नाथ ! ब्राह्मण थिएँ अघि जाह्नवीका ।

तीरमा बसी अति गरें ठगने तरीका ॥
दुर्वास नाम मुनि आइ मलाइ देखी ।
जानेर मर्म मुनिले गरि खूब सेखी ॥५०॥
हे दुष्ट दाम्भिक ! पशू सरि नै रहीछस् ॥
धोका दिएर बहुतै ठगदो रहीछस् ।
तस्मात् तँ जा पशु बनेर रहेस् भनेर ।
उन्ले मलाइ यहि शाप दिंदा भए र ॥५१॥
रोई कराइ मइले जिगिरै गरेर ।
फेर् शापमोचन पनी निजले दिएर ॥
स्पर्शै हुँदा हजुरका करको अहीले ।
यो दिव्य रूप पनि प्राप्त गरें मईले ॥५२॥
येती कहेर तिनबाजि घुमी बिदा ली ।
त्यो दिव्य पूरुष चल्या सब पाप् पखाली ॥
श्रीरामले पनि मुनीहरुका समीप ।
यो प्रश्न झट् गरनुभो नि लगाइ सीप ॥५३॥
घोड़ा गयो अब त कुन् चिज होमुँ मैले ।
यस्को जबाफ दिनुहोस मलाइ ऐले ॥
येती भनेर तब झट्ट वसिष्ठजीले ।
उत्तर् सभा-बिचमहाँ दिनुभो खुशीले ॥५४॥
हे रामचन्द्र ! जुनले मखको सुपूर्ति ।
पूर्णाङ्ग हुन्छ उहि आज म गर्छु अर्जी ॥
कर्पूर ल्याइ त्यहि गर्नु अहोस होम ।
घोताहरूकन समस्त झिकाउँला म ॥५५॥

यस्तो सुनेर रघुनाथ खुशी भएर ।
ल्याओ कपूर भनि आदर दीनुभो र ॥
आयो कपूर तब वशिष्ठजिले खुशीले ।
वेद्को ऋचा पढि हवन् जब गर्न थाले ॥५६॥
आवाहनादि हुनगो र समस्त देव ।
आएर भोजन गरे उहि सर्वमेव ॥
तृप्तै भएर रघुनाथजिको प्रताप ।
कीर्तन् गरी चलिगए सब आफु आफ ॥५७॥
श्रोताहरूकन खुशी गरि विप्रलाई ।
दान्ले सबैकन तहाँ भरिपुर् गराई ॥
श्रोताहरूकन त राज्य पनी दिनूभो ।
तीबाट आशिष पनी बहुतै लिनूभो ॥५८॥
पूर्णाहुती पनि गरेर वशिष्ठजीले ।
स्नान् गर्नु होस् अवभृतै भनदा खुशीले ॥
सीताजिलाइ अघि लाइ सहर्ष राम ।
पाल्नूहुँदा सरयुमा शकि यज्ञकाम ॥५९॥
लागे पछाडि खुशि-साथ अनेक भूप ।
हेरौं न दृश्य भनि हर्ष लिएर खूप ॥
तेस्को पछाडि पुरवासि सबै सहर्ष ।
हिंड्दा भए नि गरनै अति लाज वर्ष ॥६०॥
गाना बजान गरि भाटहरू तमाम ।
चल्थे पछाडि प्रभुकै सब गाइ नाम ॥
श्रीरामचन्द्र पुगि फेर् सरयू नदीमा ।

सीताजिलाइ लिइ पस्नुभयो मगन्मा ॥६१॥
यस्ता किसिम्ससित सबन्धु गरेर स्नान ।
सीताजिलाई लिइ उत्रनुभो महान ॥
पैह्रेर रेशमि लुगा गहना अनेक् तर् ।
फेरी किरटि कटकादि सफा निरन्तर् ॥६२॥
देदीप्यमान धरि रूप खुशी भएर ।
सीताजिलाइ पनि साथमहाँ लिएर ॥
श्रीरामचन्द्र फरकी पुर पालनूभो ।
त्यो दिन् सबैकन तहाँ सुखदाइ नै भो ॥६३॥
यस्तै किसिम्ससित तहाँ हयमेध् तिनौटा ।
सीताजिलाइ सँग राखि गरी अनौठा ॥
श्रीरामले अतुल कीर्ति चलाउनूभो ।
ती पुत्रलाइ पनि साथमहाँ लिनूभो ॥६४॥
अतिशय रघुनाथमा भक्ति बढ्नै गएर ।
मनसुब हयमेधै सुन्न साह्रै भएर ॥
सुननु जति भयो शेष्बाट वात्स्यायनैले ।
उति शुभ अनुवादै गर्दिएँ स्पष्ट मैले ॥१३६५॥

इति श्री कविराज शलिग्राम गौतमकृत अश्वमेध काण्डम् समाप्तम् ।

पुस्तक पाइने ठेगाना—

गोपालचन्द्र,
सर्वहितैषी कम्पनी,
जालपादेवी रोड, वाराणसी ।

सर्वहितैषी कम्पनी
१, ज्यातीन्द्र मोहन एवेन्यू,
कलकत्ता—६

मुद्रक : मदन लाल पुरी
अजय प्रिन्टर्स
कज्जाकपुरा, वाराणसी ।